प्रकाशक
रत्न पुस्तक भण्डार
भोटाहिटी, काठमाडौं,
नेपाल।



*

पहिलोपटक
संवत् २०२५
मूल्य : ३/५०

*

काशीबहादुर श्रेष्ठ
सम्पादक 'उदय'द्वारा
संशोधित

*

मुद्रक :
महादेव प्रसाद,
दीपक प्रेस,
१७।२७२ नदेसर, वाराणसी।

# विषय-प्रवेश

हाम्रो देशमा अनेक चाड-पर्वहरू चलेका छन् । ती चाड-पर्वहरू हाम्रो समाजले अपनाउने विषय भएको हुनाले त्यसमा हाम्रो समाजको समय समयको महत्त्वपूर्ण ऐतिहासिक कुराहरू समावेश हुनु स्वाभाविक छ । तर हाम्रो अन्धपरम्परा र विस्तृत तथ्यपूर्ण इतिहास नै बनिनसकेको हुनाले ती चाड-पर्वहरू केवल रमिताको साधनमात्र बनेका छन् । चाड-पर्वहरू किन मनाइन्छन्, वर्ष-वर्षमा मनाउनुपर्ने चलन किन बनाइयो, इत्यादि विषयमा अधिकाश जनता अपरिचित बनिसकेका छन् । यही कुरालाई ध्यानमा राखेर हाम्रो देशमा सबै पक्षका जनसमाजले मनाउने मुख्य-मुख्य तीसवटाजति चाड-पर्वहरूको विषयमा पाइएसम्म ऐतिहासिक सामानहरूको आधारमा तटस्थ भएर विवेचना गरिएको छ । विशेष गरेर हाम्रो किंवदन्तीबाट उठेको हाम्रो चाडबाडसम्बन्धी अन्धविश्वासलाई हटाउन वस्तुवादी दृष्टिकोणले विचार गरिएको छ । चाडबाडहरूमा सन्निहित भएको ऐतिहासिक कुरा जनसमक्ष ल्याउने दिशामा यो आफ्नै ढङ्गको पहिलो प्रयास भएको हुनाले यसमा उल्लेख भएका सबै कुरा पूर्ण छ भनी भन्न सकिंदैन । किनभने चाड-पर्वहरूको विषयमा विश्लेषण गर्न जति अध्ययनको आवश्यकता छ त्यति अध्ययन हुन सकेको छैन । तथापि यस विषयमा अध्ययन ज्यादै सीमित रहेको छ तापनि पाइएका प्रामाणिक आफ्नै ढङ्गका सामानहरूको वस्तुवादी दृष्टिकोणमा राम्ररी विचार गरिएको छ । यसकारण हाम्रा चाड-पर्वहरू हाम्रो प्राचीन समाजदेखि निकट सम्बन्ध रहेको विषय भएको हुनाले तिनीहरूले अपनाएको धर्म-कर्म, रीति-रिवाज, आचार-विचार र शिक्षा-दीक्षा आदि सामाजिक पक्षका कुराहरू बुझ्न मेरो प्रयास अवश्यमेव उपयोगी हुनेछ भन्ने विश्वास लिइएको छ । पाठकहरूले यस किसिमको मेरो प्रयासलाई रुचाएको खण्डमा यस विषयमा अरू गहन अध्ययन गरी हाम्रा चाड-पर्वहरूको विषयमा अरू विशेष जानकारी हुने ठोस कुराहरू जनसमक्ष राख्दै जानेछु ।

यस ग्रन्थमा समय समयमा गो प. मा प्रकाशित भएका मेरा चाडबाडसम्बन्धी लेखहरूको कुरा पनि परेका छन् । यसकारण यस विषयमा सिलसिलाबद्ध तरिकाले अध्ययन गर्न चाहने जिज्ञासुहरूको लागि यो विशेष उपयोगी हुनेछ ।

महाबौद्ध
२०२४-४-४

—मनवज्र वज्राचार्य

# विषय-सूची



---

# 'घण्टाकर्ण' गठेमंगलको रहस्य

गठेमगलको विषयमा वास्तविक कुराको अध्ययन गर्न सबभन्दा पहिले हामीले आफ्नो परम्परा र हाम्रो आफ्नै इतिहासको क्रममा प्राचीन मल्लकालमा काठमाडौं निवासी जनताको सामाजिक तथा धार्मिक मनो-वृत्तिलाई बुझ्नु अत्यावश्यक छ। हुनत प्राचीन मल्लकालको विषयमा हाम्रा देशका इतिहासकारहरूले राम्ररी अध्ययन गर्न नसकेको अथवा त्यस वेला निर्मित अथाह प्राचीन साहित्यको र अभिलेख आदि पुरातात्त्विक वस्तु-हरूको अनुशीलन हुन बाँकी नै रहेको कुरा त्यस वेलाको अपुरो इतिहासले नै बताउँछ। तथापि त्यस वेलाको मोटामोटी सामाजिक मनोवृत्तिलाई बुझ्न हाम्रो इतिहासमा उल्लिखित केही कुराहरू पनि उपादेय छन्।

लिच्छविकाल पछि हाम्रो देशमा स्पष्ट रूपमा नयाँ परिवर्तन आयो। मानिसहरूको धर्म, कर्म, रीति-रिवाज, आचार-विचार, आदि कुरामा त्यस नयाँ परिवर्तनले ठूलो असर गऱ्यो। परिणामस्वरूप मुख्यतया निगम-मूलक विचारधाराले प्रभावित भएका त्यस वेलाका अधिकाश शिक्षितवर्गको मनोवृत्ति पूर्णतया आगममूलक विचारधारामा परिणत हुन थाले। अर्थात् त्यस वेलाका मानिसहरू शुद्ध वैदिक साहित्यलाईभन्दा तन्त्र-मन्त्र प्रधान विचारधाराले उद्भूत भएका साहित्यको अनुशीलन गर्ने र त्यसमा अधिक आस्था राख्ने भए। यो कुनै काल्पनिक कुरा होइन। यस कुराको प्रमाणका लागि त्यस वेला निर्मित अनेक तान्त्रिक साहित्यहरू र ती साहित्यहरूबाट निस्केका प्राचीन मल्लकालमा नै स्थापना भएका अनेक देव-देवीहरूका

मूर्तिहरू, मन्दिरहरू, चाड-पर्वहरू र पूजाआजाहरू विचारणीय छन्। हाम्रो प्राचीन मल्लकालमा सारिएका तथा मौलिक रूपमा नै लेखिएका अनगिन्ती तान्त्रिक ग्रन्थहरू अद्यापि हाम्रा पुस्तकालयहरूमा सुरक्षित छन्। त्यस्तै केही मूर्तिहरू र चाडबाडहरू पनि त्यस बेलाको सम्झनालाई जीवित बनाउन अद्यापि सुरक्षित नै रहेका छन्। यी ग्रन्थहरूको अवलोकनले तथा विभिन्न साधनामा खडा भएका मूर्तिहरूको र चित्रहरूको दृश्यले एवं पर्व-पर्वमा मनाइने चाडबाडहरूको सास्कृतिक चहलपहलले यो कुरा स्पष्ट हुन आउँछ कि त्यस बेलाका शिक्षित समाजको मनोवृत्ति कस्तो रहेछ।

वास्तवमा हाम्रो वर्षाकालिक चाड, गठेमङ्गल यिनै मनोवृत्तिको उपज हो। जसको आस्था तन्त्रमन्त्रमा रहेको छ। हुनत प्राचीन मल्ल-कालमा लेखिएका ग्रन्थहरूमा गठेमङ्गलको विषयमा वस्तुस्थितिको चर्चा भएको कुरा पढ्न पाएको छैन। किनभने हाम्रो अध्ययन गर्ने तथा गराउने प्रवृत्ति ज्यादै सीमित छ। तर स्थितिमल्लको समयमा मुख्य मुख्य घटना-हरूलाई सकलन गरेर लेखिएको गोपाल वंशावलीमा गठेमङ्गलको चर्चा भएको छ। यसबाट यो कुरा स्पष्ट छ कि यो चाड स्थितिमल्लको समयमा नै परम्पराको रुपमा मानिआएको चाड हो। स्थितिमल्लको समय प्राचीन मल्लकालको अन्तिम समय हो। स्थितिमल्लको शासनकालदेखि नै मध्य मल्लकालको शुरू हुन्छ। यिनै कुराको आधारमा हामी यस चाड-लाई प्राचीन मल्लकालिक तान्त्रिक मनोबृत्तिको उपज हो भनेर भन्न सक्दछौं। किनभने चाडको रूपमा प्रतिवर्ष मनाउने यो प्रणाली लिच्छ-विकालिक हुन सक्दैन, किनभने लिच्छविकालका मानिसहरू तान्त्रिक कुरामा

त्यत्तिको विश्वास गर्दैनन् । यद्यपि मन्त्रौषधि र बलि-होमादिको प्रयोग गर्ने अवस्थालाई लिच्छविकालिक विद्वानहरू पनि स्वीकार गर्दछन् ।

गठेमङ्गलको चाड जुन ढङ्गको तान्त्रिक प्रणालीमा मनाइन्छ यो कुरा ज्यादै रोचक र मार्मिक रहेको छ । वस्तुस्थितिलाई लिएर विचार गर्दा हाम्रो देशमा यस चाडको परम्परा लिच्छविकालिक हुन नसक्ने स्थिति माथि उल्लेख भइसकेको छ तापनि त्यो दिन हाम्रो यहाँ सम्पन्न हुने सांस्कृतिक विधिविधानहरूले दुई हजार पच्चीस सय वर्षपहिले उल्लेख भएका घटनाहरूलाई औंल्याउँछ । जस्तै, आयुर्वेद शास्त्रको आठ अङ्गहरूमा भूत-विद्या पनि अन्तर्भाव भएको छ । अमानुष छुवाछुतबाट हुने विकार-लाई जान्ने र त्यसलाई हटाउने कुरा भूत-विद्याको विषय मानिएको छ । सुश्रुत संहितामा यस विषयलाई लिएर वर्णन गरिएको एक भिन्नै अध्याय छ । सुश्रुत-संहिताको निर्माणकालको विषयमा सबै विवेचकहरूको एक मत हुन नसके तापनि विक्रम सम्वत्भन्दा पहिले लेखिएको हुनुमा मतभेद छैन । सुश्रुतमा उल्लिखित भूत-विद्याको प्रकरणमा आठवटा ग्रहको उल्लेख भएको छ । ती ग्रहहरू प्रकोप हुने समय भिन्ना-भिन्नै बताइएका छन् । त्यसमध्ये चतुर्दशीको दिन पिशाच-ग्रहको प्रकोपकाल मानिएको छ । हाम्रो गठेमङ्गल चाड पनि चतुर्दशीकै दिन मनाउने चलन छ । कुनै मानिस पिशाच-ग्रहबाट उपसृष्ट हुँदा त्यसको विकृत स्वभाव कस्तो हुन्छ यो कुरा पनि त्यसमा राम्ररी उल्लेख गरिएको छ । जस्तै, कुनै मानिस पिशाच-ग्रहबाट आक्रान्त भई मानसिक स्थिति बिग्रेको अवस्थामा जो मनमा लागेको कुरा बोल्ने, फोहरी बन्ने, राती उद्विग्न भएर, रोएर, कराएर हिंड्डुल गर्ने, धेरै-धेरै खाने, अक्सर हात माथि उठाएर हिंड्ने आदि

विकृत स्वभावका हुने हुन्छन् । यी कुराहरूको झलक गठेमङ्गलको चाडमा देखिने घण्टाकर्णको प्रतिरूप धारण गर्ने व्यक्तिको हाव-भावमा अद्यापि देखिन्छ । पाठकहरूले यस विषयमा अलि तटस्थ भएर सोच्नु आवश्यक छ । नरमुण्ड चिह्नलाई धारण गर्ने रूपलाई आजकाल घण्टाकर्णको नाउँले पुकार्ने चलन छ । यो चलन पनि पुरानै देखिन्छ । गोपाल वशावलीमा पनि यसको उल्लेख भएको छ । तर गोपाल वशावलीमाचाहिं गण्ठकर्ण भनी उल्लेख गरेको छ । वास्तवमा गण्ठकर्णबाटै घण्टाकर्ण भन्ने अहिले चलेको छ । नेवारी भाषामा 'ग' शब्दले घण्टालाई बुझाउँछ । जुन 'ग' घण्टकै रूप हो । अब यहाँ यो कुरा विचारणीय छ कि घण्टाकर्ण कुन पिशाच या कुन व्यक्तिको नाउँ हो जसको किंवदन्ती हाम्रो देशमा चलेको छ । रहस्यमय नै बनेको छ । तर भूत-विद्याको भनाइअनुसार पिशाचको कुनै दृश्य-रूप हुँदैन । हाम्रो यहाँ भने गठेमङ्गलको दिन चौबाटोमा घण्टाकर्णको रूप तयार गर्दा नरमुण्डको रूप अंकित भएको चित्र टाँग्ने चलन छ । यसमा हाम्रो एक परम्परा छ । अर्थात् शून्यद्रव्यको पनि, जसको कुनै रूप गोचर छैन, चित्र लेख्ने या मूर्ति बनाउने चलन छ । जस्तै, शून्य आकाशको या आवाजको चित्रण गर्दा या मूर्ति बनाउँदा केवल टाउकाको मात्र चित्रण गर्ने या मूर्ति बनाउने हाम्रो परम्परा छ । जस्तै, हाम्रो देशमा यत्रतत्र देखिने आकाश भैरवको मूर्ति अथवा चित्र । शायद यही परिपाटीलाई अपनाएर उहिलेका मानिस-हरूले घण्टाकर्ण नामक पिशाचको या व्यक्तिको ( जुन अद्यापि रहस्यमय नै रहेको छ ) रूप तयार गरेको हुनुपर्दछ ।

चतुर्दशीको दिन मनाउने यस चाडको परिपाटीलाई लिएर विचार

गर्दा अनेक कुराहरू हामी सोच्न सक्दछौं । जस्तै, कुनै बखत हाम्रो देशमा पिशाच-ग्रहको प्रकोप ज्यादै उग्ररूपले बढ्न लागेको हुन सक्दछ । यस कारण केवल तन्त्रमन्त्रले मात्र निराकरण हुन सक्ने ती ग्रहहरूको कुदृष्टिबाट सदाको लागि उन्मुक्त हुन अवश्यमेव हाम्रा उहिलेका विशेष गरेर प्राचीन मल्लकालका तान्त्रिकहरूले हाम्रो देशमा सामूहिक प्रयास गरेको हुन सक्दछ । किनभने गठेमङ्गलको चाड मनाउने हाम्रो यहाँ जुन परम्परा छ त्यो उपरोक्त कुराको पुष्टिका लागि केही मात्रामा उपयोगी रहेको छ । जस्तै, यो दिन सर्वप्रथम चौबाटोमा घण्टाकर्णलाई ठड्याएर कर असूल गर्ने काम हुन्छ । वास्तवमा यो कर अवश्यमेव तान्त्रिकहरूले उठाएको पिशाच-ग्रहलाई नाश गर्ने विधि-विधानमा आधारित सामूहिक कार्यको सम्पादनका लागि हुनुपर्दछ । किनभने गठेमङ्गलको दिन जुन कर असूल गरिन्छ त्यो केवल त्यही घण्टाकर्णको अन्त्येष्टिको विधि-विधानमा नै खर्च हुन्छ । अर्को कुरा, पिशाच-ग्रहलाई शान्त गर्न आयुर्वेद-शास्त्रको भूत-विद्याअन्तर्गत प्रकरणमा जुन विधि विधानहरू उल्लेख भएका छन् त्यसको धेरै अंश अद्यापि चलेको देखिन्छ । जस्तै, पिशाच-ग्रहशान्तिको लागि आफ्नो कपडा चढाउने विधि उल्लेख भएको छ । हाम्रो यहाँ पनि घण्टाकर्णलाई कपडा चढाउने चलन अद्यापि छ । तर कोही-कोही साधारण कपडामात्र नचढाई त्यस कपडाको राम्रा राम्रा पुतलीहरू बनाई मलाई कुनै भूतको पीडा नहोस् भनेर त्यस पुतलीलाई घण्टाकर्णमा झुण्ड्याउँछन् । भूतलाई मन पर्ने अनेक मास-रक्तादि सहितको बलि दिन्छन् । अनेक वस्तुको धूप दिन्छन् । यी सब कुराहरूबाट हामी यस निष्कर्षमा पुग्न सक्दछौं कि चतुर्दशीको दिन पिशाच-ग्रहको भूतलाई शान्त गर्ने परम्परा ज्यादै पुरानो आर्यसंस्कृति

रहेता पनि हाम्रो देशमा, विशेष गरेर उपत्यकाका प्राचीन वासिन्दाहरूमा मात्र केन्द्रित रहेको श्रावण कृष्ण चतुर्दशीको दिन मनाउने गठेमङ्गलको दिनलाई एक ऐतिहासिक दिनको नाममा लिन सकिन्छ। किनभने कुनै बखत हाम्रो देशमा यस दिन अवश्यमेव ठूलो सामूहिक प्रयास गरिएको स्पष्ट छ। जसको लक्ष्य पिशाच-ग्रहलाई शान्त गर्ने भएको थियो। भारतमा राजनैतिक उत्पीडनले भयभीत रहेका धेरै शैवमार्गी र बौद्धमार्गी तान्त्रिकहरू एकताक हाम्रो देशमा ओइरिन लागेका थिए। त्यो समय प्राचीन मल्ल-काल नै हो। यस कारण यस वेला हाम्रो देशमा तान्त्रिकहरूको ठूलो दब-दबा थियो। सबै तान्त्रिकहरू आफ्नो आफ्नो पुरुषार्थ देखाउन क्रियाशील थिए। यस्तै वेला भूतलाई शान्त गर्न ती तान्त्रिकहरूले कुनै सामूहिक प्रयास गरेको हुनुपर्दछ भन्ने मेरो आन्तरिक अभिध्येय छ। किनभने कुनै पनि तान्त्रिकको भूत-पिशाचलाई शान्त गर्ने काममा नै चिकित्साको दृष्टिले आधारित भएको छ। अन्यथा तथ्यहीन केवल जनश्रुतिको आधारमा मात्र हाम्रो सहज मानव-बुद्धिले विश्वास गर्न सक्दैन। यस प्रकार केही कार्य-कारण भावको रूपरेखामा हामी गठेमङ्गलको विषयमा सोच्न सक्दछौं।

———

# 'नागपञ्चमी'

# हाम्रो संस्कृतिको प्रवाहमा नागको स्थान र स्वरूप

सामान्यतः नाग शब्दले सर्पलाई बुझाउँछ। हाम्रो सांस्कृतिक जीवनमा प्रयुक्त हुने नागको बाहिरी रूप पनि सर्पकै रूपमा देखा परेको छ। तर हाम्रा उहिलेका दार्शनिकहरूको दृष्टिमा नाग जुन रूपमा व्यक्त भएको छ त्यो सर्परूपको भौतिक रूपमा होइन। हाम्रा पूर्वज तत्त्वचिन्तकहरूले उहिलेको परिस्थितिमा व्यावहारिक र रोचक बनाउन पानीलाई संकेत गर्नुपर्ने ठाउँमा नै नागको रूपलाई साकार गरेका छन्। वास्तवमा पानीमा बस्ने विशिष्ट प्राणी नागलाई पानीकै प्रतीक स्वरूप मानिएको छ। हाम्रा चाड-बाड, नाच-गान, कला-कौशल र धर्म-कर्म आदि अनेक सांस्कृतिक पृष्ठभूमिमा जुन नागको रूप, नागको महिमा देखिएको छ त्यो सर्वात्मना पानीको स्वरूप र पानीको कहानीमा नै अन्तर्भाव भएको छ। यो कुरा हाम्रो प्राचीन साहित्यको प्रणालीमा वस्तुस्थितिको यथार्थतामा डुबेर सोचेको खण्डमा हामीले बुझ्न नसक्ने कुरा छैन।

हाम्रो संस्कृतिअनुसार अनन्त आकाश, पृथ्वी र त्यस बीचको ठाउँमा हुने वस्तुको मौलिक प्रतीक स्वरूप प्रायः हाम्रा प्राचीन घर मन्दिरहरूमा तोरण-द्वारको स्थापना भएका हुन्छन्। ती तोरणहरूमा विशेष गरेर प्राचीन तथा मध्य मल्लकालिक तोरणहरूमा सर्पको रूप कुँदिएको हुन्छ। जुन

हाम्रो कलात्मक शैलीको रूपमा अनिवार्य झैं रहेको छ। जिज्ञासा उठ्दछ कि हाम्रा तोरणहरूमा सर्पको रूप किन कुँदिएको हुन्छ। वास्तवमा प्राचीन मल्लकालिक तोरणद्वारहरूको रूपलाई गहिरिएर हेरेको खण्डमा यो कुरा बुझ्न कठिन छैन। किनभने पानीको स्वरूप बादल, अनन्त आकाश र पृथ्वीको बीचमा रहन्छ। यस कारण आकाशको प्रतीक स्वरूप उत्कीर्ण भएको भयानक चेहरा पृथ्वीको प्रतीक स्वरूप राखिएको कलश र त्यसबाट उठेको रंभामय स्तंभ त्यसबीचका हाम्रा तोरणहरू, जुन सर्पको रूप कुँदिएको हुन्छ त्यो बादलको प्रतीक स्वरूप रहने कुरा स्पष्ट छ। तर मध्य मल्लकालिक पौराणिक र तान्त्रिक स्थितिमा अल्मलिएको कलात्मक जटिलताले त्यस वेलाको तोरणहरूमा सर्पको रूप रहे तापनि उपरोक्त कुरामा अलिकति पृथक्जस्तो देखिएको कुरामा पनि हामीले यहाँ ध्यान दिनु आवश्यक छ। किनभने पछिका हाम्रा दार्शनिकहरूले तोरणमा आकाश, पृथ्वी र त्यसबीचको पदार्थलाई संकेत गर्ने प्रथालाई छोडेर हाम्रा पुराणहरूमा उल्लेख भएको सर्प र गरुडको वैर-भावको कथालाई प्रख्यापन गर्ने प्रणाली चलाएको देखिन्छ। या स्थिति तोरणमा ल्याउन जुन प्रेरणा आएको छ त्यसको रहस्य अर्कै छ। तर जुनसुकै रहस्य रहेता पनि आखिर तोरणमा देखिने सर्प पानीकै प्रतीक स्वरूप रहेको छ। किनभने गरुडले सर्प निल्ने कथा पनि वास्तवमा पानी र सूर्यको किरणको कथा हो। सूर्य-किरणको लाक्षणिक रूपमा नै विष्णु-वाहन गरुडको रूप तयार भएको छ। सूर्य-किरणले पानी शोषण गर्ने कुरा लौकिक कुरा हो। यस्तो स्थितिमा एक अव्यक्त भयानक चेहराले सर्प निल्न लागेको कुरा अलिकति अव्यावहारिक ठान्ने उहिलेका हाम्रा तत्त्वचिन्तक र कलाकारहरूले गरुडले

सर्प निल्न लागेको कुरा देखाउन प्रयास गर्नु स्वाभाविक छ। वास्तवमा नाग पानीको प्रतीक स्वरूप नभएको भए हाम्रो देशमा नदी, नाला, पोखरी, तलाउ, आदिका पानी हुने ठाउँमा नै उनीहरूको आवासस्थान हुने थिएन, नागको पूजा गर्ने तीर्थस्थल हुने थिएन। यो कुरा विचारणीय छ।

अर्को कुरा, हाम्रो काठमाडौ उपत्यकालाई वासुकी नागको क्षेत्र भन्ने प्रथा अद्यापि हाम्रो धार्मिक क्षेत्रमा चलेकै छ। यसको माने हो, पानी-प्रधान देश। काठमाडौ पानी-प्रधान हुनुमा धेरै कारणहरू छन्। एक त चोभार डाँडामा पहिरो आउँदा कुनै बखत सारा उपत्यका नै जलामय भई विशाल सरोवर भएको कुरा हाम्रा पुराण तथा प्राचीन ग्रन्थहरूमा उल्लेख भएको छ। यो कुरा वास्तवमा असम्भव पनि छैन। किनभने उपत्यकामा बग्ने सारा पानी चोभार डाँडाको खोंचबाट बाहिर जानुपर्दछ। यस्तो स्थितिमा त्यस ठाउँमा पहिरो गई प्वाल थुनिएको खण्डमा अद्यापि काठमाडौं उपत्यका जलामय हुने सम्भावना छँदै छ। अर्को कुरा, अग्ला अग्ला पहाड-हरूबाट बग्ने नदी-नालाहरूले उपत्यकाको भूमि सदा रसिलो हुने कुरा स्वाभाविक छ। यस्तो स्थितिमा काठमाडौ उपत्यकालाई वासुकी नागको क्षेत्र भनी उल्लेख गर्नु कुनै अप्रासगिक छैन। यस्तो पानी-प्रधान देशमा घर मन्दिरहरू बनाउँदा भासिएर जाने धेरै सम्भव छ, यस कारण कुनै घर मन्दिरहरूको जग हाल्दा जमीनको सतह कस्तो छ, जमीनभित्रबाट बग्ने पानीको स्रोत कसरी रहेको छ, इत्यादि कुराको विचार गर्नु अत्यन्त आवश्यक हुन आउँछ। यस प्रसंगमा हाम्रो वास्तु-विधानमा हाम्रा ज्योतिषहरूले वास्तु-नागको कल्पना गरेको कुरा ज्यादै रोचक र रहस्यमय देखिन्छ।

हाम्रो आफ्नै सांस्कृतिक परम्पराअनुसार उपत्यकाको कुनै पनि ठाउँमा घर-मन्दिर, चैत्यहरू बनाउन जग खन्दा त्यस ठाउँलाई सबभन्दा पहिले एकासी कोष्ठमा रेखागणितको हिसाबले विभक्त गरिन्छ, त्यसपछि ती कोष्ठहरूमा महीनाको क्रममा राशिको विचार गरी वास्तु-नागको स्थिति कस्तो रहेछ भन्ने विचार गरिन्छ। यस प्रकार पञ्चाङ्गको हिसाबले नागको कोष्ठमा यस स्थितिले बसेको छ भन्ने कुरा निर्णय भएपछि त्यही कोष्ठमा मानव चेहरा धारण गरिएको काल्पनिक नागको काखीमुनि पारेर सर्व-प्रथम जग खन्ने काम हुन्छ। हाम्रो उहिलेको भक्तिप्रधान धर्ममिश्रित धारणाअनुसार यसप्रकार जग खन्दा कुनै किसिमका विपत्तिहरू आइ-पदन भन्ने भावना रहेको छ। जुन कुरा सारै रोचक र रहस्यमय छ। तर घरको मजबूतीको लागि यसरी एकासी कोष्ठमा वास्तु-नागको स्थिति पत्ता लगाउने कुरा कहाँसम्म वैज्ञानिक र तर्कसम्मत छ, यो कुरा विचारणीय छ। वर्षा ऋतुमा पानीको भय हुनु स्वाभाविक छ। यदि घर-मन्दिरहरूको जग मजबूत नभएको खण्डमा नयाँ पक्की घरहरू पनि भासिएर भत्किन सक्दछ। यो कुनै आश्चर्यको कुरा होइन। सम्भवतः हाम्रो प्राचीन समयमा जङ्गलै जङ्गलले ढाकिएको पानी-प्रधान हाम्रो देशमा वर्षाको समयमा यत्रतत्र अकस्मात् घर-मन्दिरहरू भत्केको हुनुपर्दछ। जसबाट हाम्रा जनता अधिक भयभीत हुनु स्वाभाविक छ। जस्तै, आजकाल पनि वर्षातमा घरहरू भत्किने दुःखद घटनाहरू भइरहन्छन्। यस्तो स्थितिमा पानीको प्रतीकस्वरूप मानिएको नागको ठूलो भक्तिभावले पूजा गरी आत्मिक बल बढाउन कोशिश गर्नु युक्तिसंगतै देखिन्छ। वास्तवमा हाम्रो वर्षाऋतुमा मनाइने नागपञ्चमीको महत्व यसै तत्त्वमा अन्तर्भाव

भएको देखिन्छ। अन्यथा घर-घरमा नागको पूजा गरी त्यसको चित्र, मूर्तिहरू स्थापना गर्ने हाम्रा सास्कृतिक उत्सव श्रावण महीनामा नै मनाउनु पर्ने थिएन।

यस प्रकार नागको शरीरमाथि अत्यन्त तातो बालुवाका कणिका-हरूको वृष्टि हुने कथा गरुडले पनि छुन नसक्ने पातालमुनिको अनन्त नागको कथा, विष्णु भगवानको शय्याको रूपमा देखा परेको शेष नागको कथा आदि अनेक हाम्रो देशमा चलेका पौराणिक नागसम्बन्धी कथाहरूको विषयमा गहिरिएर सोच्दा जुन वस्तुस्थितिको ज्ञान हाम्रो समक्ष आउँछ, त्यस तथ्यलाई यदि धार्मिक दृष्टिले नहेरेको खण्डमा ती कथाहरूले र नागको स्वरूपमा देखिने अनेक विधि-विधान र कलात्मक स्थितिले हाम्रा पूर्वजहरूले सोचेका पानीको विषयको अनेक रोचक र रोमाञ्चकारी घटनाको यथार्थ कुराहरू बताउनेछ। यसमा शका छैन। हुनत यस प्रकारको वास्तविक कुरा हृदयङ्गम गर्न हाम्रा प्राचीन साहित्यहरूको लेखन-शैली र जनताको अलौकिक भावनाले ज्यादै दुष्कर बनाइदिएको छ। तथापि यदि हामीले उस वेलाको परम्पराअनुसार अलौकिक कुरालाई लौकिक कुरामा ढालेर सोचेको खण्डमा हाम्रा पूर्वजहरूले सोचेका कुरा बुझ्न नसक्ने स्थिति छैन।

हरेक वर्ष नागको पूजा गर्ने उत्सव हामी मनाउँछौं। तर आधुनिक ढङ्गले सिमेण्टमा ढालेर घर-मन्दिरहरू बनाउने वेला यदि हामीले नागको स्वरूप चिह्न सकेनौं तर सिमेण्ट कङ्क्रीट गरी बनाएको घरमा भने नागको चित्र राखेर पूजा गर्ने सास्कृतिक परम्परालाई लिंदै गर्‍यौं भने आजको युगमा यो कुरा अलिकति उपहासको विषय बन्न सक्दछ। यस कारण नागको

पूजा गर्नु छ या हाम्रो परम्परागत सांस्कृतिक रहस्यलाई बुझ्नु छ भने हामीले अवश्यमेव माथि उल्लेख गरे झैं हाम्रो दृष्टिकोणलाई यथार्थवादी बनाउनु अत्यावश्यक छ। अन्यथा किंवदन्ती या पौराणिक कथाको आधारले हामीलाई सही कुरा बताउन सक्दैन।

## किंवदन्ती

कुनै एकजना खेतीवालले आफ्नो खेतमा हलो जोत्दाजोत्दै जमान-मुनि बसिरहेका एक नाग परिवारका तीनजना बच्चालाई मारिदियो। यसबाट नाग-बच्चाका आमाचाहिं ज्यादै क्रुद्ध भएर खेतीवालको घरमा गई कृषक परिवारका आमा-बाबु र दुई छोरालाई बदलाको रूपमा डसेर मारिदियो। त्यस घरमा एक जना छोरीमात्र बाँकी थिइन्। त्यसलाई पनि मार्न भनी रीसले आफ्नो फणा फैलाएर अगाडि बढ्दा त्यस छोरीचाहिंले हत्पत त्यस सर्पको अगाडि दूधको भाँडो ल्याएर राखिदिईं। यसबाट सर्पको हृदय परिवर्तन भयो। मार्ने मन भएन र श्रद्धाले राखिदिएको दूध पिउन थाल्यो। दूध पिइसकेपछि खुशी भएर सर्पले भन्यो—"हेर नानी हो, आज नागपञ्चमीको दिन तिमीले मलाई दूध पिलायौ यसबाट म ज्यादै खुशी छु। अब म तिमीलाई मार्दिन। लौ माग, तिमी के चाहन्छौ?" नागको यस्तो कुरा सुनेर छोरीचाहिंले भनिन्—"मरेका मेरा आमा-बाबु र भाइहरू फेरि बाँचुन्, आजका दिन कुनै पनि नागले नटोकुन्। यही मेरो प्रार्थना छ।" यति कुरा सुनी 'तथास्तु' भनी सर्प विलीन भयो। यसै दिनदेखि यस कारण नागपञ्चमीको महत्त्व रहेको हो भन्ने हाम्रो लोक-धारणा छ।

---

# श्रावण पूर्णिमा वा जनै-पूर्णिमा

श्रावण पूर्णिमाको दिन अनेक सामयिक पर्वहरू जुटेका छन्। तर सबै धर्मावलम्बीहरूले मान्ने आफ्ना-आफ्ना पर्वहरू वर्षाकालिक हाम्रो परम्परागत मनोवृत्तिमा आधारित भएका छन्। अर्थात् सबै कुरा वर्षाऋतु-देखि सम्बन्ध रहेका छन्। वास्तवमा हाम्रो संस्कृतिको विलक्षणता यसै कुरामा सन्निहित भएको छ।

उहिलेको हाम्रो वैदिक परम्पराअनुसार आफ्ना साना-साना बालकहरू-लाई अध्ययनको लागि गुरुकुल या विद्वानहरूको आश्रममा पठाउने चलन छ। यसरी आफ्ना बच्चाहरूलाई गुरुको समक्ष अर्पण गर्दा एक विशेष समारोह हुन्छ। यस समारोहलाई उपनयन या व्रतबन्ध भन्दछन्। यस उपनयन-समारोहमा वैदिक धर्मअनुसार यज्ञादि क्रिया-काण्ड हुन्छ। यही यज्ञको समारोहमा ती अध्ययन गर्ने बालकहरूलाई अध्ययनको व्रतसूचक यज्ञमा पवित्र भएको यज्ञ-सूत्र प्रदान गरिन्छ। यसकारण यस यज्ञ-सूत्रलाई यज्ञोपवीत भन्दछन्। उपवीतको माने नै उपनयन संस्कार हो। वास्तवमा हाम्रो जनै त्यही यज्ञ-सूत्र हो अथवा अध्ययनको व्रतलाई पालन गर्ने आफ्नो आचार्यले प्रदान गर्ने प्रतिज्ञा-सूत्र हो। यसमा शंका छैन। तर आजकाल यद्यपि त्यो गुरु परम्परामा अध्ययन गर्ने परिपाटी टुटिसकेको छ तथापि उपनयन-संस्कार र जनै धारण गर्ने परम्परा अद्यापि चल्दै आएको छ। यो हाम्रो आदर्श हो। समयले हामीलाई कताकता पुऱ्याए तापनि हामी आफ्नो संस्कृतिमा अडेका छौं। वास्तवमा यही यज्ञ-सूत्र श्रावण पूर्णिमाको

दिन वर्षैनी नवीकरण गर्ने हाम्रो परम्परा छ। यस कारण श्रावण पूर्णिमाको दिनलाई 'जनै पूर्णिमा' भन्ने पनि हाम्रो यहाँ चलन छ। जनै नवीकरण गर्नुको मुख्य कारण वर्षाकालमा उपवासादिद्वारा देह शुद्ध गरी नित्यस्नान द्वारा मकिसकेको यज्ञ-सूत्रलाई फेरेर जनैको आदर्शलाई सम्झेर वेदादि अध्ययन गर्नु र धर्म-कर्ममा विशेष दत्तचित्त हुनु हो। उहिलेको जमानामा शुद्धोच्चारणका साथ वेदको अनुशीलन गर्नु ठूलो आदर्शको कुरा हुन्थ्यो। वास्तवमा जनै-पूर्णिमाको नामले हाम्रो देशमा प्रसिद्ध भएको यो दिन केवल परम्पराको नाममा मात्र चलेको छ तापनि जनै धारण गर्ने हाम्रो समाजमा प्राचीन शास्त्रको अध्ययन गर्ने पवित्र उद्देश्यको सम्झनाचाहिं विलाउँदै गएको छ। हुनत आजको युगमा विशेष अध्ययनको लागि श्रावण महीना पर्खन पर्ने स्थिति पनि छैन तथा उहिलेका समाजमा शूद्रको संज्ञा पाएका मानवसमाजले गुरुकुलमा गई वेदको अध्ययन गर्न नपाउने भन्ने स्थिति पनि आज छैन। अध्ययन गर्ने कुरामा भेद-भावको दृष्टिले हेर्ने यस प्रकारको व्यवस्थालाई बौद्धमार्गीहरू रुचाउँदैन। तर परिस्थितिले जस्तै रूप धारण गरेता पनि जनै-पूर्णिमाप्रति झुकेको हाम्रो मनोवृत्तिले हाम्रो प्राचीन अध्ययन-अध्यापनको आदर्शमय पद्धतिलाई-चाहिं औल्याइरहेको छ। यो हामी सबैको लागि खुशीको कुरा हो।

यसै दिन हाम्रो देशमा नयाँ यज्ञोपवीत धारण गरेर देह शुद्ध भएका ब्राह्मणहरू वैदिक मन्त्रोच्चारणद्वारा पवित्र भएको रक्षाबन्धनलाई लिएर मङ्गलकामना गरी आफ्ना-आफ्ना हितैषीहरूकहाँ भेटघाट गर्न जान्छन्। रक्षाबन्धनको सूत्र प्रदान गर्दा हाम्रो यहाँ विशेष आकर्षक बलिराजा-सम्बन्धी पौराणिक घटनाको उल्लेख गर्ने चलन छ। जुन कुरा विचारणीय

छ। तर हाम्रो तराई प्रदेशको कुनै कुनै भागमा छिमेकी राष्ट्रको रीतिरिवाज-अनुसार रक्षाबन्धन 'राखी' को रूपमा चलेको छ। राखीको रीतिरिवाज हाम्रो तिहारको भाइटीकाजस्तै हुन्छ। दिदो-बहिनीहरूले आफ्ना दाजुभाइहरूको आयु, आरोग्य र मङ्गलकामना गर्ने राखीको आदर्श पनि त्यत्तिकै हृदयस्पर्शी छ। यस प्रकार श्रावण पूर्णिमालाई जनैपूर्णिमा, रक्षाबन्धन, र राखीको रूपमा हेर्ने हाम्रो सस्कृतिभित्र यसै दिन हुने ऋषि-तर्पणीको महत्त्वलाई पनि हामी बिर्सन सक्दैनौं। अर्थात् हाम्रा उहिलेका ऋषिमुनिहरू यो दिन खास ढङ्गले कुनै पवित्र नदी-नालाहरूको तीरमा आई जमघट हुन्छन् तथा शास्त्रको चर्चामा आफ्ना-आफ्ना अनुभूत कुराहरूको विषयमा छलफल गर्दछन्। यस कारण श्रावणपूर्णिमालाई 'ऋषि तर्पणी' भन्ने पनि हाम्रो परम्परा छ।

बौद्ध धर्मावलम्बीहरू, जसले जनै धारण गर्ने कुरा आवश्यक ठान्दैनन् ललितविस्तर आदि बौद्ध ग्रन्थहरूको आधारमा श्रावण पूर्णिमा बुद्धले मार विजय गरेको दिनको रूपमा हाम्रो यहाँ ठूलो श्रद्धा र भक्तिले मनाउँछन्। मनुष्यको जीवनमा विघ्नबाधाहरू आइपर्नु स्वाभाविक छ। अवश्यमेव बुद्धत्व प्राप्तिका लागि घर छोडेर हिंडेका एक युवक राजपुत्रको जीवनमा पनि अनेक विघ्नबाधाहरू आएका छन्। वास्तवमा एक युवक बुद्धको जीवनमा आइपर्न सक्ने यस्ता अनेक विघ्नबाधाहरू नै मारको रूपमा देखा परेका छन्। यसमा शङ्का छैन। तर हाम्रो बौद्ध-साहित्यमा मारको जुन अलौकिक रूप देखा परेको छ त्यो कुरा यहाँ विचारणीय छ। किनभने अवास्तविक कुराको महत्त्व हुन्छ। यसकारण क्वाटी खाने श्रावण पूर्णिमा-

जस्ता हाम्रा चाड-पर्वहरूमा देखिने अलौकिक भावनाहरूको विषयमा डुबेर विश्लेषण गर्नु अत्यावश्यक छ।

हाम्रो तराई प्रदेशमा जन्म भएको सिद्धार्थलाई आज हामी अलौकिक व्यक्तिमा गणना गर्न सक्दैनौ। किनभने उनको प्रामाणिक इतिहास हाम्रो समक्ष छ। यस्तो छँदाछँदै पनि बुद्ध आज हाम्रो समक्ष लौकिक रूपमा छैन। यस्तो किन भो? यसको पनि इतिहास छ। बुद्धलाई अलौकिक बनाउने तत्त्वहरू धेरै छन्। धेरै वर्षको तथा धेरै जनताको प्रयासले र प्रयोगले बुद्ध अलौकिक बनिसकेको छ। साहित्यको दृष्टिले विचार गर्दा बुद्धलाई अलौकिक बनाउने ग्रन्थहरू धेरै छन्। ती ग्रन्थहरूमध्ये हाम्रो देशमा ललितविस्तरको देन ठूलो छ। यो ग्रन्थ यद्यपि बुद्धको जीवनीको विषयमा लेखिएको छ। तर यसमा उल्लेख भएका यावत् कुराहरू अलौकिक छन्। बुद्धको शक्ति अपार रहेको छ। यसै ग्रन्थको वर्णनको सिलसिलामा मार विजयको विषयमा एक दुई अध्याय लेखिएको छ। यहाँ उल्लेख भएको वर्णनअनुसार बुद्धलाई आइपरेको मारको रूपमा भयङ्कर दैत्य, दानव, राक्षस, पिशाच, भूत-प्रेतदेखि लिएर कामोत्तेजना दिने दिव्य सुन्दरीहरूको हाव-भाव र नृत्यहरूसमेत समावेश भएका छन् यी सबै कुराको यथार्थ दृश्य अंकित भएका मूर्तिहरू हाम्रो देशमा यत्र-तत्र उपलब्ध छन्। जहाँसम्म सत्य कुराको सवाल छ, मारको रूपमा उल्लेख भएका यस्ता कुराहरू हाम्रो सहज बुद्धिले मान्न सकिँदैन। किन्तु हाम्रो सहज बुद्धिले यही स्वीकार गर्दछ कि प्रतीकवादी हाम्रा उहिलेका दार्शनिकहरूले अवश्यमेव बुद्धको जीवनमा घटेका शारीरिक, मानसिक तथा सामयिक विघ्नबाधाहरूलाई नै संकेत गरेर भूत-प्रेत, राक्षस र दिव्य सुन्दरीहरूको मार-

को रूपमा कल्पना गरेका थिए। किनभने घरबार छोडेर चिन्तनमा लागेको एक युवकको मनमा काम-वासनाको प्रबल तृष्णा बाधक तत्त्वको रूपमा खडा हुनु स्वाभाविक छ। यस कारण यसै कुराको प्रतीकस्वरूप मारको रूपमा दिव्य सुन्दरीहरू, कठोर शरीर सुक्ने नियन्त्रणले मृत्युको भय हुनु स्वाभाविक छ। यस कारण यस कुराको प्रतीकस्वरूप मारको रूपमा भूत-प्रेतहरू, ठूला-ठूला कार्यहरू सम्पन्न हुन दुष्टहरूसँग पनि त्यत्तिकै सामना गर्नुपर्ने हुन्छ। यसकारण यस कुराको प्रतीकस्वरूप अनेक रौद्ररूप मारको रूपमा खडा हुने तत्वहरूको अलौकिक रूपमा कल्पना गर्नु कुनै अनौठो कुरो होइन। वास्तवमा यसै तथ्यको आधारमा ललितविस्तरको मार विजयको अलौकिक रूप हाम्रो समक्ष आउँछ। तर बुद्धलाई अनेक तरहले अलौकिक बनाई आफ्नो अभीष्ट कुरा सिद्ध गर्न खोज्ने अहिलेका दार्शनिक-हरू यसरी नैसर्गिक कुरालाई पनि अनैसर्गिक बनाउन अलौकिक कुरामा चाँडो विश्वास गर्ने जन-भावनाको मनोवृत्तिले विवश भएको देखिन्छ। अर्थात् बुद्धलाई बराबर सताउने काम-तृष्णाको वेदनालाई संझाउन दिव्य सुन्दरीहरूको कल्पना जति सरल र आकर्षक सिद्ध भएको छ त्यति वस्तु-स्थितिको सरसरी वर्णन उहिलेको जमानामा आकर्षक नभएको कुरा ललित-विस्तर आदि ग्रन्थहरू लेख्नेले महसूस गर्नु स्वाभाविक छ। यो सत्य कुरा हो। तर आजकाल यस्ता कुराहरू हामीले विस्तार-विस्तार भुल्न थालेका छौं। मार विजय भन्नेवित्तिकै हाम्रो समक्ष त्यही ललितविस्तरको कल्पना साकार हुन आउँछ। जहाँसम्म सत्य कुराको सवाल छ, हाम्रो यो धारणा गलत छ। मारको यही गलत धारणामा परेर श्रावण महीनाको गाई जात्रा-देखि शुरू हुने अनेक नाच-गान पागलपनको अभिनयलाई हाम्रा यहाँका

बौद्धमार्गीहरू बुद्धको मारको रूपमा सम्झन्छन्। मेरो विचारमा यो कुरा ठीक छैन। किन्तु श्रावण महीना वर्षामास भएको हुनाले कपिसावदान-जस्ता ग्रन्थहरूको आधारमा हाम्रो यहाँ विहारहरू सजाउने, धर्म-व्याख्यान गर्ने, व्रतहरू बस्ने, बौद्ध मन्दिरहरूमा कर्णप्रिय बाजाहरू बजाई परिक्रमा गर्ने, अनेक सांस्कृतिक परम्पराहरू चलेका छन्। संभवतः यस वेला कुनै रोग व्याधिले उपत्यकावासीहरूलाई सताएको हुन सक्दछ। जुन कुरालाई उपत्यकावासी धार्मिक जन-समाजले बुद्धलाई सताएको मार समान मान्नु कुनै अनौठा कुरा छैन। यस प्रकार श्रावण-पूर्णिमाको दिनलाई मार-विजयको रूपमा सम्झने हाम्रा बौद्धमार्गीहरूले वस्तुस्थितिको यथार्थ रूपमा अध्ययन गर्न आवश्यक देखिन्छ।

श्रावण पूर्णिमाको दिन काठमाडौं निवासीहरू विशेष ढङ्गमा क्वाटी खान्छन्। वास्तवमा गुँ-पुह्नी या श्रावण पूर्णिमा भन्नेवित्तिकै क्वाटी खाने चाड भन्ने भावना हाम्रो मनमा परेको छ। क्वाटी खास गरेर शाकाहारी हरूको एक भोजन हो। श्रावण-पूर्णिमाको दिन क्वाटी खानुको मतलब अहिंसावादी धार्मिक मनोवृत्तिको फल हो। हुनत आजकाल क्वाटी मासुको रसमा पकाएर खान्छन्। मेरो विचारमा यो प्रक्रिया हाम्रो सांस्कृतिक परम्पराअनुसार गलत छ। यद्यपि आजको परिस्थितिमा यस प्रक्रियालाई पनि गलत भन्न सकिँदैन। अर्को कुरा, स्वास्थ्यको दृष्टिले वर्षाकालमा अग्नि मन्द भई वातिक विकार उत्पन्न हुनु स्वाभाविक कुरा छ। कैराउ, भटमास, बोडी, सिमी आदि गेडाहरू त्यसै पकाएर या भुटेर खानाले वायु बढ्ने हुन्छ। यस्तो अवस्थामा स्वभावतः हावापानीले नै वायु बढ्ने वेला वायु बढाउने खाने कुरा, जुन कुरा उहिलेको परिस्थितिमा अनिवार्य खाने कुरा

थिए, यस्तो खाद्य पदार्थलाई वर्षा ऋतुमा उपयोगी बनाउन एक दुई दिन पानीमा भिजाएर अंकुरित भएपछि ती द्रव्यहरू क्वाटीको रूपमा प्रयोग गर्नु सारै उपयोगी देखिएको छ। किनभने कुनै पनि गेडाहरू अङ्कुरित भएपछि खाँदा त्यत्तिको वायुकारक हुँदैन। त्यस गेडाको सस्थानमा नै विशेष परिवर्तन भइसकेको हुन्छ। यस कारण स्वास्थ्यको दृष्टिले श्रावण-पूर्णिमाको दिनलाई विशेष उत्साह र अभिरुचिका साथ चाडको रूपमा खाइने क्वाटीको प्रयोग पनि विचारणीय छ।

अर्को कुरा, यस श्रावण-पूर्णिमाको दिन 'व्याजा नके' भनेर हाम्रा कृषकहरू खेतमा गई भ्यागुतालाई खाने कुरा दिन्छन्। जसबाट ती भ्यागुताहरू भोकै मर्न नपाउन्। वास्तवमा यो कुरा पनि अति रोचक देखिएको छ। धानको खेतीका लागि अधिक पानीको आवश्यकता रहन्छ। यस कारण वर्षामा पानी परिरहने रहेता पनि यो कुरा प्राकृतिक हावा-पानीमा आधारित छ। कहिलेकाहीं प्रचण्ड घामको किरणले धान रोपेको खेत सुकेर जाने हुन्छ। यस्तो अवस्थामा भ्यागुताका केही स्वाभाविक गुणहरू पनि मानिसको बुद्धिमा उपयोगी सिद्ध भएका छन्। जस्तै, हाम्रा कृषकहरू भ्यागुताका तरह-तरहका आवाज सुनेर पानी पर्ने स्थितिको भविष्यवाणी गर्दछन्। वास्तवमा यो भविष्यवाणी धेरै अंशमा मिल्ने कुरामा हाम्रा कृषकहरू परिचित छन्। अर्को कुरा, भ्यागुताहरू प्वालभित्र बस्दछन्। यसरी धानको खेतमा अनगिन्ती भ्यागुताहरूको सृष्टिले सानासाना प्वालै प्वालको संस्थान बन्नु स्वाभाविक कुरा छ। यसरी खेतमा पानीभित्र प्वालहरू रहँदा प्रचण्ड घामले बाहिरी पानी सुकाएता पनि प्वालभित्र रहेको पानी चाँडै सुक्न पाउँदैन। यसबाट केही कालसम्म खेतलाई रसिलो बनाई राख्न मदत दिन्छ। तथा

खेतमा भ्यागुताहरू लागेता पनि यसले अरू कीट पतङ्गले झैं धानबालीको कुनै हानि नोक्सानी गर्दैन। यसको जीवन केवल काई र कीट पतङ्गको भोजनमा आधारित भएको हुन्छ। यही हेतु हाम्रा कृषकहरू श्रावण-पूर्णिमा-को दिन भ्यागुतालाई पनि उपयोगी प्राणीको रूपमा मान्दछन्। यो कुरा कुनै काल्पनिक कुरा होइन। हाम्रा कृषकहरू भन्दछन्, खेतमा भ्यागुताहरू भएको असल छ। भ्यागुतोको विलक्षण आवाजले हामीलाई पानी पर्ने कुराको पूर्व सूचना दिन्छ आदि आदि।

यी सब विविध सास्कृतिक तत्त्वहरूको अतिरिक्त श्रावण पूर्णिमाको दिन लाग्ने गोसाईं कुण्डको शिवजीको दर्शन गर्ने मेला पनि विचारणीय छ। यो कुण्ड काठमाडौंबाट ठीक उत्तर तेह्र चौध हजारजति अग्लो हिमालयको अधित्यकामा रहेको छ। यही कुण्ड त्रिशूली गण्डकीको मुहान हो। यस कुण्डको शिरोभागमा हिमालयको कापबाट तीनवटा पानीको झरना निस्केका छन्। यही तीनवटा पानीको झरनालाई त्रिशूलको प्रहारबाट उत्पन्न भएको हो भनी भक्तजनहरू विश्वास गर्दछन। यो ठाउँ अत्यन्त ठण्डा छ। यहाँ हिउँ परिरहन्छ। तर श्रावण महीनामा पानी परिरहने भएता पनि सूर्यको चरम सीमामा पुग्ने उत्तरायण गतिले यस वेला यहाँ हिमपात हुँदैन। जाडो-चाहिं अत्यन्त हुन्छ। यस कारण साहसी यात्रुहरू अत्यन्त जाडो सहनु परेता पनि यस वेला यहाँ एकत्र हुन्छन्। प्रकृतिको सृष्टिमा यो ठाउँ मनमोहक छ। करीब हाम्रो टुँडिखेलजत्रो यस निर्मल कुण्डको बीचमा एक लामो शिला पानीभित्रै माथि उठेको छ। यो दृष्य अरू वेला नदेखिने भएता पनि घाम लाग्ने वेला स्पष्ट देखिने हुन्छ। टाढाबाट हेर्दा यो दृश्य कुनै भीमकाय व्यक्ति पल्टिरहेकै जस्तै भान पर्दछ। शिरोभागमा भ्याउहरू लागेको हुनाले

मानौं कुनै व्यक्तिको जटा छरिएकै जस्तो आभास हुन्छ। वास्तवमा यही प्राकृतिक आकृतिले श्रद्धालुजनहरूको अन्तस्करणमा साक्षात् कैलाशपति शिवजीको दिव्यरूप धारण गर्दछ। पौराणिक धारणाअनुसार श्रावण महीनामा यहाँ नुहाउनाले गङ्गा, यमुना, समुद्र आदि सबै तीर्थस्थलहरूमा नुहाउनाले हुने पुण्य प्राप्त हुन्छ भन्ने विश्वास गरिन्छ। किनभने यस बखत यहाँ सबै तीर्थस्थलका पानी आउँछन् भनो विश्वास गर्दछन्। वास्तवमा वर्षात्मा जमीनको पानी पहाड़मा चढ्ने कुरा सत्य छ। यस्तो वस्तुस्थिति-को आधारमा श्रावण पूर्णिमाको दिन गोसाइँ कुण्डको महिमा बढ़ाउनु विचारणीय छ। यो दिन गोसाईं कुण्ड जान नसक्ने हजारौ नरनारीहरू पाटन कुंभेश्वरमा गई स्नान गर्दछन्। यहाँ एक सानो कुण्ड खडा गरिएको छ। त्यस कुण्डबाट निर्मल पानी अवच्छिन्न बगिरहन्छ। भक्तहरूको धारणा छ, यहाँ पानी गोसाईं कुण्डबाटै आउँछ। यद्यपि अहिले हामी यस कुरालाई विश्वास गर्न सक्दैनौं, किन्तु यस उक्तिबाट यो कुरा विचार गर्न सकिन्छ कि कुनै बखत पाटनको यो कुण्ड गोसाईं कुण्डको संझनामा निर्माण भएको हुन सक्दछ। यस प्रकार अनेक रोचक तथा वर्षा-कालसँग सम्बन्ध रहेका विविधताको श्रृङ्खलामा हाम्रो श्रावण-पूर्णिमाको पर्व दिन नेपालीमात्रको हृदयमा भिजेको छ। यो दिन हाम्रो देशका सबै वर्गका धर्मावलम्बीहरूको चाडको रूपमा समन्वय भएको छ। यसकारण यसको महत्त्व गुरूतर छ।

## किंवदन्ती र पौराणिक कथा

दैत्य-दानवहरूको युद्धमा नराम्रोसँग हार हुँदा ज्यादै खिन्न भई एक दिन इन्द्रले आफ्ना गुरु वृहस्पतिसँग सल्लाह गर्दै थिए। त्यसैबीच इन्द्राणीले

आएर भनिन्— "हजूर डराउनुपर्दैन। असुरसँग विजय पाउने उपाय मैले सोचेको छु। हजूर निश्चिन्त होइबक्सियोस्।" इन्द्राणीको यस्तो कुरा सुनेर आश्चर्यले इन्द्रले भने— "प्रिये! तिमीसँग त्यस्तो उपाय के छ जसबाट असुर-सँगको लडाइँमा मेरो विजय हुन्छ।" यति कुरा सुनी इन्द्राणीले प्रसन्नचित्त भएर आफ्ना गुरुपुरोहितलाई बोलाएर रक्षा-बन्धनलाई वैदिक मन्त्रद्वारा शुद्ध गर्न लगाई इन्द्रको हातमा बाँधिदिइन्। यति भएपछि इन्द्र निर्भीक भएर ठूलो आत्मबल लिई फेरि युद्ध गर्न बाहिर निस्के। रक्षाबन्धनको फलस्वरूप लडाइँमा इन्द्रलाई देख्नेवित्तिकै सारा दैत्य-दानव भागाभाग भए। आखिर इन्द्रको विजय भयो। हाम्रो जनैपूर्णिमा यसै पौराणिक कथामा आधारित छ। यस प्रकार श्रावण पूर्णिमाको विषयमा पनि श्रावणी-विधिका अनेक कुराहरू सुनिन्छन्। बुद्धको मार विजयको पौराणिक कथा पनि रोचक ढङ्गको छ।

—:※:—

# गाई-जात्रा

श्रावण पूर्णिमाको भोलिपल्ट गाई-जात्राको दिन आउँछ। यो दिन खास गरेर मृत परिवारको तर्फबाट गाईको अथवा गाईको प्रतिनिधित्वमा मानिसलाई सजाएर नगर परिक्रमा गर्ने जात्रा हुन्छ। ठाउँ-ठाउँमा तिनोहरूको पूजा हुन्छ। तर गाई-जात्रा शब्दले हाम्रो समक्ष अर्कै ध्वनि हुन्छ। गाईको खास पूजा हाम्रो सस्कृतिअनुसार लक्ष्मी-पूजाको दिन हुन्छ। श्रावण महीनाको गाई-जात्रामा हुने गाई-पूजा खास गाईको पूजा होइन। मेरो विचारमा यो एक हाम्रो मनोविकृतिभित्रको उपचारमा उल्लेख भएको प्रक्रियाका ऐतिहासिक रूप हो। मानिसको मन विकृत भई पागल हुन सक्दछ। पागल हुनमा धेरै कारण छन्। उहिलेका आचार्यहरूले सबै उन्मादको कारण यथार्थरूपमा त्रिदोष सिद्धान्तअनुसार पत्ता लगाउन सकेका छैनन्। त्रिदोष सिद्धान्तबाट पत्ता लगाउन नसकेका उन्मादलाई भूतोन्माद भन्ने सज्ञा दिएका छन्। भूतोन्माद धेरै प्रकारका छन्, तर यहाँ गाई-जात्रालाई लिएर विचार गर्दा गन्धर्व-ग्रहबाट पैदा हुने भन्ने भूतोन्माद-चाहिं विचारणीय छ। गन्धर्व-ग्रह शान्त गर्न गाईहरूको बीचमा बलि दिने, पूजा गर्ने भनेर आयुर्वेद-शास्त्रहरूमा उल्लेख भएको छ। तथा गन्धर्व ग्रह-बाट पीडित व्यक्तिको मनोभावना, विशेष गरेर नाच्ने गाउने, हाँस्ने-हँसाउने, मीठा-मीठा कुराहरू गर्ने, फूलका मालाहरू लगाएर प्रसन्न भएर हिंड्ने आदि आदि हुन्छन्। वास्तवमा मेरो विचारमा पागलपनको स्थिति हाम्रो गाई-जात्राको दिन अनेक पागलपनको अभिनय गरेर, गाएर, नाचेर, हाँसेर,

हँसाएर, मीठा-मीठा चुट्किलाहरू सुनाएर हिंड्ने आदि अनेक प्रकारका हाम्रा सास्कृतिक परम्परासँग ज्यादै सामञ्जस्य रहेको छ। यसरी पागलपनको अभिनयसँग गाईलाई पूजा गर्ने हाम्रो चाडले अवश्यमेव गन्धर्वहरूबाट हुने भूतोन्मादको सत्यता हाम्रो समक्ष आउँछ। तथा मृत परिवारबाट मनाइने गाई-जात्राले पनि यो चाड चिकित्सा-शास्त्रसँग निकट सम्पर्क रहेको स्थिति-लाई प्रकारान्तरले व्यक्त गर्दछ। हुनत हाम्रा ऐतिहासिक ग्रन्थहरूमा यस प्रकारको सम्बन्ध गाई-जात्राको प्रकरणमा उल्लेख भएको पढ्न पाइएको छैन। करीब पाँचसय वर्षजति पहिले लेखिएको गोपाल वंशावलीमा यस चाडको विषयमा केवल नाउँले मात्र उल्लेख गरेको छ। यस कारण पाठक-हरू यस कुरामा सहमत हुन अन्योलमा पर्नेछन्। तर वास्तविक कुराको अध्ययनको क्रममा यस प्रकारका तथ्य कुरालाई पनि उपेक्षा गर्न सकिंदैन। यद्यपि आजकाल हामीलाई थाहा छैन कि गन्धर्व-ग्रहको उत्पीडन कस्तो हुन्छ, तर न्यूगिनी आदि विश्वका कतिपय स्थानहरूमा फैलिरहेका विशेष हाँस्नुपर्ने पागलपनको महामारीको खबरले यो कुरा कुनै अनौठा लाग्दैन कि उहिलेको जमानामा हाम्रो देशमा पनि यस्तै अनेक ढङ्गका पागलपनको बिमारीले काठमाडौ निवासीहरू धेरै मरेका थिए। जसबाट त्यसको शान्ति-का लागि आफ्नो कार्य परम्पराअनुसार गाईको बीचमा बलि दिने, पूजा गर्ने प्रक्रियालाई व्यापक ढङ्गमा अपनाएका थिए। हुन सक्छ, यो प्रक्रिया पागलले या पागलपनको कारण दिवंगत भएका व्यक्तिको परिवारले मात्र मनाउने स्थितिमा रहेता पनि कुनै बखत ठूलो महामारीको रूपमा फैलिएको यस रोगको घटनाले त्रस्त भएका उहिलेका जनताले वर्षेनी मनाउन थाले, जुन आजसम्म चल्दै आएको छ। हाम्रा देशवासीहरू परम्परामा अधिक

विश्वास गर्ने भएकोले कहिलेकाहीं यहाँ हैजाको प्रकोप भएको वेलामा पनि हाम्रो यहाँ अद्यापि टोल-टोलमा शान्ति-स्वस्तिको पूजा गर्ने चलन चल्दै आएको हामीले देखेका छौं। यो कुरा त्यही हाम्रो प्राचीन परम्पराको सस्कार हो, जुन कुरा विचारणीय छ।

पागलपनको अभिनयले अवश्यमेव मानिसलाई हँसाउँछ। कालान्तरमा संभवतः यही कुरा खेतीपातिको कामबाट फुर्सत् पाएका अथवा सामुदायिक खेतीपातिको काममा एकत्रित भएका उहिलेका जनताको आमोद-प्रमोदको दिनमा परिणत भयो। जुन दिन आज बौद्धमार्गीहरूले मारको रूपमा सभने परम्रा बनाए तापनि आमोद-प्रमोदकै रूपमा चलेको छ। यसै आमोद-प्रमोदको सस्कारलाई आमस्वतन्त्रताको संज्ञा पनि प्रदान गरियो। वास्तवमा कुनै घटना हुन्छ। कालान्तरमा त्यसले इतिहासको रूप धारण गर्दछ। त्यही इतिहास कविको कलमले र जनताको परम्परामा तल ओर्ल्दै आएको कथानक बोलीले किंवदन्तीमा परिणत हुन जान्छ। व्यक्ति-विषयको विभिन्न भनाइमा किंवदन्तीको पनि अनेक रूप देखा पर्ने हुन्छ। तर वास्तवमा यी कुराहरूको पनि ऐतिहासिक क्रम हुन्छ। जहाँसम्म सत्य कुराको खोजको प्रश्न छ, अज्ञानबाट वा ज्ञानबाट उठेको हठधर्मी विचार-लाई छाडेर हाम्रो संस्कृतिविषयको अध्ययन यस्ता कुराहरूमा आधारित भएको हुनु अत्यावश्यक छ। अन्यथा परम्पराअनुसार लेखिएका हाम्रो धर्म-शास्त्र, पुराण, जातक, वंशावली आदिमा उल्लेख भएका कुराहरूको यथार्थ-ताबाट परिच्चित हुन ज्यादै कठिन हुनेछ। यसकारण गाई-जात्रालाई बुद्धको मारको सम्भनामा खडा भएको एक सास्कृतिक रूप हो भन्नु उपरोक्त तथ्य कुराहरूसँग कहाँसम्म न्यायोचित तर्कसगतको कुरा छ, विचारणीय छ।

मेरो विचारमा बुद्धले मार विजय गरेको भन्ने ललितविस्तरजस्ता ग्रन्थ-हरूमा उल्लेख भएको दिन र हाम्रो पागलपनको अभिनय गर्ने गाई-जात्राको सांस्कृतिक परम्पराको दिन एकै दिनमा जुटेको हुनाले गाई-जात्रालाई नै मारको रूपमा बौद्धमार्गीहरूले सम्झन लागेको देखिन्छ। अन्यथा मार के हो ? ( जसको यथार्थ रूप माथि उल्लेख भइसकेको छ ) गाई-जात्रा के हो ? यसको पृथक रूप हाम्रो समक्ष छँदाछँदै अन्धविश्वासमा हामी पर्न सक्दैनौ।

— :o: —

# काठमाडौं उपत्यकामा श्री कृष्ण पूजाको चलन

श्री कृष्णको व्यक्तिगत महिमा हाम्रो देशमा प्राचीन, ऐतिहासिक-कालका जन-समाजको हृदयमा त्यत्तिको भिजेको देखिंदैन। किनभने लिच्छवी कालमा बनेका श्री कृष्णका प्रामाणिक मूर्तिहरू काठमाडौं उपत्यकामा उपलब्ध भएका छैनन्। हाम्रो लिच्छवीकालमा बनेका अनेक बुद्ध, बोधि-सत्व, विष्णु आदिका मूर्तिहरू यत्रतत्र देखिएका छन्, किन्तु श्री कृष्णको जीवनीसँग सम्बन्ध रहेका कुनै पनि मूर्ति दृष्टिगोचर हुन सकेको छैन।

ऐतिहासिकहरूको दृष्टिमा समानकालिक कृष्ण दुइजना थिए। जस्तै, गीताको जन्म दिने आदर्शमा खडा भएको कृष्ण र वेदको वर्गीकरण गर्ने भन्ने ख्याति पाएको कृष्ण। पहिलो कृष्णचाहिं श्री कृष्णको नाउँले नै प्रसिद्ध छन्। अर्को कृष्ण द्वैपायन कृष्णको नाउँले या वेदव्यासको नाउँले प्रसिद्ध छन्। श्री कृष्ण यद्यपि पौराणिक उक्तिमा विष्णु भगवान्‌को अनन्य अवतारको रूपमा देखा परेको छ तापनि महाभारतको युद्धले विशेष ख्याति प्राप्त भएको कृष्ण अवश्यमेव करीब पाँच हजार वर्षजति पुरानो भारतीय समाजमा विशेष व्यक्तित्व भएको व्यापक प्रतिभाशाली व्यक्ति हुनुमा शंका छैन। यद्यपि कृष्णको वास्तविक ऐतिहासिक तथ्य कुरा क्रमबद्ध तरिकामा अनुसन्धान हुन सकेको छ। यस्ता प्रतिभाशाली महापुरुषको व्यक्तित्व हाम्रा प्राचीन ऐतिहासिककालका जनताको हृदयमा त्यत्तिको नभिज्नुमा के कारण छ, यो कुरा विचारणीय छ।

लिच्छवीकालपछि पाँच छः सय वर्षसम्मको अवधिमा पनि हाम्रो

यहाँ कतै श्री कृष्णको छुट्टै प्रामाणिक मूर्ति देवताको रूपमा स्थापना भएको देखिएको छैन। यद्यपि एक दुई ठाउँमा भगवान् विष्णुको सम्झनामा श्री कृष्णको उल्लेख भएको छ। तर मध्य मल्लकालमा भने काठमाडौं उपत्यकामा भरमार श्रीकृष्णका मूर्तिहरू, चित्रहरू स्थापना भएको देखिएको छ। त्यस वेला स्थापना भएका श्री कृष्णका अनेक भव्य मूर्तिहरू र मन्दिरहरूले अद्यापि काठमाडौं उपत्यकाको शोभा बढ़ाइराखेको छ। मूर्तिकला, चित्रकला तथा वास्तुकलाको ऐतिहासिक दृष्टिकोणले विचार गर्दा वास्तवमा हाम्रो देशमा श्री कृष्णको व्यक्तित्वलाई विशेष कदर गर्न थालेको समय वि० सं०-को सोह्रौं शताब्दीलाई नै मान्नुपर्दछ। किनभने सोह्रौं शताब्दीका भक्तपुरका राजा प्राणमल्लको समयमा लेखिएको श्रीमद्भागवत्-मा देखिएको नब्बेवटा श्री कृष्णसम्बन्धी विभिन्न भावका चित्रहरूले नै उपत्यकामा श्री कृष्णको प्रभाव व्यापक ढङ्गमा फैलिन थालेको कुरा व्यक्त हुन आउँछ। किनभने यहाँभन्दा पहिले लेखिएका श्री कृष्णसम्बन्धी चित्र, मूर्तिहरू देखिएका छैनन्। यद्यपि कृष्णसम्बन्धी साहित्यको सर्वात्मना अभावचाहिं छैन। यसपछि पाटनको श्री कृष्णको मन्दिरको कुरा आउँछ। यो मन्दिर सिद्धिनरसिंहले १६६३ वि० स० मा बनाउन लगाएका थिए। यस मन्दिरमा देखिएको स्थापत्य-कला त्यस वेलाको स्थितिमा नौलो थियो। ऐतिहासिक विवेचनाको आधारमा काठमाडौमा देखिएका कृष्णजीका मन्दिरहरूमध्ये यही मन्दिर पहिलो मन्दिर हो। यस मन्दिरमा रहेको श्री कृष्ण-को मूर्ति नै पहिलो मूर्ति हो। त्यसपछि भक्तपुरको फसिख्यस्थित १६६७ वि० स० मा निर्माण भएको राधा-कृष्णको मूर्ति आउँछ। त्यसपछि प्रतापमल्लले स्थापना गरेको कान्तिपुरका मूर्तिहरू आउँछन्। प्रतापमल्लले आफ्नो

दरवारमा मोहन चोक नै खडा गरेका छन्। मोहन चोकको बालमुकुन्दको मूर्ति दर्शनीय छ। यही मोहन चोकसगैको अर्को एक चोकमा कालीदमनको भव्य मूर्ति पनि छ। कलाकारिताको दृष्टिले मध्य मल्लकालमा बनेका कुनै पनि कृष्णका मूर्तिहरू अरू शैव तथा बौद्ध तान्त्रिक मूर्तिहरूसरह राम्ररी कुँदिएको देखिंदैन। सम्भवतः विशेष तान्त्रिक देवदेवीहरूको मूर्तिहरू कुँद्नमा मात्र सिद्धहस्त बनेका उहिलेका कलाकारहरू आफ्नो देशमा नयाँ चलनचल्तीमा आएको श्री कृष्णको मूर्ति कुँद्नमा अलिकति अलमलिएको हुन सक्दछ। अर्को कुरा, श्यामवर्ण कालो सारो ढुङ्गाकै सर्वत्र प्रयोग गरेको देखिन्छ। अरू-अरू मूर्तिहरू झैं आफ्नो परम्पराअनुसार कोट्खाको प्रसिद्ध ढुङ्गामा कुँदिएको विरलै देखिन्छ। यसबाट कलाको सूक्ष्मता त्यस कालो सारो ढुङ्गामा राम्ररी व्यक्त हुन नसकेको कुराले कला-समीक्षकहरू दुःखित छैनन्। यस कुराको पुष्टि हनुमान ढोकाभित्र रहेको उपरोक्त कालीदमनको मूर्तिले दिन्छ। यस कालीदमनको मूर्ति कालो सारो ढुङ्गामा कुँदिएको छैन। यस कारण यसमा उत्रेको कलाको भव्यता मनमोहक छ। कला-समीक्षकहरू यस मूर्तिको भव्य कटाइलाई देखेर यो मूर्ति लिच्छवीकालमा नै बनेको हुनुपर्दछ भन्ने अनुमान गर्दछन्। तर वास्तवमा मूर्ति राम्रो छ भन्दैमा लिच्छवीकालमा बनेको भन्न सकिंदैन। लिच्छवीकालको हो भन्नलाई प्रमाण चाहिन्छ। तर कालीदमनको मूर्ति कहिले बन्यो, यसको कुनै प्रमाण छैन। प्रतापमल्लले आफ्नो दरबार सिंगार्न केही राम्रा-राम्रा कलात्मक वस्तुहरू भक्तपुर आदि स्थानबाट ल्याएका थिए भन्ने कुरा इतिहासमा उल्लेख भएको छ। यसै सिलसिलामा यो कालीदमनको मूर्ति पनि कतैबाट उठाएर ल्याएको हुनुपर्दछ भन्ने कसै-कसैको भनाइ छ। वास्तवमा सत्यको खोजीको लागि

अध्ययनकै आवश्यकता छ। तर खेदको कुरा छ, हाम्रो डाक टिकटमा समेत नेपाली मूर्तिकलाको नमूनास्वरूप स्थान पाएको यस कृष्णको मूर्तिको विषयमा कसैले खोजीनीति गरी अध्ययन गरेकोचाहिँ देखिएको छैन। यस प्रकार सत्रौ शताब्दीदेखिमात्र विशेष सजधजसाथ निर्माण भएका बाल कृष्ण, राधा कृष्ण, कालीदमनोद्यत आदि विभिन्न आकृतिका श्री कृष्णका मूर्तिहरू काठमाडौं उपत्यकामा देख्न थालिएका छन्। धार्मिक जन-समाजको लागि यद्यपि यस्ता कुराहरू रोचक हुने छैनन् तापनि आफ्नो गर्व गर्ने कला-समीक्षकहरूको निमित्त यस्तो ऐतिहासिक तथ्यको विवेचना अवश्यमेव रोचक र ज्ञानवर्धक हुनेछ। यसमा शका छैन।

श्री कृष्णको जन्माष्टमीको दिन उनको व्यक्तित्वमा सन्निहित भएको आदर्शलाई सम्झेर भगवान्को दृष्टिले श्रद्धा राख्नु असल कुरा हो। गीताको माध्यमद्वारा यस मानवभूमिलाई कर्मक्षेत्रको सज्ञा दिने, कर्मको अधिकारी मानवलाई कर्म-फलमा अनधिकारी बनाउने श्री कृष्णको महान् अमरवाणीले आजको जटिल समस्यामा फसेका विश्वका मानव-समाजलाई नै आकर्षण गरेको छ। वास्तवमा कर्मका अधिकारी मानवले कर्म-फलमा अनधिकारी बन्नुपर्ने शाश्वत नियमलाई बिर्सेको खण्डमा राष्ट्रको रक्षाको लागि वचन-बद्ध भएको एक सिपाही रण-विभीषिकाबाट भयभीत हुने कुरा थियो। किनभने लडाईंमा उनी मर्न पनि सक्दछ, बाँच्न पनि सक्दछ। यदि लडाईंमा मर्छु भन्ने आत्मग्लानि पहिले नै त्यस सिपाहीको मनमा उठेको खण्डमा त्यो योद्धा बन्न सक्ने कुरा असम्भव छ। हाम्रो मानव समाजमा यो कुरा ज्यादै मार्मिक छ। यो कुरा एक सिपाहीको जिन्दगीमा मात्र लागू हुने कुरा होइन, किन्तु समस्त मानवको स्थितिदेखि सम्बन्ध रहेको

छ। यसकारण श्री कृष्णको आदर्श आजको विश्वलाई पनि त्यत्तिकै महत्वपूर्ण छ।

यस्तै आदर्शमा नतमस्तक भएका हाम्रा देशवासीहरू जन्माष्टमीको दिन श्रद्धाले व्रत-उपवास बस्दछन्। पाटनको कृष्ण मन्दिरमा यो दिन विशेष उत्सव र मेला हुन्छ। वास्तवमा पाटनको कृष्ण मन्दिरमा हुने यो मेला त्यत्तिको पुरानो छैन। माथि उल्लेख भएअनुसार १६६३ वि० स० देखि नै यो प्रथा हाम्रो यहाँ चलेको हो। कारण यो मन्दिर सिद्धिनरसिंहले स्थापना गरेको कुरामा शंका छैन। कृष्णको भक्तिप्रति झुकेको राजाको आदर्शले नै उहिलेदेखि आजसम्म, विशेष गरेर पाटनका नर-नारीहरू श्री कृष्णका भक्त बनेका छन्। यो कुरा हामी कृष्णाष्टमीको दिन पाटनमा मनाइने, कृष्णको विशेष पूजा गर्ने, नगर-परिक्रमाको आयोजनाले अवगत हुन सक्दछौं। यो दिन मानिसहरू एक जुलूसको रूपमा आएर कृष्ण भएको हरेक ठाउँमा गई पूजा गर्न जान्छन्। यो दिन पूजा हुने पाटन-भरका कृष्णजीका मूर्तिहरू लगभग ६ सयजति पुगेका छन्। यद्यपि यो संख्या वर्षेनी वृद्धि हुँदै आएको देखिन्छ। पाटन शहरमा मात्र रहेका यतिका थुप्रा कृष्णजीका मूर्तिहरूको तथ्याकले यो कुरा सजिलैसग अनुमान गर्न सकिन्छ कि श्री कृष्णको व्यक्तित्वप्रति त्यहाँका वासिन्दाहरूको आस्था कस्तो रहेछ। यस्तै स्थिति कान्तिपुर र भक्तपुरमा पनि रहेको छ। वास्तवमा आजकाल हाम्रो देशमा हरेक शैवहरूको घर-घरमा श्री कृष्णको पूजा हुन्छ। यी सब कुराहरूबाट यस निष्कर्षमा हामी पुग्दछौं कि विक्रम सम्वत्को लगभग सोह्रौं शताब्दीदेखि विशेष गरेर काठमाडौं उपत्यकाका सबै राजा-प्रजाको हृदयमा श्री कृष्णको व्यक्तित्वले व्यापक स्थान पाएको कुरा

स्पष्ट छ । यो एक ऐतिहासिक कुरा हो । यस्ता कुराहरू श्री कृष्णको जन्म-जयन्तीको अवसरमा राष्ट्रिय दृष्टिकोणले विशेष तटस्थ भएर चर्चा गर्नु अप्रासगिक हुने छैन ।

## पौराणिक कथा

कृष्णको जन्म मथुरामा भएको थियो । उनको बाबूको नाउँ वसुदेव थियो । देवकी कृष्णकी आमा हुन् । वसुदेव मथुराका अत्याचारी राजा कसका नातेदार थिए । तर वसुदेवसग कंसको मेल थिएन । एक दिन नारदले कसलाई सुनाइदिए कि देवकीको आठौ सन्तानले तिमीलाई मार्नेछ । आठौ सन्तान साक्षात् विष्णु भगवान्को अवतार हुनेछ । यस कुरालाई कसले ठट्टामा उडाइदिए । तर आखिर यस्तै भयो । देवकीको आठौं गर्भबाट कृष्णको जन्म भयो । यो कुरा कसलाई पत्तै भएन । कृष्ण वृन्दावनको गोकुलमा गोपालको रूपमा हुर्के । आखिर कृष्णकै हातबाट कसको अन्त भयो । व्रजवासीहरूलाई कृष्णले अनेक चमत्कार देखाएका थिए । पञ्चपाण्डवकी आमा कुन्ती कृष्णकी फुपू हुन् । यस कारण कौरव र पाण्डवहरूको बीचमा उठेको महाभारत युद्धमा कृष्णले पाण्डवको पक्ष लिएका थिए । जुन युद्धमा कृष्णको कुशल निर्देशनको फलस्वरूप पाण्डवहरूकै विजय भएको थियो । यसै कारण हाम्रो पौराणिक साहित्यमा कृष्णको ठूलो महिमा छ । श्रीमद्भागवत्को दशौ स्कन्धमा कृष्णको अलौकिक जीवनी परेको छ ।

———

# गोकर्णेश्वर र कुशेऔंसीको चाड

द्वैत, अद्वैत या द्वैताद्वैत अनेक दार्शनिक तर्क-वितर्कहरूमा लागेका उहिलेका शैव-मतका आचार्यहरूले आफ्नो-आफ्नो सिद्धान्त सर्वसाधारण जनतामा बोधगम्य बनाउन लौकिक-अलौकिक रूपमा जुन अनेक पक्ष-विपक्षका युक्तिहरू सोचेका थिए ती युक्तिहरूमा कुनै-कुनै कुराहरू ज्यादै रोचक देखिएका छन्। यसै युक्तिभित्र हाम्रो यस लेखको अभीष्ट विषय गोकर्णेश्वरको उत्पत्तिको कुरा पनि आउँछ।

ऐतिहासिक दृष्टिकोणले विचार गर्दा वर्तमान गोकर्णेश्वरको मूर्ति तथा मन्दिर सर्वप्रथम कसले, कुन बखत स्थापना गरेको हो, यस विषयमा अध्ययन गर्न अद्यापि कुनै प्रमाणिक वस्तुहरू उपलब्ध भएका छैनन्। यद्यपि ऐतिहासिक राजा मानदेवको मानगृह यही गोकर्णेश्वरको आसपास बनेका थिए भनी कुनै-कुनै वंशावलीहरूमा उल्लेख भएको छ। यो कहाँ-सम्म सत्य छ, खोजीकै विषय छ। तर कुनै बखत सर्वात्मना धर्ममा लीन भएका हाम्रा देशवासीहरूको हृदयमा आफ्नो देश तथा आफ्नो देशका उपलब्धि-हरूमा अधिकभन्दा अधिक आस्था जगाउन शैव-मतलाई प्रतिपादन गर्ने जुन धार्मिक ग्रन्थहरू बनेका थिए ती ग्रन्थकारहरूले विशेष गरेर उपत्यकाका अनेक प्राचीन शिवलिंगहरूमा प्राचीन युगका ठूला-ठूला आर्य तथा अनार्य दुवै समाजका व्यक्तित्वलाई अन्तर्भाव गरेर जुन अलौकिक महात्म्यहरू कोरेका छन् त्यसै प्रकरणमा हाम्रो गोकर्णेश्वरको लिङ्गलाई हरिण-रूप शिवको अंशबाट पैदा भएको भनी प्रशंसा गरेका छन्। जुन कुरा ज्यादै

रोचक छ। अर्थात् अद्वैतवादी शिव-मतको रूप जनसाधारणको हृदयमा बोधगम्य बनाउन स्वयं शिवजीले एक सिंगमात्र भएको मृगको रूप धारण गरेका थिए भनी कल्पना गरेका छन्। यस शिवले मृगरूप धारण गर्न लगाउँदा उहिलेका दार्शनिकहरूले आफ्नो शास्त्रको चार पाद, जस्तै— क्रियापाद, विद्यापाद, चर्मापाद र योगपादको प्रतीकस्वरूप चौपायाको रूपमा र अद्वैत भावनाको प्रतीकस्वरूप एक सिंगमात्र कल्पना गरी आफ्नो विचारधारा लौकिक उदाहरणमा साकार गर्न खोजेको कुरा स्पष्ट छ। जहाँसम्म हाम्रो सांस्कृतिक प्रभावको कुरा छ, हाम्रा पौराणिक तत्वहरू ज्यादै प्रभावशाली बनेका छन्। यस कारण हाम्रो पौराणिक धारणा-अनुसार त्यही मृगरूप शिवजीको आज्ञाले ब्रह्माजीले शिवको अंशबाट उपर्युक्त गोकर्णेश्वरको स्थापना गरेका थिए। यो स्थापना भएको दिन हाम्रो परम्पराअनुसार गोकर्ण औंसीको अघिल्लो दिन मानिएको छ। गोकर्ण औंसीको दिनचाहिं स्वर्गबाट सारा देव-देवीहरू यहाँ ओर्ली बाग-मतीमा स्नान गरी शिवको पूजा-भाव गरेका थिए। यसै धार्मिक तत्त्वको आधारमा अद्यापि हाम्रा उपत्यका र त्यसको वरिपरिका मानिसहरू यहाँ आई भाद्र महीनाको औंसीको दिन मेला भर्दछन्। यो एक पौराणिक पक्षको कुरा हो। तर गोकर्ण औंसीको दिन पितृविहीन जनताले विशेष गरेर यहाँ आई स्नान-दान गरी दिवगत आत्माको तुष्टिका लागि प्रार्थना गर्ने पनि चलन छ। यस विषयमा एक वेश्या-पुत्र वैश्यको जीवनीमा आधारित भिन्नै किंवदन्ती छ। यद्यपि यस विषयमा उपर्युक्त पौराणिक कुराको केही सम्बन्ध देखिदैन। यसकारण यस विषयमा भिन्नै दृष्टिकोणले विचार गर्नु आवश्यक छ।

चरक-सुश्रुत आदि ग्रन्थहरूमा उल्लेख भएका उहिलेका हाम्रा मनोवैज्ञानिक तत्त्वहरूको खोजीको आधारमा कुनै व्यक्तिको मानसिक स्थिति कुनै भावविशेषमा विकृत या आकृष्ट हुने चान्द्रिक मासका तत् तत् दिनहरू र सौर्य प्रभावहरू विशिष्ट ढङ्गमा अभिप्रेत कारण मानिएका छन् । अर्थात् तिथि-मितिका हिसाबले मनाउने दिनहरूमा र दिन-रातका पृथक् अवस्थाहरूमा हाम्रो मनमा भिन्नाभिन्नै भावनाहरू उत्पन्न हुन्छन् । यसै प्रकरणमा हाम्रो मनमा सन्धि-पर्वहरूमा, अर्थात् औंसीको दिन मृत आत्माको सम्बन्ध प्रबल हुने कुरा उल्लेख भएको छ । वास्तवमा यसै तथ्यको आधारमा हाम्रो यहाँ गोकर्ण औंसीको सास्कृतिक महिमा चलेको देखिन्छ । अर्थात् उपर्युक्त पौराणिक धारणाअनुसार गोकर्णेश्वरको स्थापना भएको अवसर भाद्र औंसीको दिन परी गोकर्णेश्वरको मेला लाग्ने भएको हुनाले नै औंसीको भावनाले र वैश्यको किंवदन्तीको आधारमा पितृविहीन जनताको त्यहाँ विशेष आकर्षण रहेको कुरा स्पष्ट झल्कन्छ । अर्को कुरा, हाम्रो परम्पराअनुसार बाबुको मुख हेर्ने चाड पनि यही दिन पर्न आएको छ । यस पर्वदिनमा हरेक मानिसले वर्षको एकपटक ठूलो भक्तिले आफूलाई जन्म दिने आफ्ना पूज्य पिताको चरण छोई बाबुलाई सतुष्ट पार्न मीठा-मीठा कुराहरू खाउने चलन छ । यस्तो पर्व-दिनमा बाबु नभएका मानिसहरू दुखित हुनु स्वाभाविक छ । एक त औंसीको दिन, तथा अर्को हरेक मानिसले आफ्ना-आफ्ना पूज्य बाबुको सम्मान गर्ने सुखकर चाड, यस्तो अवस्थामा पितृविहीन जनताहरू गोकर्णेश्वरको मेलामा सरीक भएर पवित्र बागमतीमा स्नान गरी दिवंगत आत्माको सतुष्टिका लागि ईश्वरसँग प्रार्थना गर्न उपस्थित हुने कुरा पनि युक्तिसगत नै देखिन्छ । यस प्रकार वस्तुस्थितिको विचार

गर्दा रावणलाई वर दिने गोकर्णेश्वर स्थापना भएको पौराणिक कुरा र औंसीको चाडले गोकर्ण औंसीको दिन स्वतः उत्पन्न हुने सांस्कृतिक भावना हाम्रो मनमा जमेको छ ।

हाम्रो देशमा मनाइने चाड-पर्वहरू अनगिन्ती छन् । तिनमध्ये अधिकांश चाड-पर्वहरूको महिमा स्थानीय रूपमा नै सीमित छन् । जसलाई हामी राष्ट्रिय तथा अन्तरराष्ट्रिय रूप दिन सक्दछौं । तर आमाको मुख हेर्ने र बाबुको मुख हेर्ने यी दुई सांस्कृतिक चाड यस्ता चाड हुन् जसलाई हामी अन्तरराष्ट्रिय जगतमा पनि आदर्शको कुरा बनाउन सक्दछौं । यी चाडहरूमा हाम्रो परम्पराको रूपमा कुनै धार्मिक बन्धन छैन । आफूलाई जन्म दिने आमा-बाबुको संतुष्टिका लागि कुनै चिरस्थायी सम्मानको भावना जागृत गर्नु नै यसको पवित्र ध्येय रहेको छ । आजको अन्तरराष्ट्रिय युगमा एकले अर्काको सांस्कृतिक तत्त्वहरूको आदान-प्रदान गर्न सक्दछन् । कुनै पनि हाम्रा सांस्कृतिक तत्त्वहरूमा मानवताको कल्याण हुने यदि कुनै गुण छ भने त्यस्ता सांस्कृतिक तत्त्वहरूलाई अन्तरराष्ट्रिय स्तरमा लैजान नसक्ने कुरा पनि छैन । जहाँसम्म मानवमात्रमा हुने, प्राणीमात्रमा हुने ममताको सवाल छ, आफूलाई जन्म दिने र आफूले जन्माएका दुवै पक्षमा परस्परमा प्रेम, सद्भावना र ममताको सुखानुभूति हुनु स्वाभाविक छ । यस नैसर्गिक भावनामा आघात पुऱ्याउने भौतिक तत्त्वहरू र त्यसबाट सोचिने कुराहरू कुनै हालतमा पनि मानवसमाजको लागि हितकर बनेका छैनन् । यस कारण यस्तो अवस्थामा आफूलाई जन्म दिने पक्ष र आफूले जन्माएको पक्षमा परस्परमा प्रेम-सद्भावना, ममताको सुखानुभूति प्रदान गर्न हाम्रा यी चाडहरू न केवल हाम्रो देशमा मात्र लोकप्रिय हुने कुरा छ किन्तु

विश्वभरमा नै यसको आस्था हुने कुरा छ। विश्वभरका मानिसले यसलाई रुचाउने कुरा छ। किनभने यो चाड मानवमात्रले अनुकरणीय हुनुको साथ-साथ यसमा हाम्रो कुनै धर्मको बन्धन पनि छैन।

## पौराणिक कथा र किंवदन्ती

( १ ) एकदिन शिवजी पशुयोनिमा जन्म लिई मृगको रूपमा घुमिरहेका थिए। धेरै काल बित्दा पनि शिवजीको कतै पत्तो नभएकोले दु:खी मन भएका इन्द्रादि देवताहरू मिलेर ब्रह्माजीकहाँ पुगे। ब्रह्माजीले पनि शिवजी कहाँ हुनुहुन्छ भन्ने कुरा पत्ता लगाउन सकेनन्। आखिर ब्रह्मा, विष्णु, इन्द्र आदि सबै देवताहरू महादेवको खोजीमा यताउती घुमिरहेको बखत कुनै अदृश्य देवीले शिवजी मृग-लीलामा विचरण गरिरहेको कुराको संकेत दिनुभयो। यस कुरालाई सुनेर ब्रह्मादि देवहरू शिवरूप मृग भएकै ठाउँमा आइपुगे। यसै बखत एक सिंगमात्र भएको विलक्षण स्वभाव भएको मृगलाई देखेर अवश्यमेव यही शिव हो भनी हत्पत सिंगै समात्न पुग्दा सिंग भाँचिएर तीन टुक्रा भयो। त्यसपछि आकाशवाणीको रूपमा शिवजीले भन्नुभयो—"हे ब्रह्मादिदेवता हो, मेरो यो सिंग आकाश पाताल तथा मर्त्यलोकमा स्थापना गर्नु, त्यसबाट ठूलो पुण्य मिल्नेछ।" महादेवको यही आज्ञाअनुसार भाद्र कृष्ण चतुर्दशीको दिन ब्रह्माजीले आफ्नो हातमा रहेको सिंगबाट गोकर्णेश्वरको स्थापना गर्नुभयो।

( २ ) दन्तुर नामका एक वैश्य थिए। यिनी वेश्याका छोरा थिए। यस कारण यिनलाई तिम्रो बाबु को हो भनेर सबैले गिल्ला गर्दथे। यही कुरामा दुखित भएर उनी पुलह नाम भएका ॠषिकहाँ गएर आफ्नो

वेदनाहरू सुनाउन थाले। ऋषिले पनि उनलाई गोकर्णेश्वरको पूजा गर्ने र त्यही सगैको पितामह तीर्थमा स्नान र पिण्ड-दान दिनाले मुक्त हुने कुरा सुनाइदिए। यो कुरा सुनेर वैश्यको चित्त बुझ्यो र त्यहीअनुसार गोकर्णेश्वर-को पूजा गरी भाद्र कृष्ण औंसीको दिन कुश हातमा लिए आफ्ना पिताजीको नाउँमा पिण्ड दिन थाले। यिनको पिण्ड ग्रहण गर्न सारा पितृहरू एकत्रित भए। पिण्ड खान सबै पितृहरूले छोरा-छोरा भन्न थाले। यस्तो कुरा देखेर वैश्य अल्मलिए। कुनचाहिं मेरो बाबु हो भन्ने कुरा उनले निर्णय गर्न सकेनन्। आखिर विश्रवा ऋषिको योगसाधनाले खिचिएको ब्रह्माजीले उनलाई आफ्नो पिताजीको परिचय सुनाइदिए। यसरी ब्रह्माजीबाट आफ्ना पिताजीको परिचय पाएपछि उनलाई विधिपूर्वक तिल, पानी, कुश हातमा लिएर पिण्ड प्रदान गरे। जसको पुण्यले उनी चक्रवर्तीसम्म भए।

( हिमवत् खण्डबाट )

—:❀:—

# हरितालिका अथवा तीज

हाम्रो घर-घरमा हरितालिकाको महिमाको चर्चा हुन्छ। तर यस व्रतको विषयमा वस्तुस्थितिलाई लिएर विचार गर्दा सर्वप्रथम हाम्रो साहित्यमा यो कुरा कसरी कुन भावनामा लीन भएको छ, यस विषयमा अध्ययन गर्नु आवश्यक देखिन्छ। अवश्यमेव हरितालिकाको महिमा पुराणकारहरूको लेखनीबाट माथि पुऱ्याइएको छ। यसमा शका छैन हाम्रो पुराण साहित्य-मा यसको चर्चा भएको छ। यस कारण हरितालिकाको विषयमा चर्चा गर्दा पुराणसम्बन्धी साहित्यको वास्तविक रूपरेखालाई मनन गर्नु आवश्यक छ। हाम्रा पुराणहरू अष्टादश पुराणको नाउँले प्रसिद्ध छ। यद्यपि उपपुराण-हरूको सख्या धेरै छन्। पुराण-साहित्यको निर्माणकाल इतिहासकारहरूको भनाइअनुसार काव्य-नाटकजस्ता साहित्यिक ग्रन्थहरूको प्रचुर मात्रामा निर्माण हुनुभन्दा पहिलेको तथा ब्राह्मण उपनिषद् आदि वैदिक साहित्यको निर्माण भइसके पछिको समयलाई मानिएको छ। कोही-कोही इतिहासकारहरू पुराणमा उल्लेख भएका राजाहरूको वशक्रमलाई विचार गरेर विक्रम संवत्भन्दा चार-पाँच सय वर्षपहिलेदेखि विक्रम संवत्को पाँच-छः शताब्दी-सम्मका समयलाई नै पुराण-साहित्यको निर्माणकाल मान्दछन्। यसबाट यो कुरा स्पष्ट हुन्छ कि पुराण-साहित्यको निर्माणकाल त्यत्तिको प्राचीन छैन।

धार्मिक मनोवृत्तिले जस्तोसुकै रूप लिएता पनि पुराण-साहित्यको मुख्य ध्येय सर्वसाधारण जनतामा शैव तथा वैष्णव धर्मलाई व्यावहारिक

ढङ्गले मुख्यरूपमा लोकप्रिय बनाउनु हो। यही तान्त्रिक अभिध्येयलाई सफलीभूत बनाउन उहिलेका प्रतिभाशाली, पुराणकारहरूले उस वेलाको मनोभावनानुकूल आफ्नो समयको यावत् दर्शन, आचार-विचार, रीति-स्थिति, धर्म-कर्म, राजकाज आदि गहन विषयलाई पनि अनेक रोचक प्राचीन कहलिएका कथाहरूमा परिणत गरेर सर्वसाधारण जनतामा बोधगम्य बनाएको कुरा स्पष्ट छ। यद्यपि यस्ता कथाहरू निर्माण गर्दा सृष्टिदेखिको कुरालाई लिएर आकाश पातालदेखि मर्त्यलोकसम्म हुने अनेक लौकिक तथा अलौकिक दुवै किसिमका मनोवैज्ञानिक तत्त्वहरूको संयोग गन कुरामा पुराणकारहरूको कल्पना विचित्रको छ। यो कुरा पुराणलाई अनुशीलन गर्नेहरूबाट छिपेको छैन। यस कारण पुराणकारहरूले सोचेका कथाहरूमा मानव-समाजको कल्याशको दृष्टिले नायक नायिकाको रूपमा अनेक दिव्यरूपधारी देवदेवीहरू तथा अनेक नामधारी दैत्य-दानवहरूको अलौकिक कथा देखिएता पनि ती कथाहरूको निर्माणले शैव तथा वैष्णव धर्मको माध्यमद्वारा मानवसमाजलाई सदाचार तथा बहुजनहित हुने कुराको शिक्षा दिएको कुरा स्पष्ट छ। वास्तवमा आजसम्म शैव तथा वैष्णव धर्मलाई जनताको हृदयमा भिजाई राख्न पुराण-साहित्यले जुन योग दिएको छ त्यो ज्यादै महत्त्वपूर्ण छ।

सयौं वर्षको धार्मिक परम्पराले जस्तै रूप धारण गरेता पनि यस्तै कुरामा हरितालिका व्रत पनि आधारित भएको हामी देख्दछौं। व्यवहारिकताको दृष्टिले हरितालिका व्रतको आदर्श गौरीशकरको दाम्पत्य-जीवनमा केन्द्रित भएको छ। तर त्यसको प्रेरणा हामी मानव-समाजले ग्रहण गर्ने कुरामा पुराणकारहरूले ठूलो जोड दिएका छन्। यो कुरा ज्यादै घतलाग्दो छ।

उहिलेको हाम्रो परिपाटीअनुसार मानव-जीवनलाई चाहिने हरेक कुराको प्रेरणा ईश्वरको जीवनबाटै उपलब्ध गराइन्थ्यो। वास्तवमा हाम्रो सस्कृतिको रूप यस्तै मनोवैज्ञानिक स्थितिमा आधारित भएको हामी पाउँदछौं। कैलाशपति शिव र हिमालय पर्वतकी छोरी पार्वतीको वास्तविक इतिहासको ज्ञान हामी कसैलाई छैन भन्नुमा कुनै अतिशयोक्ति हुने छैन। तथापि लोकपरम्पराअनुसार सुन्दै आएका उमा-महेश्वरको दाम्पत्य-जीवनको अलौकिक मधुर मिलनका रोचक कथाहरूले हाम्रो समाजको रोम रोममा ठूलो असर गरेको छ। यस कारण मानव-समाजको दाम्पत्य जीवनमा पनि त्यस्तै सुख-शान्तिको मिलनलाई जगाउन गौरी शंकरको दाम्पत्य-जीवनको आदर्शले जन-समाजको मनोभावनालाई आकृष्ट गर्न खोज्नु अवश्यमेव हाम्रा पुराणकारहरूको सफल प्रयास हो।

मानव जीवनमा सुख-शान्तिको अभिलाषा हुन्छ। व्यवहारिक सुख-शान्ति वास्तवमा हाम्रो पारस्परिक माया ममता, विश्वास-भक्तिजस्तै भाव-हरूमा आधारित भएका हुन्छन्। पतिले पत्नीप्रति, पत्नीले पतिप्रति समान आस्था राख्नु, समान आदर्शले हेर्नु, जीवनसाथी बनाउनेजस्ता कुरामा स्त्री र पुरुषको परस्परमा आत्मिक चाहना हुनु आदि कुराहरू अवश्यमेव दाम्पत्य-जीवनमा व्यवहारिक सुखका मूलभूत कारण बनेका छन्। तर यस्ता कुराहरूबाट सरल ढङ्गमा अधिकाश जनताहरू लाभान्वित हुन पाउँ-दैनन्। जसबाट मानव-समाजको दाम्पत्य-जीवन सुखमय हुन सक्दैन। यही कुराको ज्ञान जन-साधारणको हृदयमा धर्मको सरल परिभाषाले बोधगम्य बनाउन गौरी शङ्करको दाम्पत्य-जीवनको आदर्शमा हरितालिका नाउँले पौराणिक कथाको सृष्टि भएको देखिन्छ।

भाद्र शुक्ल तृतीयाको दिन यो व्रत बस्ने हाम्रो परम्परा छ । यस कारण तृतीयाबाट यसलाई तीजको नाउँमा [illegible]दछन् । यो दिन पार्वतीले खास-गरेर आफूले रोजेको महादेवलाई आफ्नो जीवनसाथी बनाउन सखीहरू-सहित घरबाट भागेर एकान्त जङ्गलमा जुन व्रत जसरी बसेको कुरा पुराण-हरूमा उल्लेख भएको छ त्यहीअनुसार हाम्रा यहाँका नारीहरूले पनि हरितालिका नाउँको व्रत बस्ने चलन छ । वास्तवमा पुराणको भनाइ-अनुसार पार्वतीको शुद्ध अन्तरात्माले अनुशीलन गरेको यस व्रतको महिमा खूद पार्वतीलाई नै थाहा थिएन । आखिर पार्वतीको भक्तिले प्रसन्न भएका महादेवले त्यसको अपार महिमा रहेको कुरा व्यक्त गरेका थिए । यही ईश्वरीय वचनलाई आदर्श मानी अद्यापि हाम्रा घर घरका गृहिणीहरू आफ्नो आफ्नो स्थितिअनुसार यस व्रतलाई हरेक साल अनेक श्रद्धा तथा भक्तिले पालन गर्दछन् । वास्तवमा यो कुरा हामी मानव-समाजलाई हितकर नै देखिएको छ । यस व्रतले दिने आदर्शको भावनाले अवश्यमेव दाम्पत्य-जीवनका सहभागी हाम्रा नारी समाज लाभान्वित हुनेछन् । यसमा शका छैन ।

यो व्रत मुख्यतया शैव धर्मावलम्बीहरूले मनाउँछन् तापनि काठमाडौं उपत्यकाका केही शैव मतावलम्बी नेवारहरू यस व्रतलाई त्यत्तिको महत्त्वपूर्ण सम्झँदैनन् । यो कुरा विचारणीय छ ।

यहाँ एक कुरा विशेष विचारणीय छ कि मल्ल राजाहरूको भक्तपुर दरबारभित्र आफ्नो कला-कृतिहरूको सजावटले कुमारी चोक विशेष प्रसिद्ध छ । यस चोकको भित्तामा गौरी विवाहोत्सवको झलक लेख्न लगाएको कुरा त्यहाँको एक अभिलेखमा कुँद्न लगाएको छ । यो अभिलेख

अभिलेख-सग्रहमा प्रकाशित भएको छ तथा नेपालीहरूले मनाउने चाड-पर्वहरूको झलक पनि त्यही भित्तामा लेख्न लगाएको कुरा पनि त्यसै अभिलेखमा जनाएको छ। तर हिजोआज त्यसको महत्त्वलाई जान्ने या कदर गर्ने व्यक्तिको अभावजस्तो भएकोले भित्तामा लेख्न लगाएका ती महत्वपूर्ण पुरातात्त्विक वस्तुहरू मेटिइसकेका छन्। यो ज्यादै दु.खको कुरा छ। यदि अद्यापि ती कुराहरू सुरक्षित रहेको भए गौरी-विवाहको सम्बन्धमा अनेक गुरुतर महत्व दिई रचेका तीज र त्यस्तै अरू सास्कृतिक चाड-पर्वहरूको विषयमा हाम्रा उहिलेका मल्लकालिक नेपालीहरूको भावनालाई बुझ्न धेरै योगदान दिन सक्ने कुरा थियो। वास्तवमा हामीलाई चाहिने कुरा पनि यही हो। अर्को कुरा, गौरी शकरको दाम्पत्यजीवनको आदर्शलाई साकार गर्न निर्माण भएका शिव परिवारका अनेक मार्मिक ढङ्गमा कुँदिएका मूर्तिहरू काठमाडौ उपत्यकामा अनगिन्ती छन्। यसका मोटामोटी सख्या दुइ सयजति पुग्न आउँछ। मेरो विचारमा हरितालिकाको दिन यस्ता भावपूर्ण गौरी-शंकरको पारिवारिक मूर्तिहरूको दर्शन गर्न र पूजा गर्न अति उपयोगी देखिन्छ। यसबाट हाम्रो कलाको रक्षा हुनुको साथ साथ गौरी-शंकरको सुखमय दाम्पत्यजीवनको आदर्श हाम्रो समाजका नरनारीहरूको दाम्पत्यजीवनमा पनि प्रेरणादायक सिद्ध हुन सक्दछ। यद्यपि गौरीशकरको मूर्ति निर्माण गर्ने दार्शनिकहरूको सोचाइ यसमा भिन्नै छ।

## पौराणिक कथा

पर्वतराज हिमालयकी छोरी पार्वती महादेवसँग विवाह गर्न चाहन्थिन्। तर उनका बाबुचाहिंले भने पार्वतीलाई विष्णुसँग विवाह गरिदिने अठोट

गरिसकेका थिए। यो कुरा थाहा पाएर पार्वती आफ्ना सखीहरूको मदतले दूर जङ्गलमा भागेर महादेवको आराधनामा कठोर व्रत बस्न थालिन्। यस व्रतबाट महादेव खुशी भएर पार्वतीको सामुन्ने प्रकट भए। पार्वती ज्यादै हर्षित भइन्। महादेवले उनलाई के वर माग्छौ माँग भनेर सुनाए। पार्वतीले नम्र भावले भनिन्—मलाई अरू केही चाहिंदैन, यदि हजूरबाट मलाई वरदान बक्सने हो भने हजूरलाई नै म आफ्नो पति बनाउन चाहन्छु। यही मेरो अगाध इच्छा हो। पार्वतीको यो कुरा सुनेर महादेवले तथास्तु भनेर गौरीलाई वरदान दिए। वास्तवमा पार्वतीले महादेवलाई पति बनाउन बसेको यो व्रत 'हरितालिका' भन्नुको मतलब यो छ कि पार्वतीलाई उनका आलिहरूले अर्थात् सखीहरूले हरण गरी कसैले नदेख्ने ठाउँमा लगी व्रत बस्न लगाएका थिए। यस कारण यस व्रतको नाउँ हरितालिका रहन गएको हो।

( भविष्योत्तर पुराणबाट )

———

# गणेश चौथी—एक विवेचना

गणेशको विलक्षण स्वभाव तथा अद्भुत रूपले प्रायः सबै धर्मावलम्बीहरूलाई आकर्षण गरेको छ। यसले विघ्न हरण गर्दछ, कार्य सिद्धि दिन्छ भन्ने सास्कृतिक भावना हरेक सम्प्रदायका मानिसहरूको हृदयमा पनि एक समानको छ। तर गजानन गणेश को हुन् यसको अस्तित्व कुन तत्त्वमा आधारित छ, यस कुराको निर्णय गर्ने सन्तोषप्रद प्रमाणिक स्थलहरू आजसम्म एशियाभरका विद्वानहरूले पनि खोजी गर्न सकेका छैनन्। यद्यपि यसको प्रचार एशियाभरमा नै व्याप्त छ। कोही तिनलाई ब्रह्मा, विष्णु, महेश्वरभन्दा माथिको परमात्मामा गणना गर्दछन्। कोही यिनलाई शिव-पुत्र भनी पुकार्दछन्। वास्तवमा भाद्र शुक्ल पक्षको चौथीको दिन हाम्रो यहाँ ठूलो सास्कृतिक चाडको रूपमा जुन गणेशको पूजा हुन्छ त्यो गणेश ब्रह्मा, विष्णुभन्दा शक्तिशालीको रूपमा देखा परेको छ। यो कुरा हाम्रो स्कन्दपुराणमा वर्णित गणेशजीले चन्द्रमालाई श्राप दिएको प्रकरणको कथाले पुष्टि हुन्छ। किनभने त्यही कथाको प्रकरणमा चौथी व्रतको ठूलो महात्म्यको कुरा परेको छ। गणेशजीको यही अस्तित्व विषयको कुरालाई लिएर लगभग बाह्र सय बर्ष पहिले ठूला विद्वानमा गनिएका शकराचार्य-जस्ता दार्शनिकहरू पनि क्रुद्ध भएका थिए। शकर दिग्विजयमा उनले लेखेका छन् कि गणेश यदि शिव-पुत्र हुन् भने उनी सर्वशक्तिमान् परमात्माको रूपमा कसरी गणना गर्ने ? शकराचार्यको यो तर्क ज्यादै लौकिक रूपको छ। लगभग बाह्र सय वर्षजति पहिले नै हाम्रो मानव-समाजमा गणेशजीप्रति

यस्तो तर्क-वितर्क उठिसकेको कुरा यसबाट पुष्टि हुन्छ, वैदिक कालदेखि ख्याति पाइसकेको, अग्निपुराण तथा गरूड पुराणजस्ता ग्रन्थहरूमा ठूलो चर्चाको विषय बनिसकेको गणेशजीको विषयमा यसरी विद्वानहरूले युक्ति-सङ्गत अस्तित्वको आधार बनाउन कोशिश गरेको प्रयास देखिएता पनि सर्वसाधारण जनताले यस विषयमा त्यत्तिको चाख नलिएको कुरा गणेशजी-को विचित्र शक्तिको विषयमा विश्वास गर्ने हरेक काम गर्दा सर्वप्रथम 'श्रीगणेशाय नमः' भनी आराधना गर्ने प्राचीनकालदेखि चलिआएको हाम्रो प्रबल सास्कृतिक भावनाले व्यक्त गर्दछ। अर्थात् कतै शिव-पुत्रको रूपमा, कतै सर्वशक्तिमान् गणेशको पूजा हुँदै आएको छ।

हाम्रो देशमा पनि यही स्थितिमा गणेशजी देखापरेको छ। एशियाका अरू-अरू भागमाजस्तै नेपाली सभ्यताको केन्द्र बन्दै आएको नेपाल उपत्यकामा पनि गणेशजीको पूजा गर्ने प्रथा शैव, बौद्ध तथा वैष्णव आदि सबै मतका नेपाली समाजमा एकसमानको रहेको छ। यद्यपि आफ्नो-आफ्नो मतअनुसार कतै षड्वाङ्गधारी गणेशको मूर्ति देखापरेको छ त कतै त्रिपुण्ड्रक धारण गर्ने गणेशको मूर्ति देखिएको छ। कहीं एकदन्त गजाननको रूपमा प्रकट भएको छ त कहीं परशुधारी गणपतिको रूपमा साकार भएको छ। हाम्रो देशमा चलेको मूर्ति-कलाको परम्पराअनुसार गणेशजीको मूर्ति निर्माण गर्ने तरिका पनि भिन्नै ढङ्गको छ। हाम्रो यहाँ हरेक मूर्तिको आफ्नो-आफ्नो लाक्षणिक अनुपातको हिसाब क्रमवद्ध तरीकाले शास्त्रीय ढङ्गमा बन्धेज गरिएको छ। त्यसैको अनुपातमा गणेशको मूर्ति बनाउँदा हाम्रो यहाँ तीन तालको हिसाबले आङ्गिक विन्यास हुनुपर्ने कुरा उल्लेख भएको छ। अर्थात् २८८ यवको एकाईको अनुपातमा गणेशको मूर्ति बन्दछ।

यस कारण हाम्रो यहाँ उपत्यकामा देखिएका गणेशका मूर्तिहरू प्राय' डल्लो र पुड्को रूपको हुन्छ। ऐतिहासिक दृष्टिकोणले विचार गर्दा लिच्छवि-कालमा बनेका गणेशका छुट्टै प्रमाणिक मूर्ति देखा परेको छैन। कुनै पनि ढुङ्गा या चट्टानमासमेत हात्तीको सूँडको बान्की परेको आकार देखिने-बित्तिकै गणेशको मूर्तिलाई साकार गर्ने, त्यसको पूजा गर्ने हाम्रा पूर्वजहरूले अवश्यमेव शिव पुत्र गणेशजीलाई नचिह्नेको होइनन होला। किन्तु अनेक सम्प्रदायका, देवी-देवताहरूका मूर्तिले भरिपूर्ण भएको हाम्रो उपत्यकामा लिच्छविकालिक सभ्यतामा गणेशको पृथक् अस्तित्वलाई साकार गर्ने मूर्तिहरू देखा नपर्नु विचारणीय छ। गणेशजीलाई परमतत्त्व परमात्माको रूपमा साकार गरेर त्यसको पृथक् अस्तित्वलाई कायम गर्ने ढङ्गका अनेक धार्मिक सम्प्रदायहरूको विषयमा खोजी भएको छ। सम्भवतः गणेश शिव-पुत्रको रूपमा हाम्रो यहाँ लिच्छविकालमा देखा परेको हुन सक्छ तापनि जुन कुरा शिव-परिवारका पाषाण मूर्तिहरूको ऐतिहासिक क्रमले बताउँछ, पृथक् परमतत्त्वको रूपमा यहाँ लोकप्रिय हुन गणपत्य सम्प्रदायको प्रचार भइसकेको रहेनछ कि भन्ने तर्क उठ्नु स्वाभाविक छ।

हाम्रो लिच्छविकालिक साहित्यको अध्ययन गर्ने साधनहरू ज्यादै सीमित छन्। हाम्रा पुस्तकालयहरूमा संग्रह भएका जति हस्तलिखित ग्रन्थहरू देखिएका छन् ती प्रायः सबै लिच्छविकालपछि नै लेखिएका छन्। यस्ता ग्रन्थहरूमा गणेशसम्बन्धी अनेक धार्मिक ग्रन्थहरू पनि परेका छन्। गणेश चतुर्थीको पूजाको प्रकरणमा गणेशजी पूर्णतया तान्त्रिक-जगत्मा लीन भइसकेको कुरा अलिनिकाय विधिमा गणेशको पूजा गर्ने ग्रन्थहरूले बताउँछ। अलिनिकाय विधि के हो, यो कुरा हाम्रा वीर पुस्तकालयमा

रहेका अलिनिकाय विधि नामक ग्रन्थहरूको अध्ययन गरे थाहा हुने कुरा छ । वास्तवमा लिच्छविकालपछि तन्त्र-मन्त्रको प्रभावभित्र गणेशका मूर्तिहरू देखा परेको कुरा श्मशान, ढुङ्गेधारा आदि स्थानहरूमा अधिकतया उपलब्ध हुने शिव-पार्वती या शिव-परिवारका तान्त्रिक मूर्तिहरूले बताउँछ । प्रमाणिक शिव-परिवारका मूर्तिहरूको क्रममा पाटनको गुणकामदेवको समयमा १०४३ वि० स० तिर स्थापना भएको शिव-परिवारको मूर्ति आउँछ । यहाँभन्दा प्राचीन शिव-परिवारका प्रमाणिक मूर्तिहरू देखा परेका छैनन् । यद्यपि कलाविवेचकहरू पशुपतिको आसपासका कतिपय शिव-परिवारका मूर्तिहरू प्रमाणिक नभए पनि कलाको दृष्टिले लिच्छविकालका मूर्तिकलामा गणना गर्दछन् । यस्ता शिव-परिवारका मूर्तिहरूमा गणेश शिवका पुत्रको रूपमा देखा परेको छ । जुन शिवको आसपासमा या पाद-पीठमा गणपतिको रूपमा नाचिरहेको हावभावमा कुँदिएको हुन्छ । तन्त्र-मन्त्राचार्यहरूको मुख्य मनोनिग्रह गर्ने ठाउँ श्मशान रहेको कुरा सर्वविदित छ । यसकारण विशेष गरेर महामाया भनी पुकारिने श्मशानका शिव-परिवारका मूर्तिहरूमा गणेशको मूर्ति देखापर्नु गणेशजी शिवको संगसंगै तान्त्रिक-जगतमा ओर्लेको कुरा स्पष्ट छ ।

यसपछि हाम्रो प्राचीन मल्लकालको समयको सरस्वतीको मूर्तिसग गणेशको मूर्ति देखा परेको छ । सरस्वतीको मूर्ति यद्यपि विद्याकी देवीको रूपमा साकार गर्ने हाम्रो परम्परा रहेको छ । तर तान्त्रिकहरूको आराधनामा यसको रूप भिन्नै छ । शैव-मतका आचार्यहरू सरस्वतीलाई पनि उमाको अंशमा विलीन गर्ने कोशिश गर्दछन् । यही हेतु शिव-पुत्र गणेशजी सरस्वतीको साथसाथ राख्ने प्रथा हाम्रो मूर्तिकलाको प्रकरणमा देखिएको

छ। श्मशानमा अनगिन्ती मृत व्यक्तिहरूको दाह-संस्कार हुन्छ। यस्तो ठाउँमा भूत-प्रेतहरूको डर हुन्छ। जसबाट हाम्रा बालबच्चाहरू पीडित हुन्छन् भनी हाम्रा ग्रन्थहरूमा उल्लेख भएका छन्। यस कारण हाम्रो देशमा तान्त्रिक युगको विशेष बोलबाला रहेको प्राचीन मल्लकालमा यसै भूत-प्रेतको शान्तिको लागि मृत व्यक्तिहरूको दाह-संस्कार गर्ने या गाड्ने ठाउँको आसपास गणेशसहितको सरस्वतीको मूर्ति स्थापना गर्ने प्रथा रहेको कुरा अद्यापि ती स्थानहरूमा देखिने यस्ता गणेश-सरस्वतीका मूर्तिहरूले बताउँछ। त्यसपछि मध्य मल्लकालको समयमा गणेश व्यापक रूपमा सर्वत्र देखा परेको छ। जसबाट टोल-टोलमा, घर-घरमा नै गणेशको आराधना गर्ने प्रथा अद्यापि चल्दै आएको छ। यस प्रकार गणेशजी हाम्रो जीवनमा कसरी एक सांस्कृतिक रूपमा खडा भएको छ भन्ने कुरा स्पष्ट हुन आउँछ। वास्तवमा गजानन गणेशको विषयमा ठीक-ठीक कुरा विचार गर्ने भए सर्वप्रथम हामीले हात्तीको रूपलाई उहिलेका मानिसले सोचेको दार्शनिक विचारलाई गहिरिएर सम्झनु अत्यावश्यक छ। यस्तो भएमा नै हामीले गणेशचतुर्थीको महत्त्व तथा गणेशको गरिमालाई बुझ्न समर्थ हुनेछौं।

## किंवदन्ती

एक दिन ब्रह्माजी परमात्मा परमतत्त्व गणेशजीको व्रत बसे। गणेशजी अत्यन्त खुशी भएर ब्रह्माको सामुन्ने प्रकट हुनुभयो र के माग्छौ माग म अत्यन्त हर्षित छु भन्ने आफ्नो आन्तरिक उद्गार सुनाउनुभयो। ब्रह्माजीले हात जोरेर "प्रभु ! ममाथि सृष्टिको अभिभारा छ। यसकारण सृष्टिको रचना-क्रममा मबाट कुनै भूल नहोस्" भन्नुभयो। ब्रह्माको उचित बचन सुनी तथास्तु

भनी गणेशजी अन्तर्ध्यान भए । यो कुरा चन्द्रमाले हेरिरहेका थिए । ब्रह्मा-जस्ता ईश्वरले गणेशजस्ता विरूपीका सामुन्ने नतमस्तक भई वर मागिरहेको देखेर चन्द्रमाले हाँसेर खिसी गर्न थाले । यो कुरा गणेशले थाहा पाएर रीसले चूर भई चन्द्रमालाई कसैले नहेरून्, जसले हेर्छ उनीमाथि कलंक लागोस् भनी श्राप दिएर गए । यो श्राप पाएर विक्षुब्ध भएका चन्द्रमा यताउती लुक्दै थिए । चन्द्रमा नहुँदा दुनियाँमा हाहाकार मच्चियो । आखिर ब्रह्माजीसमेत सारा देवी-देवताहरू मिली गणेशजीलाई खुशी पारी श्राप मुक्त गर्न लगाए । तर गणेशजीले भने "गणेश चौथीको दिन त यो मेरो श्राप लागेर नै रहनेछ ।" यही कारण यो दिन हाम्रो यहाँ गणेशको पूजा गरी चन्द्रमा नहेर्ने सांस्कृतिक परम्परा रहेको छ !



# इन्द्र-जात्रा : एक—जिज्ञासा

आजको हाम्रो सहज बुद्धिले यस कुरामा हामीलाई प्रेरणा दिन्छ कि हाम्रा सास्कृतिक चाड-पर्वहरू हामी नकेवल रमिता या धार्मिक दृष्टिकोणले मात्र मनाऔं किन्तु ती चाड-पर्वहरूमा सन्निहित भएका ऐतिहासिक कुरा र व्यावहारिक कुरालाई बुझेर नै मनाऔं। वास्तवमा यो प्रेरणा वर्तमान युगको प्रेरणा हो। वर्तमान युगका हामी जनताले यस कुरामा अवश्य ध्यान दिनुपर्दछ।

इन्द्र जात्राको व्यावहारिक महत्त्व बुझ्न सर्वप्रथम हामीले वैदिक युग-देखि प्रसिद्ध भएका इन्द्रको वास्तविक स्वरूपलाई बुझ्नु आवश्यक छ। यद्यपि यो कुरा सरल छैन। पौराणिक भाषाअनुसार इन्द्र स्वर्गमा बस्ने देवताका राजा मानिएको छ। तर स्वर्ग कहाँ छ ? यस प्रश्नको उत्तर सरल लौकिक ढङ्गमा हामीले पाउन सक्दैनौं। मानवीय ढङ्गमा विवेचना गर्नेहरूको दृष्टिमा इन्द्र करीब पाँच हजार वर्षजति पहिले वेद-साहित्यको निर्माण हुन लागेको वेला मोहन-जो डड़ोको आसपासमा हुने द्रविड र आर्यहरूको बीचमा हुने संघर्षमा विशेष विजेताको रूपमा ख्याति प्राप्त एक वीर योद्धाको रूपमा देखा पर्दछ। यस्तो व्यक्तिको लागि स्वर्ग कहाँ कल्पना गर्न सकिएला यो कुरा विचारणीय छ।

लगभग दुई हजार वर्षपहिले नै निर्माण भइसकेका चरक आदि प्रमाणिक ग्रन्थहरूमा भरद्वाजजस्ता आचार्यहरू आयुर्वेद-शास्त्र अध्ययन गर्न इन्द्र-कहाँ गएको कुरा पनि उल्लेख भएको छ। किनभने हाम्रो परम्पराअनुसार

इन्द्र आयुर्वेद-शास्त्रका पनि विशेष ज्ञाता थिए। ती ग्रन्थहरूको अवलोकनले त्यस वेला इन्द्र बसेको ठाउँ हिमालयको आसपास रहेको कुरा झल्केको छ। तथा इन्द्रले बनाइदिएका भनी उल्लेख भएको दिव्य औषधिहरू पनि हिमालयको आसपासमा उम्रने जडीबूटीहरू नै रहेका छन्। त्यसमा कुनै अलौकिक जडीबूटीहरू देखिएको छैन। त्यस्तै, अनेक धार्मिक प्रसंगमा पनि स्वर्ग शब्दले हिमालयको भूमिलाई नै सकेत गरेको छ। वास्तवमा स्वर्ग भन्ने ठाउँ हिमालयको आसपास नै रहे इन्द्र बस्ने शहर अमरावती कहाँ होला भन्ने प्रश्नले हिमालयको काखमा बस्ने हामीलाई विशेष रूपमा जिज्ञासु बनाउनु स्वाभाविक छ।

लौकिक तथा अलौकिक दुवै रूपमा देखापर्ने इन्द्रका धेरै नाम छन्। त्यसमध्ये पर्यायवाची शब्दहरूमा 'वास्तोष्पति' भन्ने शब्द पनि परेको छ। यस शब्दको अर्थ घरको जग्गाका मालक भन्ने रहेको छ। यस सिलसिलामा उहिलेका हाम्रा पूर्वजहरूले वर्तमान कान्तिपुर शहरलाई बसाउँदा त्यसबेलाको प्रचलित स्थानीय मुख्य भाषाको आधारमा यस ठाउँलाई 'यँ दे'' भन्ने सज्ञा दिएको कुरा औचित्यपूर्ण देखिन्छ। किनभने 'यँ' शब्दले इन्द्रलाई बुझाउँछ। इन्द्र वास्तोष्पति भएको हुनाले नयाँ घरहरू बन्दै शहरको रूप लिन लागेको काठमाडौ उपत्यकाको मध्यभागको बस्तीलाई इन्द्रकै नाउँले पुकार्नु युक्तिसगत नै देखिन्छ। आखिर कुनै नयाँ ठाउँको नामकरण हुनु आवश्यक छ। तर यो नामकरण कहिले कुन बखत भयो, यसको प्रमाणिक इतिहास पत्ता लाग्न सकेको छैन।

अर्को कुरा, भाद्र महीनालाई तिथिको क्रमले नेवारी भाषामा 'यँला' भन्ने चलन छ। 'यँला'को माने हो इन्द्रको महीना। वास्तवमा भाद्र महीनालाई

'यँला' भन्नु पनि त्यत्तिकै सार्थक देखिन्छ। किनभने उहिलेका हाम्रा पूर्वज-हरूलाई पानी कसरी पर्दछ, बादल के हो, बादलको बीचमा भयानक गडगडाहट शब्दले पैदा हुने बिजुलीको रूप के हो, इत्यादि कुराको विषयमा आज हामीले जानेका कुराको जस्तो ज्ञान अवश्यमेव थिएन। उनीहरू यस्ता कुरालाई आफ्नै ढङ्गले सोच्दथे। जसको परिणामस्वरूप बादलभित्र मानव-आँखाले नदेखिने एक क्रियाशील शक्तिको कल्पना हुन थाल्यो। जसले पानी वर्षाउँछ, वज्रको प्रहार गर्दछ, आँधी-तूफानको सृष्टि गर्दछ, वास्तवमा त्यही शक्ति मानवताबाट दूर रहेर इन्द्रदेवको रूपमा परिणत भएको पनि हामी देख्दछौं। काला-काला बादलका ढिक्काहरू नै इन्द्रले चढ्ने हात्ती ऐरावत बन्यो। अत्यन्त वेगले बग्ने आँधी-तूफान नै इन्द्रको घोडा उच्चैश्रवा बन्यो। हावाको परस्परमा हुने सघर्षले पैदा हुने बिजुलीको चम्का-हट नै इन्द्रको हथियार वज्र बन्यो। मानौ बादलको अशाशले नै इन्द्रको समष्टि रूप पैदा भएको छ। यो कति रोचक र सार्थक छ, पाठकहरूले स्वयं विचार गरून्। वास्तवमा इन्द्रको जुनसुकै विविधरूप देखा परेता पनि बादलको अंशाशबाट पैदा भएको प्रतिकात्मक इन्द्रको स्वरूप नै हाम्रो चाड इन्द्र जात्रासित सम्बन्ध रहेको हामी देख्दछौ तथा भाद्र महीनालाई यँला भन्नु पनि यसै कुरामा आधारित भएको छ। किनभने यो महीना मानव-कल्याणको दृष्टिले मानव-इच्छानुकूल मेघको गति हुन्छ। खेतीवालहरूलाई पानी मिल्यो। हराभरा खेतमा धानको बाला झुल्न थाले। यस्तो अवस्थामा खेतीवालहरूको दृष्टि आकाशमा गुडगुडाइरहेका अथाह बादलप्रति आकृष्ट हुनु स्वाभाविक छ। भाद्र महीनामा प्रकृतिले नै मानव-इच्छानुकूल विस्तार-विस्तार पानी पर्न कम हुँदै जान्छ। यस कुराले हर्षित मन भएका उहिलेका हाम्रा

दाजू-भाइ दिदी-बहिनीहरूले इन्द्रकै देश अर्थात् यँ देशमा बस्ने नाताले इन्द्रकै महीनामा अर्थात् इन्द्ररूपी शक्तिले विशेष अनुग्रह देखाउने वेलामा बादल-भित्र लीन भएको शक्तिरूपको प्रतीकात्मक इन्द्रको पूजा गर्नु, इन्द्रको जात्रा गर्नु कुनै अनौठाको कुरा छैन। उहिलेका धार्मिक मनोवृत्ति भएका जनताको हृदयमा यस प्रकारको श्रद्धा उत्पन्न हुनु स्वाभाविक कुरा छ। यही मार्मिक तथ्यलाई हाम्रा ठूलो सांस्कृतिक पर्व इन्द्र जात्राले बताउँछ। रोचक किंव-दन्तीको जादूमा यद्यपि यस्ता वास्तविक कुराहरू विलीन भएता पनि इन्द्र जात्राको वास्तविकता यसै कुरामा आधारित भएको छ। यसमा शंका छैन। यो जात्राको परम्परा कहिले, कुन वेलादेखि मनाइयो यो कुरा-चाहिं खोजीको विषय छ।

तर, वर्तमानकालमा मनाइने इन्द्र जात्रामा अनेक रोचक तथा ऐति-हासिक कुराहरू पनि थपिंदै आएका छन्। हाम्रो यहाँ इन्द्र जात्रा आठ दिन-सम्म मनाउने चलन छ। आजकालको चलनअनुसार द्वादशीको दिन हनुमानढोकाको अगाडि हुने राजकीय ध्वजोत्थानमा लिङ्ग गाड्ने समारोहबाट इन्द्र जात्राको उत्सव प्रारम्भ हुन्छ। इतिहासकारहरूको भनाइ-अनुसार इन्द्र जात्रामा हनुमानढोकाअगाडि ध्वजोत्थान गर्ने परम्परा पृथ्वीनारायण शाहका छोरा प्रतापसिंहले चलाएका थिए। यद्यपि इन्द्रचोक आदि स्थानहरूमा गाड्ने लिङ्गको सांस्कृतिक परम्परा ज्यादै पुरानो देखिन्छ। यस उत्सवमा लिङ्ग गाडेको दिनदेखि नै ठाउँ-ठाउँमा, विशेष गरेर भयानक तर केवल मुण्ड रूपको भैरवको मूर्तिको पूजा गर्ने चलन पनि छ। हाम्रो मूर्तिकलाको परम्परा यद्यपि यस्ता मूर्तिहरूको निर्माण गर्ने चलन-चल्ती भएको कुरा माथि उल्लेख भएअनुसार प्रमाणिक दृष्टिकोणले लिच्छविकाल-

देखि नै रहेको हामी देख्दछौं। तर लिच्छविकालमा यस्ता मूर्तिहरूको भैरवको रूपमा ठूलो मान्यता भएको देखिंदैन। केवल शून्य निराकार, विशाल आकाशको द्योतकको रूपमा मात्र रहेको हामी देख्दछौं। यसकारण त्यही प्राचीन परम्पराअनुसार आकाशमा हिंड्ने बादलहरूको शक्तिरूप इन्द्रको पूजा गर्ने वेला, विशेष गरेर इन्द्रकै अगाडि राखेर निराकार आकाशको प्रतिनिधित्व गर्ने तत्वहरूको पूजा हुनु युक्तिसगत नै देखिन्छ। यही कुरा हाम्रो इन्द्र-जात्रामा, विशेष गरेर इन्द्रचोकको आकाश-भैरवको अगाडि उच्च आकाशमा बस्ने व्यक्तिको प्रतिनिधित्व गर्न बनेको जस्तो भान हुने अग्लो मञ्चमाथि प्रदर्शन हुने इन्द्रको प्रतिमाले बताउँछ, तर भैरवीरूपमा पछि मल्लकालमा तान्त्रिकहरूको साधनाले अनेक जटिलता थपिएको हुनाले उपरोक्त तथ्य कुरा आजको हाम्रा दृष्टिमा अलिकति धूमिल भएको कुरालाई पनि हामीले विचार गर्नुपर्दछ। किनभने उहिलेको परिस्थितिमा धान पाक्ने वेला विशेष गरेर एक राष्ट्रले अर्को राष्ट्रमाथि आक्रमण गर्ने हाम्रो परम्परा रहेको छ। यसकारण यस वेला सबै राष्ट्रहरू सतर्क हुन्छन्। अकस्मात् सामना गर्नुपर्ने युद्धको स्थितिलाई निबट्याउन आफ्ना-आफ्ना सैनिकलाई तयार गरी राखेता पनि दैवी शक्तिलाई हस्तगत गर्ने कुरामा पनि त्यक्तिकै दत्तचित्त हुन्छन्। यस कुराले पनि उहिलेको अवस्थामा सर्वशक्तिमान् शिवत्वमा लीन भएका भैरव आदिको पूजा धान पाक्ने वेला हुनु माथिकै कुरासग सम्बन्ध राख्छ।

श्री पृथ्वीनारायण शाहले कान्तिपुरलाई पूर्णतया कब्जा गरेको दिन पनि यस उत्सवभित्रै पर्दछ। इतिहासकारहरूको भनाइअनुसार त्यस वेला कान्तिपुरका राजा जयप्रकाश मल्लले वर्षौंदेखि शत्रुले घेरिएकोले उत्पन्न आफ्नो

र आफ्ना प्रजाको दुर्बल मनलाई मजबूत पार्न अनेक ढङ्गले दैवी शक्तिलाई पनि हस्तगत गर्न उद्योग गरेका थिए । जसको परिणामस्वरूप तुलजा भवानीलाई खुशी पार्न इन्द्र जात्राको उत्सवमा नै कुमारीको रथ जात्रा गरी नगर परिक्रमा गर्ने परम्परा चलाएका थिए । तर कुमारी रथ-जात्रा चलिरहेकै बखत पृथ्वीनारायण शाहको सैन्यले कान्तिपुरलाई घेरा हालेर ल्याएको कुरा इतिहासमा परेको छ । यो कुरा विचारणीय छ । इन्द्र जात्राकै दिनदेखि जयप्रकाश मल्लको पतन भयो । तर शाहवंशी राजाले मल्ल-संस्कृतिलाई हरण गरेको छैन । हरेक साल इन्द्र जात्राको उत्सवमा कुमारी-को रथ तान्ने परम्परा अद्यापि राजकीय ढङ्गमा कायमै रहेको छ । झन् शाह-कालको उदयपछि हाम्रो इन्द्र जात्रामा अनेक रोचक विशेषताहरू पनि थपिन थाले । जस्तै, कुमारी तान्ने वेला विजयको प्रतीकस्वरूप हात हतियारको प्रद-र्शन गर्ने, खुद राजाले नै जनतामा रुपियाँ छर्दै जुलुसमा भाग लिने, हनुमान ढोकामा राती इन्द्र जात्राको आठै दिन अनेक सांस्कृतिक नाच-गानहरूको आयोजना गर्ने, नगरमा भव्य दीपावली गर्ने आदि आदि । यहाँ एक कुरा विचारणीय छ कि सात सालको क्रान्तिपछि यस उत्सवमा सैनिक प्रदर्शन गर्ने प्रथाचाहिं बन्द भएको छ । यस प्रकार हामी इन्द्र जात्राको उत्सव अनेक रोचक तथा ऐतिहासिक कुराको विविधताले रङ्गिएको देख्दछौं । जसमा प्रत्येक नयाँ वर्षको उत्साहले व्यतीत हाम्रो समाजको मनोभावना-नुकूल सुख-दुःखको कथा कोरिंदै आएको छ जसलाई यथार्थवादी दृष्टिले आज हामीले सोच्नु आवश्यक छ ।

## पौराणिक कथा

एक समयमा देवता र दानवमा ठूलो युद्ध भयो । त्यस युद्धमा देवता-

हरू धेरैपल्ट दानवहरूबाट पराजित भए। अन्तमा सबै देवताहरू मिलेर भगवान् विष्णुको शरणमा पुगे। विष्णु भगवान्‌ले पनि इन्द्रलाई एउटा ध्वजा दिनुभयो र भन्नुभयो आज मैले यो ध्वजा इन्द्रलाई दिएको हुनाले अबदेखि यो ध्वजा इन्द्र ध्वजौक नामले प्रसिद्ध हुनेछ। जसले इन्द्र ध्वजाको पूजा गर्नेछ त्यसको विजय हुनेछ। इन्द्रले पनि विष्णुको आज्ञाबमोजिम त्यस ध्वजालाई पूजा गरेर उभ्याए अनि त्यसको मुनि सबै देवताहरू एकत्रित भएर दानवहरूसग लड्न गए। यसपल्ट लडाइँमा इन्द्र ध्वजाको प्रभावले देवताहरूकै विजय भयो। यही हेतु हाम्रो यहाँ पनि इन्द्र ध्वजाको महत्व बढ्न गएको देखिन्छ।

# कुमारी-जात्रा र कुमारी-तन्त्र

समय-समयमा मनाइने हाम्रा सांस्कृतिक चाड-पर्वहरू रोचक हुनु स्वाभाविक छ। तर ती चाड-पर्वहरूको वस्तुस्थितिबाट परिचित हुनु पनि आवश्यक छ। जहाँसम्म वस्तुस्थितिको पत्ता लगाउने कुरा छ हाम्रो दृष्टिकोण व्यवहारिक हुनु अनिवार्य छ।

इन्द्र जात्राको अवसरमा नै हाम्रो कुमारीको रथ जात्रा पनि हुन्छ। यद्यपि हाम्रो देशमा कुमारीको रथ जात्रा गर्ने परम्परा इन्द्र जात्राको परम्परा झैं त्यत्तिको पुरानो छैन। तर कुमारीको पूजा गर्ने प्रथाचाहिं ज्यादै पुरानो नै देखिएको छ। हाम्रो देशमा स्त्री-रूप शक्तिका उपासक शाक्तहरूको प्रभाव प्राचीन लिच्छविकालदेखि नै रहिआएको कुरा मानदेवको समयमा बनेको पलाञ्चोकको भगवतीको मूर्ति र अंशुवर्माको समयमा स्थापना भएको वन-कालीको मूर्तिले बताउँछ। उहिलेको जमानामा खास गरेर रातो सिन्दूरे टीका लगाउने व्यक्तिहरू शक्तिका उपासक हुन्थे। शाक्तहरूले नै आफ्नो सम्प्रदायको विशेष चिह्नस्वरूप कुमारीले विशेष मन पराउने रातो सिन्दूरे टीका लगाउँथे। उहिलेको जमानामा शाक्त र अशाक्तको विशेष पहिचानका लागि रातो टीका उपयुक्त हुन्थे। किनभने शाक्त-मतलाई मन नपराउनेहरू या अरू धार्मिक सम्प्रदायका मानिसहरू यस प्रकारको रातो सिन्दूरे टीका लगाउँदैनथे। उनीहरूको आफ्नो आफ्नो भिन्नै लाक्षणिक टीका हुन्थे। यो कुरा विचारणीय छ। (तर आजकाल रातो टीका हिन्दू संस्कृतिको प्रतीक स्वरूप लगाउने प्रथा व्यापक रूपमा चलेको हुनाले रातो टीका

लगाउनेविक्तिकै शाक्त हुनुपर्दछ भन्ने कुनै नियम छैन । ) वास्तवमा हाम्रो प्राचीनकालदेखि नै कतै दुर्गा, कतै काली, कतै जयबागीश्वरी आदिको रूपमा विभिन्न शक्तिको पूजा गर्ने प्रथा देखिएकोले यसको पनि अनेक विभेद रहेको कुरा स्वत सिद्ध छ । अर्थात् कोही कालीका रूपमा सर्वशक्तिमान देवीको आराधना गर्दछन् त कोही दुर्गाको रूपमा । वास्तवमा उसले जुन-सुकै स्त्री रूप शक्तिको आराधना गरेता पनि परमार्थ तत्व एकै रहेका छ । उनीहरूको पूजाआजाको क्रम पनि एकै किसिमको हुन्छ यद्यपि बाहिरी रूप पृथक् हुन सक्दछ । हाम्रो कुमारी रथ जात्रामा साकार हुने, रातो सिन्दूरे टीकालाई विशेष मन पराउने कुमारी वास्तवमा यिनै शाक्तहरूको देन हो जुन कुमारी दुर्गा-भवानीको प्रतीकस्वरूप मानिएको छ । यो कुरा बुझ्नु कठिन छैन । किनभने हाम्रो गद्दीदरबारअगाडिको कुमारीको घरमा कुमारी दुर्गा-भवानीका प्रतीक हुन् भन्ने कुरा त्यस घरका ढोका, झ्याल आदि ठाउँ-ठाउँमा जडेका तोरणहरूले बताइरहेको छ । अर्थात् उहि-लेको वास्तुकलाको परिपाटीअनुसार कुनै पनि घर मन्दिरहरूको तोरणको मूर्ति त्यस घर-मन्दिरहरूदेखि सम्बन्ध रहेका देव-देवीहरूको ध्यानको प्रतिरूपमा उत्रेको हुनु आवश्यक छ । यस कारण कुमारी दुर्गा-भवानीको प्रतिरूप भएको हुनाले कुमारी बस्ने घरका सबै तोरणहरूमा दुर्गा-भवानीको स्पष्ट मूर्तिहरू कुँदिएका छन् ।

हाम्रा मल्ल राजाहरू विशेष शक्तिका उपासक थिए । तुलजा भवानी यिनीहरूका अभीष्ट देवी हुन् । कान्तिपुरका अन्तिम मल्ल राजा जयप्रकाश मल्ल जब राजनैतिक शक्तिको प्रतिस्पर्धामा दिन पर-दिन कमजोर हुँदै गइरहेका थिए तब दैवी शक्ति हासिल गर्न यिनले अनेक आफ्नो परम्परागत

तान्त्रिक साधनहरूलाई पनि अपनाउन कोशिश गरेको कुरा यिनका समयमा भएका क्रियाकलापहरूले बताउँछ। यो कुनै नौलो कुरो होइन। ढोकामा हनुमानको मूर्ति स्थापना गरेर लडाइँमा विजय हुन्छ भन्ने आदि धार्मिक कुरामा विश्वास गर्ने परम्परा हाम्रो यहाँ पहिलेदेखि नै रहिआएको हो। यस्तो अवस्थामा जयप्रकाश मल्लले पनि दैवी शक्ति हस्तगत गर्न प्रयास गर्नु स्वाभाविक कुरा छ। वास्तवमा कुमारी जात्रा यिनै ध्येयमा आधारित भएको छ। कुमारीको आराधनाले के फल उपलब्ध हुन्छ यस रहस्यात्मक तत्वबाट परिचित हुन कुमारी-तन्त्रको मर्मलाई सम्झनु आवश्यक छ।

माथि उल्लेख भएअनुसार हाम्रो देशमा प्राचीनकालदेखि नै अनेक सम्प्रदायका शक्तिहरूको प्रभाव रहेको हुनाले हाम्रो वीर पुस्तकालयमा यस विषयमा अनेक ग्रथहरू छन्। त्यसमध्ये विशेष गरेर कुमारी-तन्त्रहरूमा उल्लेख भएका कुराहरू यहाँ विचारणीय छन्। यस तन्त्रमा ईश्वरीले कुनै नयाँ-नयाँ कुराहरू जान्ने इच्छा गर्दछिन्। त्यस इच्छालाई पूर्ति गर्न ईश्वरले अनेक रहस्यात्मक ढङ्गमा अलौकिक कुराहरू बताउँछन्। एक ठाउँमा ईश्वरीले प्रश्न गर्दछिन्—"कलियुगमा सबभन्दा ठूलो को छ ?" यस महान् जटिल समस्याको समाधानको लागि ईश्वरले जवाफ दिन्छन्—"स्थूल सूक्ष्ममय तथा शब्द ब्रह्ममय यस विशाल ससारको भवचक्रमा देखिएको प्रकृतिको मुख्य कारण को हुन् यो कुरा कसैलाई थाहा छैन। प्रकृतिका अनेक रूप छन्। यस कारण मेरो विचारमा कलियुगमा अनन्तकालमा आश्रित रहेको स्त्री-रूप शक्तिभन्दा ठूलो अरू कोही छैन।" शिव-पार्वतीको वार्तालापको रूपमा व्यक्त भएको यो शाक्तहरूको दार्शनिक विचार ज्यादै

विचारणीय छ। उहिलेका दार्शनिकहरूले यस अनन्तकालमा आश्रित भएको स्त्री-रूप शक्तिलाई साधारण जनतामा बोधगम्य बनाउन अनेक भावका कालोको रूपमा मूर्तरूप प्रदान गरेका छन्। आज पूज्य देवीको रूपमा कालीको जुन मूर्ति हाम्रो समक्ष रहेको छ त्यो वास्तवमा त्यही दार्शनिक तत्त्वको व्यावहारिक रूप हो, यसमा शका छैन। यही मूर्त रूप कालीको रूपलाई मुख्य भुक्ति मुक्ति दिने आराध्यदेवी बनाई हाम्रा कुमारी-तन्त्रहरूमा अनेक भक्तजनहरूलाई आकर्षण गर्ने क्रियाकाण्डहरू र त्यसको अलौकिक फलको विषयमा अनेक कुराहरू लेखिएका छन्।

रहस्यात्मक ढङ्गले यान्त्रिक रूपमा यस शक्तिको साकार गर्न त्रिकोणको प्रयोग हुन्छ। अधोमुख त्रिकोण विशेष गरेर शक्तिको द्योतक मानिएको छ। कुमारी तत्वमा जहाँसम्म कन्याहरूलाई समावेश गर्ने कुरा आउँछ कुलाचारको छुट्टै प्रकरण रहेको छ। यस प्रकरणमा उल्लेख भएका कुला-चारका विधि विधानहरूमा शक्तिको प्रतिरूप पूजाको रूपमा नव-कन्याहरूको गुप्त स्थानमा पूजा गर्ने विधान मुख्य रूपको छ। वास्तवमा तन्त्रकारको भनाइ-अनुसार यो कुरा यसरी प्रचार गर्नु निषेध छ। तथापि शक्तिको पूजामा कुमारी कन्याहरू कसरी समावेश भए भन्ने वास्तविक तथ्य जनसमक्ष राख्न यहाँ अलि अश्लील जस्तो लाग्ने, तर धर्मभित्रको कुरालाई उल्लेख गरिएको छ। यसरी कुलाचारमा कन्याहरूलाई समावेश गर्दा विशेष गरेर नटी, कापालिनी, वेश्या, रजकी, नायकागना, ब्राह्मणी, शूद्रकन्या, गोपाल-कन्या र मालाकार कन्याको नाउँ स्पष्ट रूपमा उल्लेख भएको छ। छुवाछुत, जात-भात आदि कुराको भेदभाव नगरिएको यो कन्या-चयनको विषय सारै रोचक देखिएको छ। शाक्तहरूको प्रभाव हाम्रो देशमा व्यापक हुनुमा यो

एक अभीष्ट कारण रहेको छ। यसै प्रकरणमा ईश्वरीको जिज्ञासामा ईश्वरले यो कुरा भन्दछन् कि जसले स्त्री-रूप शक्तिको शुद्ध भक्तिभावले आराधना गर्दछ त्यो व्यक्ति अनेक आपत्-विपत्हरूबाट मुक्त भई परमेश्वरीको अभीष्ट बन्दछ। अर्थात् यस लोकमा मुक्ति र परलोकमा मुक्ति हुने हुन्छ। राजालाई संकेत गरेर यो कुरा पनि लेखिएको छ कि जुन राजाले यस स्त्री-रूप दैवी शक्तिको आराधना गर्दछ त्यस राजाको छत्रच्छायामा सारा नोकर-चाकरहरू वशीभूत हुन्छन्, आदि-आदि। वास्तवमा यही वाक्य देशमा ठूलो अविश्वास अशान्ति मच्चिरहेको वेला तुलजा भवानीका भक्त राजा जयप्रकाश मल्लको हृदयमा प्रभावकारी हुनु स्वाभाविक छ। अन्यथा संकटको वेलामा पनि कुमारीको ठूलो भक्तिभावले जात्रा गर्ने बुद्धि उनको हृदयमा उत्पन्न हुने कुरा थिएन। यो कुरा इन्द्र-जात्राको प्राचीन परम्परामा कुमारी-जात्रालाई पनि अन्तर्भाव गरी हरेक साल ठूलो आनन्द मनाउने हामी जनताले अलिकति उदार भएर सोच्नु आवश्यक छ। माथि उल्लेख भएका कुराहरू मेरा कपोल कल्पित कुरा होइनन्। यदि इतिहास तथा कुमारी-तन्त्रको अध्ययन गरेको खण्डमा उपरोक्त कुराहरू स्पष्ट हुनेछन् कि कुमारी जात्रा हामीले कसरी कुन तत्वको आधारमा हरेक वर्ष मनाउँदै आएका छौं।

———

# घटस्थापना र नवरात्री-पूजा

घटस्थापना गर्ने हाम्रो सांस्कृतिक विधि-विधानबाट दशैंको नवरात्री पूजाको शुभारम्भ हुन्छ। दशैं यद्यपि रामचन्द्रले रावणलाई वध गरी एक आसुरी शक्तिमाथि विजय प्राप्त गरेको पौराणिक कथामा आधारित भएको ठूलो चाड भएता पनि हाम्रो यहाँ यस पर्वमा विभिन्न धार्मिक तथा दार्शनिक पक्षको शक्ति-पूजा गर्ने परम्परा रहेको छ। जहाँसम्म शक्तिपूजाको सवाल छ, हाम्रो देशमा दुर्गा तथा दुर्गांशबाट उद्भुत भएका नवदुर्गाको विशेष स्थान छ। नवदुर्गाको क्रममा ब्रह्मायणी, माहेश्वरी, कौमारी, वैष्णवी, बाराही, इन्द्रायणी, चामुण्डा, महालक्ष्मी, र उग्रचण्डीको नाउँ आउँछ। वास्तवमा यिनै नवदुर्गाको आराधना गर्ने क्रममा दशैंको उत्सव नवरात्री पूजाबाट आरम्भ हुन्छ। अर्थात् प्रतिपदादेखि नवमीसम्म क्रमशः एक-एक देवीको पूजा हुन्छ, जात्रा हुन्छ।

हाम्रो धार्मिक रीति स्थितिअनुसार कुनै पनि देव-देवीको पूजा गर्दा सर्वप्रथम आफ्नो अभीष्ट देवीको आवाहन गर्ने प्रथा रहेको छ। आवाहनको मुख्य ध्येय हो आफ्नो अभीष्ट देवी-देवतालाई आफ्नो सन्निकट उपस्थित भएको ईश्वरलाई कुनै पवित्र वस्तुमा आसीन गराउने हाम्रो चलन छ। जुन पवित्र वस्तु अक्सर गरेर घटरूपको कलश हाम्रो धार्मिक जगत्मा लोकप्रिय बनेको छ। भावनात्मक ढङ्गले जब कुनै आराध्य देवी था देवता पवित्र कलशमा प्रविष्ट हुन्छन् तब ती देवी-देवताहरूको यावत् पूजा र ध्यानक्रम त्यसै कलशबाट आरम्भ हुन्छ। अर्थात् त्यस कलशको पूजा नै आफ्नो अभिष्ट

देवीको या देवताको पूजा हुन आउँछ । मानौं त्यो कलश आफ्नो अभीष्ट देवताको प्रतीक स्वरूप साकार भएको हुन्छ । यो हाम्रो प्रतीकात्मक सांस्कृतिक भावना ज्यादै रोचक ढङ्गको छ । वास्तवमा यसै वस्तुस्थितिको आधारमा हाम्रो दशैंमा पूजा हुने देवीको आवाहन-क्रममा घटस्थापना गर्ने विधि चलेको छ । विजया दशमी नै मुख्यरूपमा दशैंको पर्वदिन हो । तर हाम्रो धारणाअनुसार माथि उल्लेख भए झैं क्रमैले नवदुर्गाको पूजा गर्ने चलन हाम्रो देशमा रहेको हुनाले दशैंको नौ दिनअगाडि नै घटस्थापनाको रूपमा देवी-देवताको आवाहन गर्ने प्रथा रहेको कुरा विचारणीय छ ।

नवदुर्गाको सम्झनामा हुने नवरात्री-पूजा हाम्रो देशमा कहिलेदेखि चलेको हो यस विषयमा ठीक-ठीक ऐतिहासिक कुराहरूको अन्वेषण हुन सकेको छैन । वंशावलीहरूको आधारमा विचार गर्दा हाम्रो देशमा दशैं चाड मनाउने प्रथा चलाएको क्रममा देखिने विक्रमादित्यको कुरा ज्यादै अनौठो ढङ्गको छ । तर जहाँसम्म नवदुर्गा पूजाको कुरा छ, भक्तपुरको सांस्कृतिक परम्पराले हामीलाई धेरै कुरा बताउन सक्दछ । भक्तपुर शहर लिच्छविकालमा व्यक्तिको सुसंगठित ढङ्गमा शहर बनिसकेको कुराको उल्लेख पाइँदैन तथा भक्तपुरमा पाइने भग्नावशेषहरूले पनि यस शहरको प्राचीन स्थितिलाई त्यत्तिको स्पष्ट ढङ्गमा व्यक्त गर्दैन । तर वर्तमान भक्तपुर एक सुसंगठित नक्शामा बनेको शहरको रूपमा देखापरेको छ । यसको आकार शंखाकारमा उत्रेको कुरा हाम्रो साहित्यहरूमा उल्लेख भएको छ । शहरको चारैतिर नवदुर्गाका पीठहरू बनेका छन् । यी नवदुर्गाको यहाँ हरेक साल जात्रा हुन्छ, नाच हुन्छ : यसकारण भक्तपुरका जनताको हृदयमा नवदुर्गा-प्रति आस्था बढ्नु स्वाभाविक छ । रुद्रभैरव, चण्डभैरव, उन्मत्तभैरव, कपाल-

भैरव आदि विभिन्न भैरवहरूको शक्तिको रूपमा नै माहेश्वरी, कौमारी आदि नवदुर्गाहरू उद्भूत भएको कुरा हाम्रा तान्त्रिक ग्रन्थहरूमा उल्लेख भएको छ। यस्तो स्थितिमा यी शैव तान्त्रिक देवीहरूले घेरिएको वर्तमान भक्तपुर शहर हाम्रो देशमा तान्त्रिक धर्मको विशेष बोलबाला रहेको बखतमा नै निर्माण भएको हुनुपर्दछ भन्ने कुरा यहाँ उल्लेख गर्नु आवश्यक देखिंदैन। ऐतिहासिक दृष्टिकोणले विचार गर्दा लिच्छविकालपछि नै हाम्रो देशमा तान्त्रिक धर्मको ठूलो प्रचार भएको कुरा स्पष्ट छ। यस्तो स्थितिमा हाम्रो दशैंमा मनाइने नवदुर्गा पूजाको नवरात्री-क्रम तान्त्रिकहरूकै देन हुनुमा सन्देह छैन। भक्तपुर नवदुर्गाको विशेष केन्द्रस्थल रहेको हुनाले नवरात्रीको प्रचलन पनि सर्वप्रथम यहींबाट शुरू भएको हुनुपर्दछ। किनभने अद्यापि दशैंको नवरात्री-क्रममा भक्तपुरमा जुन सास्कृतिक रीति-रिवाज चलेको छ त्यो कुरा अन्यत्र ठाउँमा भन्दा नवरात्रीलाई सुहाउने ढङ्गमा छन्। जस्तै, घटस्थापनाको शुरूदेखि विहान-विहान क्रमैले ब्रह्मायणी आदिको आराधना हुन्छ, पूजा हुन्छ तथा वेलुका-वेलुका ती-ती देवीहरूको शहरमा जात्रा हुन्छ। मेरो विचारमा नवरात्रीको नवदुर्गा पूजाको यो क्रम ज्यादै सार्थक देखिन्छ। यहाँबाट नै पछिपछि कान्तिपुर तथा पाटनमा पनि नवरात्रीहरूमा ती-ती दुर्गाहरूको प्रतिकात्मक पीठहरूमा पूजा गर्ने, पीठको आसपासको नदी तीर्थस्थलहरूमा गई स्नान गर्ने प्रचलन बनाएको देखिन्छ। यो कुरा ज्यादै विचारणीय छ।

मुख्य राजधानीको रूपमा रहेको भक्तपुरमा प्राचीन समयदेखि नै शैव धर्मको ठूलो प्रचार रहेको छ। यसको मुख्य कारण शासकहरूले शैव धर्मलाई नै आफ्नो राजधर्म बनाउनु हो। भक्तपुरका मल्ल राजाहरूको अभीष्ट देवी

तुलजा भवानी हुन्। यस्तो स्थितिमा दशैं बौद्धहरूले आफ्नै धर्मअनुसार मान्ने भएता पनि दुर्गा पूजा गर्ने नवरात्री-क्रमलाई उपेक्षा गर्दैनन्। सबै धर्मावलम्बीहरूले पनि यसलाई समान आस्थामा मनाउँछन्। यसबाट यो कुरा स्पष्ट छ कि नवरात्री पूजाको प्रकिया शैव धर्मको केन्द्र उस वेला उपत्यका तीन राज्यको रूपमा विभक्त हुनुभन्दा पहिले मुख्य राजधानीको रूपमा रहेको भक्तपुरबाटै राजा-प्रजा सबैको एक मतले चलाएका थिए। अन्यथा दशैंको हाम्रो नवरात्री पूजा केन्द्रित हुने थियो या एक पक्षीय हुने थियो। देशका शैव तथा बौद्ध सबैले सबै ठाउँमा एकै भावनाले मान्ने थिएन।

—:※:—

# दशैंमा हाम्रो मौलिक परम्परा

पृथक् व्यक्तित्वको कारण प्रतिस्पर्धामा आफ्नो-आफ्नो व्यक्तित्वलाई माथि उठाउन प्राणीमात्रको जिन्दगीमा विजयको अभिलाषा हुनु स्वाभाविक कुरा छ। यस कारण हरेक व्यक्तिले विजयको चाहनाले विजय गाथा सुन्न र सुनाउन विशेष चाख देखाउँछन्। हाम्रो ठूलो चाड दशैं पनि त्यस्तै महत्त्व-पूर्ण विजय गाथामा आधारित भएको एक महान् सांस्कृतिक पर्व-दिन हो। अयोध्यावासी श्री रामचन्द्रले लङ्का विजय गर्न धेरै वर्षसम्म अनेक यातना सहेर ठूलो शक्ति र धैर्यले अनेक परिस्थितिको सामना गर्नुपरेको कुरा रामायणमा ज्यादै रोचक साहित्यिक ढङ्गमा उल्लेख भएको छ। यस कारण विजयको अभिलाषा गर्ने हामी नेपाली जनताको हृदयमा दशैंप्रतिको भावना अत्यधिक रुचिकर हुनु नैसर्गिक कुरा छ। तर विजय त्यसै हुँदैन। विजयको लागि गुरुतर शक्तिको आवश्यकता रहन्छ। शक्ति के चीज हो त्यो कसरी उपलब्ध हुन्छ, यो कुरा सरल ढङ्गमा व्यक्त गर्न सकिंदैन किनभने शक्तिको क्षेत्र व्यापक र रहस्यमय छ। यस कारण उहिलेको अवस्थामा विशेष शक्तिशाली राष्ट्रको रूपमा देखा परेको लङ्का विजय गर्न समर्थ रहेका श्री रामचन्द्रको भौतिक र आध्यात्मिक शक्तिको परिभाषा सरल साहित्यिक शब्दमा हुन नसक्ने हुनाले उहिलेका विज्ञ पुराणकारहरूले रामचन्द्रलाई सर्वशक्तिमान् विष्णु भगवान्को विभुरूपमा कल्पना गर्नु-परेको कुरा तथ्यवादीहरूले नबुझेको छैन। यद्यपि हाम्रो परम्पराअनुसार यस विषयमा धार्मिक दृष्टिकोण भिन्नै छ।

मानव-समाजको प्रयास सृष्टिदेखि अनन्त शक्तिको खोजमा अनवरत क्रियाशील रहेको कुरा हाम्रो मानव-इतिहासले बताउँछ। उहिलेका हाम्रा पूर्वी दार्शनिकहरू प्रकृतिको अद्भुत लीलादेखि ज्यादै प्रभावित थिए। त्यस प्राकृतिक लीलामा रहस्यमय महान् शक्ति सन्निहित भएको छ भन्ने कुरामा उनीहरू विश्वास गर्दथे। यस कारण उहिलेका अनेक दार्शनिकहरू प्रकृतिको नैसर्गिक लीलामा देखिने त्यस अनन्त रहस्यमय शक्तिको यथार्थतालाई हृदयङ्गम गर्न अनेक ढगले उद्यत रहेको कुरा हाम्रो स्थिति-अनुसार व्यवहारमा उत्पन्न भएको ईश्वरीय जगतको महिमाले बताउँछ। यही प्रसंगमा जन्मेका अनेक शक्तिको उपासना गर्ने शाक्तहरूको विभिन्न साधना हाम्रो दशैंमा आफ्नो संस्कृतिको अनुरूप अधिक लोकप्रिय ढङ्गमा प्रचलित भएको छ। किनभने विजय शक्तिमा निर्भर रहन्छ। शैवहरूको साधना दुर्गा भवानी र भगवतीको अंशाशमा पैदा भएका अनेक स्त्रीरूप देवीको आराधनामा आधारित भएको हुन्छ तथा त्यसैको प्रतिस्पर्धामा बौद्धहरू पनि शक्तिको उपासना गर्ने मार्गलाई अपनाएर योगिनी विद्याधरी-हरूको साधनामा जुटेको हामी देख्दछौं। जसबाट हाम्रो यहाँ दशैंको पर्व-दिनमा लकाधिपति रावणलाई बध गर्ने धार्मिक अभिनय गर्दा सबै मतका धर्मावलम्बीहरू अनेक आफ्नो-आफ्नो सम्प्रदायभित्रका देवीहरूको आरा-धना गर्ने अनुष्ठानमा विशेष भक्तिभावले तल्लीन भएका हुन्छन्। हाम्रो दशैंमा देखिने यो भावना ज्यादै रोचक ढङ्गको छ।

हाम्रो दशैंमा तान्त्रिक शाक्तहरूको प्रभाव धेरै काल पहिलेदेखि रहि-आएको कुरा माथि उल्लेख भइसकेको छ। यस प्रसगमा लिच्छवि राजा मानदेवको समयमा स्थापना भएको वि० सं० ५६० को पलाञ्चोकको भव्य

भगवतीको मूर्ति विचारणीय छ। यो एक प्रामाणिक मूर्ति हो। शक्तिको व्यावहारिक रूप उहिलेका जन-साधारणको हृदयमा बोधगम्य बनाउन अष्टादश भुज भगवतीको चेहरामा उत्रेको भावमा उहिलेका विज्ञ शाक्तहरूको प्रयास ज्यादै सार्थक रहेको देखिन्छ, किनभने अवश्यमेव त्यस भगवतीको मूर्तिले शक्तिको व्यापकतालाई व्यवहारिक रूपमा प्रदर्शन गर्दछ। शक्तिका पुजारी हाम्रा पूर्वजहरू भगवतीको दिव्यरूपले न केवल प्राचीनकालमा मात्र प्रभावित थिए किन्तु मल्लकालमा पनि भगवतीको विलक्षण रूपले अधिक प्रभावित थिए। यो कुरा मल्ल राजाहरूको दरबारभित्र इष्ट देवताको रूपमा ठूलो श्रद्धा र विश्वासले स्थापना गरिएका तुलजा भवानीको भव्य मन्दिरले तथा रहस्यमय आगम-गृहहरूले बताउँछ। यी मन्दिर आगम-गृहहरूले अद्यापि हाम्रो समक्ष अतीत कालको इतिहास बताइरहेका छन्। यहाँ हाम्रो दशैमा राजा-प्रजा सबैको ठूलो श्रद्धा र विश्वासले पूजा हुन्छ, बलि हुन्छ, यद्यपि भगवतीको मन्दिरभित्र मूर्तरूप भगवतीको प्रतिमा हुँदैन, केवल एक आवाहन गरी स्थापना गरिएको पूर्ण कलश हुन्छ। त्यसमा अधोमुखी त्रिकोणको एक लाक्षणिक रूप कोरिएको हुन्छ। यो कुरा ज्यादै रोचक र मार्मिक छ। वास्तवमा शक्तिको व्यावहारिक रूप जनसाधारणको हृदयमा बोधगम्य बनाउन विभिन्न प्रकारका अनेक असुर-बध गर्ने उपाख्यानमा निर्माण भएका अष्टादशभुज भगवतीको रूपले मूर्तरूप पाएता पनि शक्तिको यथार्थ रूपलाई हृदयङ्गम गर्न उद्यत रहेका तान्त्रिकहरूको लागि शक्तिको साधना गर्ने रूप अधोमुख त्रिकोणभित्र लीन भएको कुरा हाम्रो तान्त्रिक साहित्यमा उल्लेख भएको छ। यस कारण तुलजा भवानीको मन्दिरभित्र या आगम-गृहभित्र शक्तिको गूढरूप त्रिकोणको उपस्थिति र बाहिर ढुंडालमा र तोरणहरूमा अनेक असुर-बध गर्ने

भगवतीको मार्मिक तथा कलात्मक वीररसले भरेको रूप अंकित भएको कुरा हामी देख्दछौं । यो कुरा विचारणीय छ । यस प्रकार हाम्रो देशमा शक्तिको उपासना गर्ने क्रममा भगवतीको विशिष्ट स्थान छ । हुनत वनकालीको काली-को प्रतिमाले पनि लिच्छविकालिक शक्तिहरूको विभिन्न विचारधारालाई दर्शाउँछ तथा बौद्धहरूले मानिआएका शक्तिरूपका तान्त्रिक देवीहरूमा वज्रयोगिनीको मूर्ति भैं अरू मूर्तिहरू यद्यपि लिच्छविकालमा बनेका सप्रमाण उपलब्ध हुन सकेका छैनन् । तर मल्लकालमा स्थापना भएका यस्ता तान्त्रिक देवीहरूको मन्दिरहरू, आगम गृहहरू र मूर्तिहरू यत्रतत्र देखिएका छन् । बौद्धहरू हाम्रो यहाँ दशैंमा यस्ता तान्त्रिक देवीहरूको, जुन देवीहरू योगिनी, विद्याधरीका नामले प्रसिद्ध छन् , ठुलो श्रद्धा र विश्वासले पूजा गर्दछन् । वास्तवमा विजय सबैको अभीष्ट विषय भएकोले आर्यावर्तको व्यापक क्षेत्रमा लका विजय भावुक जनभावनाको अनुकूल केवल अयोध्यावासी श्री राम-चन्द्रको मात्र विजय नभएर एक मानवमात्रको या समस्त आर्यावर्तका जनताकै प्रतीक स्वरूप मनाउने परम्परा रहँदै आएको हुनाले अधिकाश हिन्दूसमाज आफ्नो-आफ्नो स्थितिमा यस पर्व-दिनलाई विजयादशमीको रूपमा मनाउँ-छन् । यस कारण विजयालाई शक्तिको रूपमा देख्न चाहने हामी नेपाली-हरूको मनोभावनानुकूल दशैंमा सास्कृतिक चहलपहल यसै कुरामा आधारित भएको कुरा उपरोक्त दुर्गा भवानी योगिनीहरूको शक्तिरूपको भावलाई दशैंमा आराधना गर्ने हाम्रो परम्पराले बताउँछ । यो कुरा प्रागैतिहासिक घटनासंग अप्रासंगिक रहेता पनि हाम्रो सभ्यतामूलक सस्कृतिको अनुकूल अप्रासगिक छैन । दीर्घकालदेखि चल्दै आएको यही परम्पराको विकासको परिणाम स्वरूप हाम्रो दशैंमा आज भोलि शक्तिको व्यवहारिक तत्वहरूको

पनि पूजा गर्ने परिपाटी चल्दै आएको कुरा पनि रोचक र सार्थकजस्तो देखिएको छ। जस्तै योद्धाको जिन्दगी बिताउनुपर्ने सैनिकको शक्ति उसको हतियारमा निर्भर रहन्छ। यसै कारण हाम्रो यहाँ दशैंमा सैनिक संस्थान-हरूको तर्फबाट हात-हतियार र निशानको पूजा हुन्छ, बलि हुन्छ। मल्ल-संस्कृतिको अनुरूप नागरिकहरूको तर्फबाट खास-खास केन्द्र-मा खड्ग जात्रा हुन्छ। कलाकारहरूको शक्ति आफ्नो-आफ्नो सीप तथा कलाकारिता प्रदर्शन गर्ने, आफ्ना-आफ्ना औजारहरूको पूजा गर्ने परम्परा रहेको हामी देख्दछौं। एवप्रकार एक विद्वान्‌को शक्ति उनको विद्यामा छिपेको हुन्छ। एक चिकित्सकको शक्ति उसको फलदायी भैषज्यमा आधारित हुन्छ। एक वस्त्रकारको शक्ति उसको तानमा सन्निहित भएको हुन्छ, आदि-आदि। यस कारण हाम्रो यहाँ दशैंमा यी सब विभिन्न प्रकारका व्यवसायीहरू आफ्नो-आफ्नो जिन्दगीको गरिमालाई माथि उठाउने शक्ति सन्निहित भएका पदार्थहरूको भावुक भएर पूजा गर्दछन्। वास्तवमा हाम्रो दशैंको विशेषता यसै कुरामा आधा-रित भएको छ। यद्यपि दशैं भारतमा पनि ठूलो श्रद्धाले मनाइन्छ। तर कुनै-कुनै कुरामा हाम्रो र उनीहरूको सामञ्जस्य रहन गएता पनि दशैंमा खड्ग जात्रा गर्नेमा एक विद्वान् बुद्धिजीवीको घरमा पुस्तकहरूको पूजा गर्ने परिपाटी अन्यत्र देखिंदैन। यो हाम्रो सांस्कृतिक विशेषता हो। यही विशेषताको परिणामस्वरूप हाम्रो देशमा विद्याको, कलाको, धनको, शस्त्रास्त्रको र बुद्धिको आदि अनेक मानवशक्तिदेखि सम्बन्ध रहेका तत्त्वहरूको प्रतीक स्वरूप खड़ा भएका देवदेवीहरूको पनि हाम्रो यहाँ

दशैंमा व्यापक ढङ्गले ठूलो भक्तिभावले पूजा गर्ने जस्तो कुनै पनि चाड-पर्वहरू हाम्रो देशमा छैन। यस कारण हाम्रो समाजमा यसको महत्व दिन पर-दिन गुरुतर हुँदै आएको कुरा स्पष्ट छ। दशैं आउँछ, जान्छ, तर हरेक साल त्यस पर्व दिनले आफ्नो विशिष्ट परम्पराको प्रभाव जनसमाजको हृदयमा छोडेर जान्छ। यदि हामीले आफ्नो सस्कृति अनुरूपको परम्परालाई बुझेनौं भने अवश्यमेव दशैंको प्रभाव शिथिल भएर जान्छ। यसमा शंका छैन। यही कुरालाई ध्यानमा राखेर लका विजयको उत्सवमा मनाइने दशैंमा हामीले किन भौतिक र आध्यात्मिक दुवै ढङ्गले व्यापक ढङ्गमा शक्तिको उपासना गर्ने परम्परा बनायो भन्ने कुरालाई सम्झनुपर्दछ। यसैमा हाम्रो दशै सार्थक रहन्छ।

## पौराणिक कथा

अयोध्यावासी रामचन्द्र दशरथका छोरा हुन्। एक दिन दशरथ राजाले खुशी भएर कैकेयीलाई केही कुरा माग्ने वरदान दिएका थिए। पछि त्यही वरको फलस्वरूप कैकेयीले आफ्नो छोरा भरतलाई राजसिंहासनको अधिकारी बनाउन आफ्नी जेठानीको छोरा रामचन्द्रलाई चौध वर्षको वनवास पठाउने कुरा गरिन्। वास्तवमा रामचन्द्र दशरथका प्रथम पुत्र भएका हुनाले राजसिंहासनका उत्तराधिकारी थिए। कैकेयीको कुरालाई दशरथले इन्कार गर्न सकेनन्। आखिर रामचन्द्र वनवास जान विवश भए। उनका साथमा सीताजी र भाइ लक्ष्मण पनि साथ लागे। दक्षिण भारतको यात्रामा रामचन्द्र यताउति घुम्दै समय बिताइरहेका थिए। त्यस वेला

लंका-राजा रावणले समस्त दक्षिण भारतका जनतालाई भयभीत बनाई राखेका थिए। एक दिन रावणको कुदृष्टि सीताजीमाथि पनि पर्‍यो। रावणले छल गरेर सीताजीलाई हरण गरेर लगे। यसबाट रामचन्द्र ज्यादै दुखित भए। यसैको फलस्वरूप रामचन्द्रले हनुमानजी र उनका सेनाको सहायताले लंकामाथि हमला गरे। युद्धमा दुष्ट रावणको अन्त भयो। लंकामाथि विष्णु-अवतार रामचन्द्रको विजय भयो। त्यसपछि रामचन्द्र आफ्ना भाइ र सीताजीसहित अयोध्या फर्के।

———

# तुलजा भवानी र काल-रात्री पूजा

शक्तिका उपासकहरूले श्रीरामचन्द्रलाई पनि शाक्त बनाउन, रामचन्द्रले पातालपुरी निवासी महीरावणलाई बध गरेर त्यहाँबाट तुलजा भवानीलाई साथमा ल्याई आफ्नो राजधानी अयोध्यामा अभीष्ट देवीको रूपमा स्थापना गरेको कुराको किंवदन्ती हाम्रो देशमा चलेको छ। वास्तवमा यो कुन रहस्यको कुरा हो विचारणीय छ। तर हाम्रा मल्ल राजाहरूले आफ्नो इष्टदेवी बनाई ठूलो राजकीय मान दिइएको जुन तुलजा भवानी हाम्रो देशमा छ त्यो रामचन्द्रको समयको तुलजा भवानी नै अनेक परम्पराबाट हाम्रा मल्ल राजाहरूको कुलमा आएको कुरा कुनै-कुनै हाम्रा वंशावलीहरूमा उल्लेख भएको छ। वास्तवमा तुलजा भवानीको सम्बन्ध रामचन्द्रसग रहेको थियो भन्ने किंवदन्तीको आधारमा नै हाम्रो यहाँ रामचन्द्रको विजयगाथामा मनाइने ठूलो चाड दशैंमा ठूलो भक्ति-भावले उपत्यकाका तीनै राजकीय दरबारहरूमा रहेका तुलजा भवानीको विशेष पूजा हुन्छ। बलि हुन्छ।

भक्तपुर मल्ल राजाहरूको प्राचीन दरबार हो। यहाँका भवानी नै मूलरूपको तुलजा भवानी हो। पछि यक्षमल्लका छोराहरूमा उत्पन्न वैमनस्यको कारण काठमाडौं उपत्यका तीन राज्यमा विभक्त भएपछि कान्तिपुरमा पनि आफ्नो इष्ट देवीको रूपमा तुलजा भवानीका मन्दिरहरू बन्नु स्वाभाविक छ। तलेजुका मन्दिरहरूमा हनुमानढोकाभित्रको तलेजुको मन्दिर अति भव्य तथा विशाल ढङ्गमा निर्माण भएको छ। त्यसमा पनि पृथ्वीनारायण

शाहले उपत्यकाका तीनै राज्यहरूको एकीकरण गरी जुन अभिप्रायले कान्तिपुरलाई राजधानी बनाए त्यसबाट पनि कान्तिपुरको तलेजुको मन्दिरको महिमा गुरुतर हुन पुगेको छ। यसैकारण दशैंमा शक्तिको पूजाको क्रममा अन्यत्र ठाउँका तुलजा भवानीको भन्दा हनुमानढोकाको तुलजा भवानीको पूजा-आजामा विशेष राजकीय प्रभाव रहनु स्वाभाविक छ। जसबाट साधारण जनताको भक्ति पनि यतापट्टि नै आकृष्ट भएको छ।

हनुमानढोकाको तलेजु मन्दिर कान्तिपुर पृथक् राज्यका रूपका खडा भएको करीब बहत्तर वर्षपछि निर्माण भएको थियो। यो समय महीन्द्र मल्लको समय थियो। महीन्द्र मल्लले आफ्ना देशका कलाकारहरूको कलाको पारख गर्न भैं जुन विशाल तथा भव्य ढङ्गमा उपत्यकामा देखिने सबै मन्दिरहरूभन्दा अग्लो र कलापूर्ण मन्दिर बनाउन लगाई आफ्नो इष्टदेवी स्थापना गरे त्यो ज्यादै प्रशसनीय र गौरवको कुरा छ। तर यहाँ यो कुरा विचारणीय छ कि वर्तमान तलेजुको मन्दिर केवल महीन्द्र मल्लको कृतिको रूपमा मात्र छैन। यो मन्दिर एकपल्ट प्रताप मल्लको समयमा पनि जीर्णोद्धार भइसकेको थियो। यसकारण वर्तमान तलेजुको मन्दिरको शोभा प्रताप मल्लको समयको मान्नुपर्दछ। यस मन्दिरभित्र पूर्ण कलशको रूपमा देखापर्ने तुलजा भवानीको प्रतिमा यद्यपि व्यक्त भावमा छैन, तथापि दुर्गा भवानी गुह्येश्वरीको मूर्तरूपबाट यो देवी तान्त्रिक पूजा-आजामा पृथक् रूपको छैन। यसकारण हाम्रो तलेजुको मन्दिरले तथा मूलचोकको वास्तु महिषासुर वध गर्न व्यापक शक्तिको प्रतीक स्परूप खडा भएको दुर्गेश-नन्दिनीका अनेक कथानक घटनाहरूको अंशांशबाट एक भव्य कलात्मक

मूर्तरूप पाउनु स्वाभाविक छ। यो मन्दिर बनेर तयार भएपछि नवमीको रातमा भ्रमररूप तुलजा भवानीले त्यस मन्दिरभित्र प्रवेश गरेको कुरा किंवदन्तीको रूपमा हाम्रा वंशावलीहरूमा उल्लेख भएको छ। वास्तवमा यसबाट यो कुरा झल्कन्छ कि नवमीको दिन नयाँ मन्दिरमा तुलजा भवानीको स्थापना भएको हुन सक्दछ। यही कारण व्यापक रूपमा शक्तिको पूजा गर्ने उपलक्षमा नवमीको रातमा महीन्द्र मल्लले नयाँ बनाउन दिएको तलेजु मन्दिरबाट एक गुप्त प्रतिमा तल प्राचीन मूलचोकमा ल्याई ठूलो भक्तिभावले शैव-मतावलम्बी शाक्तहरूको ठूलो विद्या कालोत्तरतन्त्रको आधारमा गुप्त पूजा हुन्छ, बलि हुन्छ। यही कालोत्तरतन्त्रको आधारमा पूजा गर्ने भएकोले नै नवमीको रातमा हुने दशैंको तुलजा भवानीको पूजालाई 'कालरात्री पूजा'को संज्ञा दिइएको छ।

कालतन्त्रको विचारधारा वास्तवमा शैव-शाक्तहरूको एक ठूलो प्राचीन मौलिक देन हो। यस तन्त्रका विचारकहरूको तर्कअनुसार, माथि कुमारी जात्राको प्रकरणमा उल्लेख भएअनुसार विश्वमा सबभन्दा गुरुतर शक्ति स्त्रीरूपको शक्ति हो। यो ब्रह्माण्डको अनन्तकालमा आश्रित छ। त्यही अनन्तकालमा आश्रित स्त्रीरूप शक्तिको साकेतिक प्रतिकात्मक रूप नै काली हो जुन काली विश्वमा सबैभन्दा श्रेष्ठ छ, शक्तिशाली छ, र भुक्ति-मुक्ति-दायी छ। वास्तवमा यही सिद्धान्तमा कालतन्त्रको निर्माण भएको छ। यसको पूजा गर्ने, मन्त्रपाठ गर्ने विधिविधान भिन्नै ढङ्गको छ। यद्यपि पूजामा, बलिमा तथा अरू-अरू अर्चन विधिविधानहरूमा संकेत गर्ने धार्मिक भाषा पृथक रूपको छैन। मुख्यतया यसको पूजाआजामा कुमारीको उपस्थितिमा साधक तथा उत्तरसाधकको रूपमा स्त्री-पुरुषको युगल भावमा पूजा-विधि सम्पन्न हुने कुरा विचारणीय छ। हाम्रो देशको आफ्नै

ढङ्गको सांस्कृतिक परम्पराअनुसार, दशैं रामचन्द्रको विजयरूपको वार्षिक चाड भएता पनि यस अवसरमा शैव तथा बौद्ध हरेक सम्प्रदायका मानिसहरूले आफ्नो-आफ्नो धर्मअनुसार शक्तिको पूजा गर्ने प्रथा चलेको हुनाले उहिलेका मल्ल राजाहरूले पनि आफू शैव-शक्तिमा परम भक्त भएका हुनाले आफ्नो दरबारको पूजागृहमा पनि त्यहीअनुसार पूजा गर्नु स्वाभाविक छ। वास्तवमा दशैंको अवसरमा तुलजा भवानीको पूजागृहमा हुने कालरात्री-पूजाको महत्व यही नै हो। तर यो पूजा राजकीय ढङ्गमा हुने भएकोले यसको महत्त्व विशेष आकर्षक भएको छ। त्यसमा पनि शाहवंशका राजाहरूले समेत् तुलजा भवानीलाई नै आफ्नो इष्टदेवी बनाई पूजाआजामा विशेष सम्मानसूचक तोपको आवाज दिने प्रथा अद्यापि चल्दै आएकोले साधारण जन-समाजमा यसको प्रभाव झन् गुरुतर हुनु स्वाभाविक छ। हाम्रो परम्पराअनुसार दशैंमा नवमीको दिन यस राजकीय दरबारभित्र रहेको तुलजा भवानीको पूजाको लागि विहान सबेरैदेखि ताँती लागेका हुन्छन्। हनुमानढोकाभित्रको मूलचोकमा, जहाँ तुलजा भवानी पूजाको लागि माथिको तलेजु मन्दिरबाट ठूलो सम्मानसाथ तल ल्याइएको हुन्छ, बलिमा काटिएका सयौ राँगाका धडहरूको रोमाञ्चकारी दृश्यलाई हेरेर दर्शकहरू पुलकित शरीरले चकित हुन्छन्। वास्तवमा ती निःसहाय राँगाहरू तान्त्रिकहरूको दृष्टिमा भौतिक राँगो नभई महिषासुरको, या अझ कुनै दुष्टात्माको प्रतीकस्वरूपका हुने हुनाले यस्तो हिंसालाई पनि दयाको भावले विचार गरिंदैन। किनभने हिंसा हाम्रो कुनै पनि धर्ममा मान्य छैन। इत्यादि अनेक कुराहरू हामीले कालरात्री पूजाको प्रकरणमा तटस्थ भएर विचार गर्न सक्दछौं।

---

# काकबलि–श्वानबलिको महत्त्व

लगभग तेइस सय वर्षजति पहिले बौद्धधर्मका प्रकाण्ड विद्वान् स्थविर नागसेनले कौवाका दुई विशेष गुणलाई उल्लेख गर्दा आफ्नो तथा आफ्नो जातिको रक्षाका लागि सदा सतर्क भई सावधान रहने स्वभाव र केही खाने कुरा पाउँदा आफ्ना वरिपरिका नाता-कुटुम्बलाई पनि बोलाएर मिलेर खाने नैसर्गिक स्वभावलाई सकेत गरेका छन्। वास्तवमा कौवाका यी दुइ गुण मानवसमाजको हितका लागि पनि अति उपयोगी, अनुकरणीय तत्त्व बनेका छन्। यस कारण एकपटकमात्र ब्याउने कौवा-चराको सीमित संख्यालाई विचार गरेर यसलाई अरू-अरू चराहरूलाई झैं खाद्यपदार्थमा उपयोगी नबनाएता पनि यिनको विलक्षण स्वभावले कौवा हाम्रो समाजमा आकर्षक बनेको छ।

जसलाई जो चीज मन पर्दछ त्यसलाई त्यो चीज ख्वाउन दिएर या त्यस व्यक्तिको नाउँमा अर्पण गरेर संतुष्ट गर्ने हाम्रो परम्परा ज्यादै पुरानो छ। सामान्यत: भावनात्मक ढङ्गमा यस प्रकार कुनै चीज कसैको नाउँमा अर्पण गर्ने यही परिपाटी नै 'बलि'को रूपमा देखापरेको छ। यद्यपि मन्त्रवादको दीर्घकालिक प्रभावको कारण यसको रूप ज्यादै जटिल तथा दुर्बोध बनिसकेको छ। यस्तो बलि दृश्य या अदृश्य जीव या निर्जीव कुनै पनि वस्तुको नाउँमा अर्पण गरिएको हुन सक्दछ। हाम्रो सास्कृतिक प्रवाहमा बलिको ठूलो स्थान छ। अनेक पूजाआजा, चिकित्साक्रम र दैनिक खान-पान आदि अनेक प्रसगमा पनि बलि दिने प्रथा छ। यस्तो किसिमको बलि

कहीं मनोवैज्ञानिक तत्त्वको रूपमा देखापरेको छ त कहीं वैज्ञानिक कसी बनेको छ। कहीं कृतज्ञता ज्ञापन गर्ने तत्त्व बनेको छ त कहीं प्रतीकवादको सौदा बनेको छ। वास्तवमा हाम्रो ठूलो चाड तिहारको पञ्चकमा जुन काक-बलिको सास्कृतिक महत्त्व रहेको छ त्यो यसै कुरामा आधारित छ। अर्थात् कौवाको गुणले कृतज्ञ रहेका हाम्रो समाजले वर्ष दिनमा एक पटक उनको पनि सत्कार गर्ने काकबलिको सास्कृतिक प्रभाव जन-समूहमा मान्य बनाइ-दिएको छ, यसमा शंका छैन। किनभने इतिहासको शुरुदेखि मानव-समाज केवल आफ्नै नैसर्गिक बुद्धिले मात्र सभ्य र सम्पन्न भएको महसूस गर्दैन। किन्तु आफ्ना वरिपरि रहेका चराचुरुङ्गी र चतुष्पद प्राणीहरूको शील-स्वभाव र गुणले पनि आफू अधिक लाभान्वित भएको ठान्दछ।

आर्थिक दृष्टिकोणले कार्तिकको ठूलो महत्व छ। हाम्रो समाजको आर्थिक स्रोत पूर्णतया खेतीमा नै निर्भर छ। खेतीबिना कसैको पनि आर्थिक सचालन हुँदैनथ्यो। हिउँदे-बालीभन्दा वर्षा-बाली अधिक लाभप्रद हुनु स्वाभाविक छ। वर्षा-बालीको पूर्ण लाभ कार्तिकमा आई फलीभूत हुन आउँछ। यसकारण कार्तिकको महत्व आर्थिक दृष्टिकोणले गुरुतर हुनु स्वयसिद्ध छ। यही हेतु कार्तिकमा हाम्रो यहाँ धनदौलतको प्रतीकस्वरूप मानिएकी लक्ष्मीको पूजा हुने कुरा सर्वविदित छ। वास्तवमा वर्षदिनको आर्थिक सन्तुलन मिलाउन हरेक परिवार तथा व्यक्तिको लागि जुन सतर्कता, सावधानीपन र मानवताको आवश्यकता रहन्छ, त्यो अरू-अरू वेला त्यत्तिको आवश्यक रहँदैन। यसवेला प्रायः सबैको अन्न खेत खेतमा नै पडिरहेका हुन्छन्। किनभने यसलाई सुकाउनु छ, बाँडचुँड गर्नु छ। यदि यस्तो बखत अन्नको राम्ररी निगरानी भएन भने चोर आदिको भय

हुनु स्वाभाविक छ। जसबाट आफ्नो वर्ष दिनको कमाई गुमाउनुपर्ने स्थिति आइपर्न सक्दछ। यस कारण यही कुराको यादका लागि कौवाको पहिलो सतर्क हुने गुण तिहारमा या कार्तिक महीनामा विचारणीय छ। साथै यो कुरा पनि विचारणीय छ कि पैसा भएको वेला मोजमज्जा गर्ने बानी हामी मानवमात्रको जीवनमा देखिने कुरा छ। यस्तो स्थितिमा आफ्नो परिवारको वर्ष दिनसम्म जीवन यापन गर्नुपर्ने अन्नको, जुन घर-घरमा नै थुपारिन लागेको छ, असावधानीले दुरुपयोग भएको खण्डमा वर्षदिनसम्म ठूलो सकष्टमा पर्ने कुरा स्पष्ट छ। यसकारण कार्तिक शुरू भएदेखि हरेक परिवारले आर्थिक दृष्टिकोणले कतिको सावधान हुनुपर्दछ यो कुरा यहाँ उल्लेख गर्नु आवश्यक छैन।

अन्न आर्थिक स्रोतको मूलभूत कारण बनेकोले हरेक व्यक्तिको दृष्टि यसमा केन्द्रित हुनु स्वाभाविक छ। यसकारण पृथक् व्यक्तित्व तथा पृथक् स्वार्थको कारण उचित तथा अनुचित कुनै न-कुनै उपायले पनि अन्नको शोषण हुन सक्दछ। वास्तवमा यस्तो प्रवृत्ति मानव-समाजमा आउन सक्दछ तापनि यो कुरा बहुसंख्यक जनताको लागि हितकर छैन। यसले मानव-मानवमा द्वेष र घृणाको वातावरण पैदा हुन सक्दछ। जसको कारण खूद मानव समाजकै पतन हुने कुरा स्वतः सिद्ध छ। यसकारण अन्न थुपार्ने कार्तिक महीनामा हरेक व्यक्तिले व्यक्तिगत स्वार्थभन्दा मानव-मात्रको कल्याणको भावनालाई प्रधानता दिई आफ्नो-आफ्नो मेहनत तथा परिश्रमअनुसार उचित ढङ्गमा आफ्नो-आफ्नो लाभ पाउन सकुन्, कसैले अमानवीय ढङ्गमा व्यक्तिगत स्वार्थलाई प्रधानता दिई शोषण गर्न नपाउन् भनी मिलेर खाने कौवाको स्वभावलाई कार्तिक महीनामा विशेष ढङ्गले

मानव-समाजको लागि अनुकरणीय बनाउनु ज्यादै सार्थक देखिन्छ। एक चराले पनि आफ्नो तथा आफ्नो जातिको लागि केही हित हुने कुरा सोच्दछन् र त्यसको पालना गर्दछन् भने विकसित बुद्धि भएका मानव-समाजले त्यस्तो मार्मिक शिक्षाप्रद कुरालाई उपेक्षा गर्न सक्ने कुरा छैन। यही तथ्यको आधारमा तिहारमा हाम्रो यहाँ कौवालाई पूजा गर्ने, बलि दिने कुरा रोचक ढङ्गमा लोकप्रिय बनेको छ। यो एक वास्तविक कुरा हो, यद्यपि किंवदन्ती तथा अलौकिक पौराणिक कथाहरूले यस तथ्य कुरालाई पनि कता कता पुऱ्याउँछ।

यस्तै वस्तुस्थितिमा तिहारको पञ्चकमा मनाइने श्वानबलिको पनि महत्त्व रहेको छ। मानव सभ्यताको आदिकालदेखि अर्थात् हाम्रो आर्य-परम्पराअनुसार वैवस्वत मनुको सम्झना गर्ने समयदेखि कुकुर घरेलु प्राणीको रूपमा देखापरेका छन्। यस प्रकार कुकुर मानव-समाजको निकट सम्पर्कमा आउन सक्नुको मुख्य कारण उसको आज्ञाकारी स्वामी-भक्तिको गुणमा विशेष विचारणीय छ। कुकुर जसले खान दिन्छ उसको परम विश्वासी बन्दछ। रात दिन उसकै आसपासमा रही जिन्दगी बिताउँछ। यद्यपि दिउँसो यताउती लागेको हुनसक्दछ तर राती अक्सर सतर्क भएर आफ्नो मालिकको घरको आसपास नै बसिरहन्छ। कुकुरको नींद ज्यादै हलुका ढङ्गको हुने हुनाले राती कुनै पनि आवाज आउनेबित्तिकै सतर्क भएर त्यसको प्रतिक्रियामा भुक्न थाल्दछ। यदि कुनै अपरिचित व्यक्ति उसको इलाकाबाट हिंड्न थाले भने त्यो व्यक्ति त्यहाँबाट दूर नभएसम्म ज्यानै गए पनि भुक्न छोड्दैन। यदि त्यस व्यक्तिले कुकुरको निषेधात्मक प्रतिक्रियालाई पालन गरेन भने त्यसको ज्यानै लिन पनि तम्सेको हुन्छ।

यस्तो स्थितिमा सुरक्षा तथा चोर आदिबाट बच्नका लागि सबै मस्त निद्रामा लट्ठ हुने रातीको अवस्थामा कुकुर कतिको उपयोगी प्राणी छ यो कुरा यहाँ उल्लेख गर्नु आवश्यक छैन। किनभने कुकुरको गुण तथा स्वभावबाट हामी सबै राम्ररी परिचित छौं। वास्तवमा कुकुरको यही गुणबाट नतमस्तक भएको हाम्रो समाजले विशेष सुरक्षाको खाँचो रहेको तिहारको बखत तिनलाई खुशी पार्न बलि प्रदान गर्नु कुनै अनौठो कुरा छैन। यो एक हाम्रो समाजको भावुक हृदयको परिचायक कुरामात्र हो। यही वस्तुस्थितिको आधारमा हाम्रो श्वानबलिको सांस्कृतिक महत्त्व रहेको हो वा होइन भन्ने कुरा बुझ्न कुकुरलाई बलिदिने वेला मनमनै पढ्ने मन्त्र यहाँ विशेष विचारणीय छ। जस्तै :—

द्वौ श्वानौ शाम सबलौ वैवस्वत कुलोद्भवौं।
ताभ्यामन्न प्रदास्यामि रक्षता पथि सर्वदा॥

यस प्रकार आर्थिक दृष्टिकोणले विशेष महत्त्वपूर्ण रहेको कार्तिक महीनामा मनाइने तिहारको पञ्चकमा जुन श्वानबलिको सांस्कृतिक परम्परा रहेको छ त्यो कुकुरको तथा कौवाको उपरोक्त उपयोगी गुणमा कुन ढङ्गले आधारित भएको छ भन्ने कुरा स्पष्ट छ। वास्तवमा कौवाको तथा कुकुरको उपरोक्त गुणकै कारण हाम्रा तान्त्रिक धर्ममा यी प्राणीहरू काकास्था, श्वानास्थाको रूपमा तान्त्रिक देव-देवीहरूको ढोकामा बस्ने देवतासम्म पनि बनेको कुरा हाम्रो समक्ष छ। यस्तो स्थितिमा यिनीहरूको पूजा गर्न हाम्रो समाज आकृष्ट हुनु स्वाभाविक छ।

———

# धन्वन्तरि जयन्ती

कार्तिकमा मनाइने धनत्रयोदशी धन्वन्तरि भगवानको जन्म दिन भएको हुनाले आयुर्वेद शास्त्रमा विश्वास गर्ने तमाम जनता यस दिनलाई आयु-आरोग्यको कामना गरी विशेष श्रद्धाले मनाउँदछन्। आयुर्वेद शास्त्रका विशेष-ज्ञाता तथा शल्यतन्त्रका आचार्य धन्वन्तरि को हुन्, कुन समयका हुन्, यसको ठीक-ठीक निर्णय हुन सकेको छैन। तर काश्यप सहिताको विशद् उपोद्‌घाटमा प० हेमराज शर्माले जुन शास्त्रीय अन्वेषणको आधारमा धन्वन्तरिको विषयमा निर्णय गर्न प्रयास गरेका छन् त्यो ज्यादै विचारणीय छ। उनले हरिवंश पुराण आदिको कथनलाई आधार मानी धन्व नाउँ गरेका राजाको छोरा धन्वन्तरि हुन् भन्ने कुरा उल्लेख गरेका छन्। धन्व राजा काशी शहर बसाउने काशका नाती हुन्। धन्वन्तरिले भरद्वाजबाट विशेष आयुर्वेद शास्त्र अध्ययन गरेका थिए। सुश्रुत आदिलाई यिनले नै शल्यतन्त्र पढाएका थिए। जसको फलस्वरूप सुश्रुतले सकलन गरेको शल्यतन्त्र सुश्रुत संहिताको नाउँमा प्रसिद्ध छ।

कोही-कोही यसलाई समुद्र मथनबाट उत्पन्न भएको भनी विश्वास गर्दछन्। यस विषयमा हेमराजज्यूको तर्कअनुसार धन्व राजाले छोरा पाउन समुद्र मथनबाट उत्पन्न अब्ज देवको आराधना गरेको हुनाले उनकै आराधनाको फलस्वरूप धन्वन्तरि नामकरण गरिएको छोरा उत्पन्न भएको हुनाले धन्वन्तरिप्रति समुद्र मथनको सम्बन्ध रहन आएको हुन सक्दछ भन्ने विचार व्यक्त गरिएको छ। वास्तवमा जहाँसम्म व्यावहारिक कुराको सवाल छ यो कुरा ज्यादै औचित्यपूर्ण देखिन्छ। किनभने पूर्णतया मानव

विचारधाराको अनुरूप लौकिक ढङ्गमा लेखिएको सुश्रुत संहिता हाम्रो समक्ष छ। यसको प्रमाणिकताको विषयमा शंका गर्ने ठाउँ छैन। यद्यपि यसको रचनाकाल ठीक-ठीक ढङ्गमा प्रमाणिक हुन सकेको छैन। यस ग्रन्थमा सुश्रुतले स्पष्टसँग धन्वन्तरिबाटै आफूले आयुर्वेद शास्त्रको अध्ययन गरेको कुरा उल्लेख गरेको छ। उहिलेको ग्रन्थ निर्माण गर्ने परम्पराअनुसार हरेक कुरा धन्वन्तरिको उपदेशअनुसार व्यक्त गर्न लगाएको छ। यस्तो स्थितिमा हरेक मानवीय लौकिक कुरा व्यक्त गर्ने धन्वन्तरि कुन आधारमा समुद्र मथन-बाट उत्पन्न भएका हुन् भनी मान्न सकिन्छ यो कुरा विचारणीय छ। यद्यपि आजसम्म कुनै पनि विद्वान्ले पुराणहरूमा विशेष महत्त्व दिई उल्लेख भएको समुद्र मथनको व्यावहारिक रूप के हो निर्णय गर्न सकेका छैनन्।

सुश्रुत संहितामा धन्वन्तरिको उल्लेख गर्दा धन्वन्तरि, दिवोदास काशी-पतिको अभेद जस्तो एकै ठाउँमा उल्लेख भएको छ। यसबाट पनि धन्वन्तरिको वास्तविक कुरामा अलिकति मतभेद हुन आउँछ। किनभने हरिवंश पुराण आदिको कथनअनुसार धन्वन्तरि दिवोदासका प्रपितामहको रूपमा देखापरेका छन्। यस विषयमा धेरै विद्वान्हरूको यही धारणा छ कि दीर्घकालिक परम्पराअनुसार सुश्रुत संहिता पढ्ने पढाउने क्रम चल्दै आएको हुनाले धन्वन्तरिको वंश परम्परालाई सम्झँदा दिवोदाससम्म पनि आयुर्वेद शास्त्रका ज्ञाताको रूपमा मान्नुपर्ने स्थिति रहेको हुनुपर्दछ। अन्यथा प्रपितामह र प्रपौत्रको सम्बन्ध एक साथ एकै विषयमा उल्लेख गर्नु-पर्ने कुनै कारण देखिंदैन। दिवोदासको समय बुद्धको समयभन्दा पहिलेको मानिएको छ। यस प्रकार धन्वन्तरि को हुन् र कुन समयका हुन् भन्ने कुराको सिलसिलामा उनको केही इतिहास हाम्रो समक्ष आउँछ।

इतिहासको क्रममा हाम्रो देशको राष्ट्रिय चिकित्सापद्धति पूर्णतया आयुर्वेद-शास्त्रकै आधारमा केन्द्रित रहेको कुरा यहाँ उल्लेख गर्नु आवश्यक छैन। किनभने अद्यापि अधिकाश जनता आयुर्वेदीय चिकित्सा-पद्धतिमा नै उपचार गर्दछन्। आयुर्वेद-शास्त्र आठ अंगमा विभक्त गरिएका छन्। जस्तै :– शल्य, शालाक्य, कायचिकित्सा, कौमार भृत्य, अगदतन्त्र, भूतविद्या, बाजीकरण र रसायनतन्त्र। सुश्रुत संहिता यद्यपि शल्यतन्त्रको प्रधान ग्रन्थ भएता पनि यसमा आयुर्वेद-शास्त्रका आठै अङ्गहरूको विषयमा मोटामोटी कुराहरू समावेश भएका छन्। सुश्रुतमा उल्लेख भएअनुसार चिर-फाडको काम आयुर्वेदीय सिद्धान्तअनुसार धेरै विकसित भइसकेको छ तापनि, पहिले-पहिले हाम्रा देशमा पनि यसको राम्रो प्रचार भएता पनि आजकाल यस विषयमा जितहस्त बनेका विद्वान्हरूको प्रायः अभावै छ भन्नुमा कुनै संकोच मान्नुपर्ने कुरा छैन। हाम्रो देशमा आजकाल विशेष गरेर काय-चिकित्साको नै प्रचार छ। यस विषयको प्रमाणिक ग्रन्थ चरक संहिता हो। यो आत्रेय सम्प्रदायको ग्रन्थ हो। तर कायचिकित्सा अन्तर्गतको चिकित्सा-क्रम हाम्रो देशमा चलेता पनि उपचारमा प्रयोग हुने औषधिहरू विशेष गरेर रसवादका ग्रन्थहरूबाट बन्दछन्, या कुरा विशेष विचारणीय छ। यस प्रकार हाम्रो देशमा धन्वन्तरि सम्प्रदायको चिकित्साक्रम लोप भइसकेको छ तापनि जुन धन्वन्तरिको जन्मजयन्ती हुन्छ, पूजा हुन्छ त्यो कुरो अनौठो ढङ्गको छ। किनभने प्रतीकवादी हाम्रो मनोवृत्तिअनुसार धनत्रयोदशीको दिन धन्वन्तरिको जन्मजयन्ती मनाइन्छ तापनि त्यो शल्यतन्त्रका विशेष ज्ञाता आचार्यको रूपमा मनाइँदैन किन्तु आयुर्वेदशास्त्रकै प्रतीकस्वरूप

धन्वन्तरिको जन्मजयन्ती मनाइन्छ। यस कारण यसको महत्व सबै वर्ग या सम्प्रदायको लागि मान्य रहेको छ।

हाम्रो सास्कृतिक परम्पराअनुसार सबै व्यवसायीहरूले आफ्नो-आफ्नो आराध्य देवताको मान्यतालाई स्वीकार गरेका छन्। व्यापारीहरू भीमसेन-लाई आफ्नो अभीष्ट देवता मान्दछन् त पण्डितहरू सरस्वतीको आराधना गर्दछन्। शिल्पकारहरू विश्वकर्माको भक्त बन्दछन् त नृत्यकारहरू नटेश्वरलाई पूजा गर्दछन्। यसप्रकार हरेक व्यवसायका मानिसहरूको भिन्नाभिन्नै आफ्ना-आफ्ना आराध्य देवताहरू रहेका छन्। यसै सदर्भमा वैद्यहरूले पनि आफ्नो अभीष्ट देवताको खोजी गर्नु स्वाभाविक छ। वास्त-वमा यसै खोजीको परिणामस्वरूप धन्वन्तरिले चतुर्भुज विष्णु भगवानको रूप धारण गरेको कुरा ज्यादै रोचक देखिन्छ। किनभने उपरोक्त ऐतिहासिक धन्वन्तरि चतुर्भुज धारण गरी शंख-चक्रादिले सुशोभित नभएको भए आज वैद्यमात्रले मान्ने इष्ट-आराध्यदेवको रूपमा व्यक्त हुने थिएनन्। यो कुरा हामीले तटस्थ भएर सोच्नु अत्यावश्यक छ। यसै प्रकरणमा जब हाम्रो समाजमा बौद्धमार्गीहरूको प्रभुत्त्व दिन पर-दिन बढ्दै गइरहेको थियो त्यस बखत यिनीहरूले आफूलाई चाहिने हरेक कुरा आफ्नै धर्मबाट आविष्कार गर्न लागेको कुरा विष्णुको महिमालाई परास्त गर्नसक्ने लोकेश्वरको उत्पत्तिले नै बताउँछ। यस्तो बखत धन्वन्तरि भगवानको प्रतिस्पर्धामा भैषज्य तथागतको रूप बौद्ध धर्मावलम्बी वैद्य तथा अरू जनताले रूचाउनु स्वाभाविक छ। यसै तथ्यको आधारमा हाम्रो यहाँ धन्वन्तरि जयन्तीको दिन भैषज्य तथागतको पनि एकै भावनामा पूजा हुन्छ। यस प्रकार हाम्रो सास्कृतिक परम्पराअनुसार धन्वन्तरि जयन्ती मनाइन्छ।

---

# लक्ष्मी पूजा

हाम्रो देश कृषि-प्रधान देश हो। हावा-पानी अनुकूल रहेको हुनाले यहाँ मुख्यतया धानकै खेती हुन्छ। कुनै पनि राष्ट्रको, विशेष गरेर उहिलेको जमानामा अन्न नै आर्थिक स्रोतको मूलभूत साधन बनेको हुनाले मुख्य रूपमा धानको खेती हुने हाम्रोजस्तो देशमा आर्थिक दृष्टिकोणले कार्तिक महीना विशेष महत्त्वपूर्ण हुनु स्वाभाविक छ। किनभने यस वेला धान काटिसकेको हुन्छ। अन्नका भकारीहरू धानले भरिसकेका हुन्छन्। यस्तो अवस्थामा अन्नबाटै लत्ता-कपडा, धर्म-कर्म, नून-तेल आदि सबै कुराहरू जुटाउनुपर्ने हाम्रोजस्तो देशका देशवासीहरूले वर्ष दिनको आर्थिक सन्तुलन मिलाउने ध्येयमा धन दौलतको प्रतीकात्मक देवी लक्ष्मीको पूजा गर्नु स्वाभाविक छ। किनभने हाम्रो यहाँ श्रीप्राप्ति तथा विद्या कुनै पनि कुराको प्राप्तिका लागि भौतिक तथा आध्यात्मिक दुवै दृष्टिकोणले प्रयास गर्नुपर्ने कुरा हाम्रो सांस्कृतिक परम्परामा देखिएको छ। वास्तवमा खेतीको पैदावार खेतीवालहरूको विद्या, बुद्धि, जाँगर र मेहनतमा निर्भर हुने कुरा स्पष्ट छ तापनि खेतीको उत्पादनबाट हुने आर्थिक लाभबाट कुनै अनुचित बुद्धिहरू उत्पन्न नहोस् भन्ने आर्थिक ध्येयले नै तिहारमा लक्ष्मी पूजा गर्ने आध्यात्मिक परम्परा रहेको कुरा स्पष्ट छ। यद्यपि पुराणकारहरूले बलि-राजाको बन्धनमा परेका लक्ष्मीसहित देव-देवीहरूको छुट्कारा भएको

दिनको रूपमा पनि लक्ष्मीपूजा गर्ने कुरा व्यंगात्मक ढङ्गमा उल्लेख गरेका छन्।

हाम्रो सांस्कृतिक धारणाअनुसार अवश्यमेव लक्ष्मी धनकै प्रतीक स्वरूपकी देवीको रूपमा देखापरेको छ। यसमा शङ्का छैन। तर यी लक्ष्मी कस्ती हुन्, कुन ध्यानकी हो यो कुरा ज्यादै विचारणीय छ। कतै विष्णुको साथमा रहने वैदिक विचारधाराकी लक्ष्मी देखापरेको छ त कतै शिवाश-रूपको संहार भैरवको शक्ति-रूपकी महालक्ष्मी देखापरेको छ। कतै बौद्ध धर्मावलम्बीहरूले वसुंधरालाई नै लक्ष्मीका प्रतिरूप बनाएका छन् त कतै अन्नपूर्णा नै लक्ष्मी हुन् भन्ने कुरा देखिएको छ। वास्तवमा कुनचाहिं लक्ष्मी खास धनका प्रतीक स्वरूपकी लक्ष्मी हुन् यो कुरा यहाँ निर्णय गर्नु कठिन छ। किनभने हाम्रो तिहारमा वसुन्धरा, अन्नपूर्णा, तान्त्रिक महालक्ष्मी र वैदिक लक्ष्मीमा कुनै भेदभाव देखिंदैन। वसुन्धरालाई लक्ष्मी मान्ने बौद्ध समाजले पनि तिहारको बजारमा बेच्न राखेको अन्नपूर्णाको चित्रलाई लिएर आफ्नो ढुकुटीको लक्ष्मी-गृहमा टाँस्छन् र लक्ष्मीकै भावनामा समान आस्थाले पूजा गर्दछन् तथा कुर्माशन पद्मालाई लक्ष्मी मान्नेले पनि वसुन्धराको चित्र लगी लक्ष्मीपूजाको दिन आफ्नो ढुकुटीमा टाँस्दछन्। यो कुरा हामी सबैले अनुभव गरेका छौं। तर जहाँसम्म हाम्रो सास्कृतिक आधारको कुरा छ, जसले जुनसुकै भावनामा लक्ष्मीलाई साकार गर्न खोजे तापनि हाम्रो लक्ष्मीरूपकी देवी मुख्यतया आर्थिक तत्त्वका मूलभूत कारणहरूमा नै आश्रित रहेका छन् भन्ने कुरा स्पष्ट छ। जस्तै, समुद्रबाट निस्कने धन, मुगा, मोती, कौडी आदि रत्नहरूको कारण समुद्रबाट उत्पन्न भएकी वैदिक लक्ष्मी, खेतीपातीबाट उत्पन्न हुने धन

अन्नादि द्रव्यको कारण वसुन्धरा, खानिबाट हुने धन हीरा, माणिक, पन्ना आदि खनिज सम्पदाको कारण अन्नपूर्णा ( बौद्ध ) तथा पशु-धनको कारण पशुपति वा शिवाशबाट उत्पन्न भएकी भैरवी महालक्ष्मी आफ्नो-आफ्नो स्थितिमा धनको प्रतीकात्मक देवी बनेकी छन्। यो कुरा विशेष विचारणीय छ। यद्यपि यस्ता कुराहरू हाम्रा प्राचीन शास्त्रहरूमा लौकिक ढङ्गमा उल्लेक भएका हुँदैनन्, यस्ता व्यावहारिक कुराको खाजीका लागि व्यावहारिक ढङ्गमा नै अध्ययन गर्ने हाम्रो दृष्टिकोण हुनुपर्दछ। अन्यथा लक्ष्मी भनेर गाईलाई पूजा गर्ने, अन्नलाई पूजा गर्ने, रुपियाँ पैसा सुन-चाँदीको पूजा गर्नेजस्ता सामान्य कुराहरू पनि दुर्बोध बन्नेछन्।

जहाँसम्म खेतीप्रधान हाम्रो देशको कुरा छ, समुद्रबाट उत्पन्न भएकी लक्ष्मीको ध्यानभन्दा अन्नपूर्णा, वसुन्धरा आदिको ध्यान नै हाम्रो तिहारमा लक्ष्मीको रूपमा पूजा गर्न योग्य देखिन्छ। किनभने हाम्रो देशको भू-भागले समुद्रलाई छोएको छैन। यस कारण समुद्रबाट उपलब्ध हुने धन हाम्रा लागि दुर्लभ छन्। यदि हाम्रो धन छ भने अन्न नै धन छ। अन्नको खेती नै धन कमाउने मुख्य साधन बनेको छ। पशु-धन र खनिज धन पनि हाम्रो लागि विचारणीय छ तापनि अन्नको स्थितिले नै हाम्रो धनको परिभाषा हुन्छ या हाम्रो आर्थिक ढाँचा खेती-पातीबाट हुने पैदावारमा नै निर्भर छ। यस्तो स्थितिमा लक्ष्मीको रूपमा पूजा गर्न मेरो विचारमा वसुन्धराको, अन्नपूर्णाको मूर्ति या चित्र विशेष महत्त्वपूर्ण देखिन्छ। यसै कुराको पुष्टिका लागि खास गरेर अन्न पाक्ने समयदेखि अन्न थु गर्ने वेलासम्मको विविध रूप लक्ष्मीको पूजा गर्ने हाम्रा सास्कृतिक चाड-पर्वहरू विचारणीय छन्। जस्तै, भाद्रकृष्णको तृतीयाको दिन हाम्रो यहाँ वसुन्धराको पूजा हुन्छ,

व्रत हुन्छ। यस व्रत-पूजामा नयाँ भरखर पह्लाएको धानको बाला हुनु अत्यावश्यक छ। किनभने खूद वसुन्धराको हातमा नै धानको बाला रहेको छ। यसबाट यो कुरा स्पष्ट छ कि वसुधरालाई धानको बाला मन पर्दछ। भाद्र शुक्ल अष्टमीदेखि आश्विन शुक्लसम्म महालक्ष्मीको व्रत बस्ने हाम्रो धार्मिक चलन छ। यस्तै आश्विन शुक्ल एकादशीको दिन बौद्ध-धर्मभित्रको अन्नपूर्णाको जात्रा हुन्छ। दशैंपछिको पूर्णिमा त कोजाग्रतको नाउँले नै विशेष आफ्नो आफ्नो ढुकुटीको लक्ष्मी-पूजा गर्ने कुरा सर्वविदित छ। अनि पाछि तिहारको लक्ष्मीपूजा आउँछ। यो वर्षको अन्तिम लक्ष्मीपूजा हो। यस कारण यसको महत्त्व अरू-अरू बखतको लक्ष्मीपूजाभन्दा विशेष महत्त्वपूर्ण हुनु स्वाभाविक छ। यस प्रकार क्रमैले विशेष महत्त्वपूर्ण हुनु स्वाभाविक छ। यस प्रकार क्रमैले विशेष धान पाक्न थालेदेखि धान थुपारिसक्ने वेलासम्ममा हाम्रो यहाँ लक्ष्मी पूजा गर्ने कुराहरू व्यावहारिक दृष्टिकोणले विचारणीय रहेका छन्।

हाम्रो देशमा धनको प्रतीक स्वरूप लक्ष्मीको पूजा गर्ने परम्परा कहिलेदेखि आरम्भ भयो यस कुराको निर्णयको लागि विशेष अध्ययन गर्नु अपेक्षित नै छ। तर लिच्छविकालमा बनेका प्रमाणिक मूर्तिहरूको क्रममा विचार गर्दा विष्णुको साथमा रहने लक्ष्मीको अतिरिक्त यस वेला बनेका अरू वसुन्धरा, अन्नपूर्णा, महालक्ष्मी आदिका मूर्तिहरू देखिएका छैनन्। तर एक कुरा विचारणीय छ कि अन्नपूर्णाको रूपमा हाम्रो यहाँ कहीं कहीं पूर्ण कलशको रूप पनि देखिएको छ। जस्तै, असनको अन्नपूर्णा मन्दिरभित्र रहेको कलश। जहाँसम्म अन्नपूर्णाको रूपमा पूर्ण कलशको सवाल छ, लिच्छविकालमा बनेका शिलामय यस्ता कलशहरू उपत्यकाको यत्र-तत्र

उपलब्ध छन् । ढाँचा-काँचाको दृष्टिले असनको अन्नपूर्णाको रौप्यमय कलश पनि लिच्छविकालकै कलशसंग सामञ्जस्य रहेको छ । तर यो कहिले बनेको हो, यो कुरा निर्णय गर्न ऐतिहासिक साधनहरू उपलब्ध भएका छैनन् । लिच्छविकालिक पूर्ण कलशको रूपमा विचार गर्दा उहिलेको टोल टोलमा स्थापना भएका श्रीघ विहार, जैशीदेवल आदि स्थानका शिलामय कलशहरू दर्शनीय छन् । यी कलशहरू कसले कुन वस्तुस्थितिको आधारमा स्थापना गरेका हुन्, यस विषयमा खोजी गर्नु बाँकी नै छ । तर अन्नपूर्णाको रूपमा देखापरेको असनको रौप्यमय उस्तै ढङ्गको पूर्णकलशले यो कुरा सकेत गर्दछ कि पूर्णकलशप्रतिको उहिलेको दार्शनिक विचार अवश्यमेव धन-धान्यले परिपूर्ण हुने साधनामा आधारित छ । यद्यपि कलशमा कुनै पनि देव-देवी तथा मनुष्यको समेत् जीवन्यास गर्ने आवाह्न-विधि हाम्रो धार्मिक समाजमा देखिएको छ ।

असनको पूर्णकलशरूपको अन्नपूर्णा सर्वप्रथम कुन तत्त्वमा आधारित थियो यो कुरा यहाँ निर्णयात्मक ढङ्गमा उल्लेख गर्न सकिंदैन । किनभने यस विषयमा अध्ययन गर्नको लागि ऐतिहासिक सामानहरू जुटेका छैनन् । अन्नपूर्णाको ध्यान पनि शैव तथा बौद्ध-धर्मको दृष्टिकोणले भिन्नाभिन्नै दृष्टिकोणमा देखिएका छन् । शैव दृष्टिकोणको अन्नपूर्णाको खास ध्यानमूर्ति पशुपतिनाथको मन्दिरको सँगै उत्तरी भेकमा रहेको छ । यो मध्य मल्लकालमा स्थापना भएको मूर्ति हो । वास्तवमा हाम्रो तिहारमा पूजाका लागि बजारमा बेचिने लक्ष्मी-रूपका चित्रहरूमा यस मूर्तिको ध्यान पनि देखिएको छ तथा बौद्ध दृष्टिकोणको अन्नपूर्णाको ध्यान-मूर्ति असनको अन्नपूर्णा मन्दिरको नै तोरणहरूमा अङ्कित छ । यो योगाम्बर रूपको बौद्धमूर्ति पूर्णतया खनिज

सम्पदाको प्रतीक रूपको छ। तर तिहारमा लक्ष्मीको रूपमा यस ध्यान-मूर्तिको चित्र बेच्न ल्याएको भने देखिंदैन। यो कुरा विचारणीय छ। यस प्रकार लक्ष्मी रूपको अन्नपूर्णा शैव दृष्टिकोणमा अन्न सम्पदाकी देवी बनेकी छिन् त बौद्ध दृष्टिकोणमा खनिज सम्पदाकी मूर्ति बनेकी छिन। यद्यपि तान्त्रिक दृष्टिकोणमा यिनीहरूको साधना भिन्नै ढङ्गमा हुन्छ।

यस प्रकार हाम्रो लक्ष्मीपूजा गर्ने ऐतिहासिक क्रममा वसुन्धरा तथा महालक्ष्मीका मूर्तिहरू पनि लिच्छविकालमा बनेको देखिंदैन। किन्तु मल्लकालमा यी देवीहरूका मूर्तिहरू यत्र-तत्र स्थापना भएका छन्। त्यस-मध्ये भक्तपुरको महालक्ष्मी र स्वयम्भूको वसुन्धरा दर्शनीय छन्। हाम्रो परम्पराअनुसार लक्ष्मीपूजाको दिन मैतीदेवीको पनि महालक्ष्मीको रूपमा पूजा हुन्छ। वास्तवमा मैतीदेवी लक्ष्मीको रूपमा पूज्य हुनु त्यक्तिको युक्ति-सङ्गत देखिंदैन। किनभने यो कौमारी हो, अर्थात् मयूर वाहन कुमार स्वामी कार्तिकको अंशमा उद्भूत भएका चण्ड भैरवको शक्तिरूपकी देवी हो। यसलाई हामी मायूरी पनि भन्न सक्दछौं। इत्यादि अनेक विविधतामा लक्ष्मीपूजा गर्ने सास्कृतिक भावना रहेको छ। अलौकिक धार्मिक भावनाले यद्यपि हाम्रो संस्कार अवास्तविक ढङ्गको रीतिस्थितिमा जटिल बनिसकेको छ तापनि वस्तुस्थितिको कुरा त्यत्तिको दुर्बोध छैन जति हामी सोच्दछौं।

## पौराणिक कथा

बलि राजा अत्यन्त बलवान् थिए। उनको तागतको अगाडि देवता-हरूको केही चल्दैनथ्यो। एक दिन बलि राजाले सारा देवताहरूलाई

समातेर कैद गरिदिए । त्यसमा लक्ष्मी पनि कैद भएकी थिइन् । यस्तो स्थिति देखेर विष्णु ज्यादै उद्विग्न भई आफ्नो दैवी शक्तिले लक्ष्मीलगायत सबै देवी-देवताहरूलाई बलिको कैदबाट छुटाइदिए । देवताहरू खुशी भए । विष्णुले आफ्नी प्रियतमा लक्ष्मीलाई लिएर समुद्रमा सुख शयनको लागि प्रवेश गरे । यही कारण लक्ष्मीको नाताले सबै देवताहरूले छुटकारा पाउन सकेको हुनाले यो दिन दीपावली गरेर लक्ष्मीपूजा गर्ने कुरा चलेको हो ।

( सनत्कुमार संहिताबाट )



# नेवारी संवत् र झ्यपूजा

नेपालको इतिहासमा लिच्छविकाल विक्रम सवत्को शुरू-शुरूदेखि लगभग नौसय वर्षसम्म रहेर समाप्त हुन्छ। यस वेला हाम्रो देशमा चलेका दुई किसिमका संवत्हरू कुन-कुन संवत् हुन् यस विषयमा हाम्रा इतिहास-कारहरूले निर्णय गर्न सकेका छैनन्। कोही यसलाई शक सवत् भन्दछन् त कोही विक्रम संवत्। कोही लिच्छवि सवत् भन्दछन् त कोही गुप्त संवत्। आजसम्मको खोजीअनुसार ३८६ अंक कुँदिएको चाँगुको मानदेवको शिलालेखभन्दा पहिलेका कुनै पनि राजाहरूको अभिलेखहरू पाइएका छैनन्। यस्तो स्थितिमा लिच्छविकालिक संवत्को विषयमा निर्णय गर्न कठिन हुनु स्वाभाविक छ।

लिच्छविकालपछि हाम्रो देशमा एक अर्कै नयाँ संवत् चलनचल्तीमा आएको देखिन्छ। लिच्छविकालपछिका प्राय. हरेक शिलापत्र, ताम्रपत्र, तथा ग्रन्थहरूमा समेत यस नयाँ सवत्को व्यवहार भएको छ। जुन सवत् अद्यापि सास्कृतिक क्षेत्रमा चल्दै आएको छ। यो अहिले १०८७ पुगेको छ। यस कारण यसको प्राचीनता पनि त्यत्ति नै छ भन्ने कुरा यहाँ उल्लेख गर्नु आवश्यक छैन। यो संवत् नेवारी भाषासंग निकट सम्बन्ध रहेको छ। लिच्छविकालमा लेखिएका ग्रन्थहरू उपलब्ध भएका छैनन्। यस कारण यस वेला कुन भाषामा ग्रन्थहरू लेख्दथे र जन-भाषा कस्तो थियो भन्ने कुरा बुझ्न अलि कठिन छ। तर लिच्छविकालमा स्थापना भएका शिलापत्रहरू थुप्रै उपलब्ध छन्। ती शिलापत्रहरूको अभिलेखमा संस्कृत भाषाको प्रयोग

भएको छ । यसबाट त्यस वेलाको बोलचालको भाषाको विषयमा ठीक-ठीक कुराहरू भन्न नसकेता पनि राजकीय भाषा संस्कृत थियो भन्ने कुरा स्पष्ट छ । तर लिच्छविकालको अन्तपछि हाम्रो देशमा जुन नयाँ ढङ्गको परिवर्तनले धर्म-कर्म रीति रिवाज, बोलि-बचन आदि हरेक कुरामा व्यापक ढङ्गले प्रभाव पारेको छ त्यसको परिणामस्वरूप यस बेलाका शिलापत्रका अभिलेखहरूमा तथा ग्रन्थहरूमा समेत संस्कृत भाषाको साथसाथ एक अर्को भाषा पनि देखिन थालेको छ । यो भाषा नेवारी भाषाको नाउँले प्रख्यात् छ । प्राचीन मल्लकालदेख मध्य मल्लकालसम्ममा त यो भाषा ज्यादै समृद्ध भइसकेको कुरा यस वेला लेखिएका यस भाषाका अनेक विषयका प्रचुर ग्रन्थहरूले पुष्ट हुन आउँछ । यस्तो स्थितिमा नेवारी भाषाको ग्रन्थ, नेवारी भाषाका अभिलेखहरू आदि सर्वत्र ठाउँमा सवत् राख्दा लिच्छवि-कालपछि चलनचल्तीमा आएको नयाँ सवत्कै व्यवहार भएको हुनाले यस सवत्लाई पनि नेवारी संवत् नै भनी पुकार्नु स्वाभाविक छ । कहीं कहीं नेवारी भाषालाई नेपाल भाषा भन्ने पनि व्यवहार गरेको हुनाले यस संवत्लाई पनि कोही-कोही नेपाल संवत् भनी पुकार्दछन् । वंशावलीकार-हरूले पनि यद्यपि यो संवत् जयदेवको समयदेखि चलेको हो भनी लेखेका छन् तापनि ऐतिहासिक दृष्टिकोणले यस कुरालाई पुष्टि गर्ने साधनहरू उपलब्ध भएका छैनन् । अर्थात् जयदेव को हो, यो कुरा यथार्थरूपमा निर्णय गर्ने अभिलेखहरू भेट्टिएका छैनन् । नेवारी सवत् ४० अंकित भएको प्रज्ञापारमिता नामक ग्रन्थ उपलब्ध भएको छ । यस वेलाका राजा शकरदेव थिए । यिनका पितामहको नाउँसम्म............भन्ने बुझिएको छ । यसबाट नयाँ संवत् शुरू भएको बखतका राजाहरूको क्रम हाम्रोसम्म आउँछ । शखधरको नाउँमा चलेको किंवदन्ती पनि विचारणीयै छ ।

तिथि-मितिको हिसाबले यो संवत् कार्तिक शुक्लपक्षको प्रतिपदादेखि शुरू हुन्छ। यो दिन हाम्रो लक्ष्मीपूजाको भोलिपल्टको दिन हो। सास्कृतिक दृष्टिकोणले यो नयाँ संवत्सर शुरू हुने दिन 'म्हपूजा'को रूपमा मनाउने हाम्रो यहाँ चलन छ। 'म्हपूजा' शब्द नेवारी भाषाको शब्द हो। यसको माने शरीर-पूजा हो। माथि उल्लेख भएअनुसार लिच्छविकालको अन्तपछि, खास गरेर काठमाडौ उपत्यकामा चलेको सवत्लाई नेपाल सवत् या नेवारी संवत् भन्ने चलन रहेको हुनाले विशेष गरेर 'म नेवार हुँ' भन्ने नेपाली समाजले 'म्हपूजा'को यस चाडलाई ठूलो उत्साह तथा भावनात्मक ढङ्गले मनाउँछन्। म्हपूजामा विशेष गरेर मङ्गलको कामना गर्ने हाम्रो परम्परा रहेको हुनाले मङ्गलका प्रतीकात्मक फलफूल, माछा, फुल आदि वस्तुहरूको यस अवसरमा ग्रहण गर्ने काम हुन्छ।

हाम्रो उहिलेको समाजमा विशेष गरेर मल्लकालिक समाजमा, जसले उपत्यकाको जनभाषा तथा संस्कृतिलाई अपनाउँथे, कालान्तरमा उनी नेवार बन्थे, चाहे त्यो ब्राह्मण होस् या शूद्र होस्, या क्षत्रिय होस् या वैश्य होस्। जसको परिणामस्वरूप हाम्रो नेवारी समाजमा ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र आदि सबै वर्ग देखा परेका पनि तिनीहरूले नेपाल उपत्यकाको जन-भाषा तथा संस्कृतिलाई अपनाइसकेको हुनाले नेवारीको रूपमा ती सब वर्गका मानिसहरू एक रूप भइसकेका छन्। यस्तो स्थितिमा म्हपूजा गर्ने परम्परा आजभोलिको परिभाषाअनुसार एकवर्गीय चाडजस्तो रहेता पनि उहिलेको अवस्थामा अवश्यमेव यो चाड वर्गीय ढङ्गको थिएन। किन्तु प्राचीन ऐतिहासिककालदेखि राजधानीको रूपमा नेपाली मात्रको सभ्यताको केन्द्र बन्दै आइरहेको काठमाडौ उपत्यकाका तमाम जनताले

मनाउने नयाँ सवत्सरको शुभारम्भ हुने दिनको चाड थियो। जसमा सबैको समान आस्था थियो। यो कुरा हामीले सम्झनु अत्यावश्यक छ। कालान्तरमा मल्लराजाहरूको अन्तपछि काठमाडौं उपत्यकामा जुनसुकै ठाउँबाट जुनसुकै मानिसहरू आई बसोबास गरेता पनि ती मानिसहरूले उपत्यकाको जन-भाषा तथा सस्कृतिलाई आत्मसात् गर्न सकेन या त्यसो गर्नु आवश्यक ठानेन। यस्तो स्थितिमा हाम्रो उपत्यकाको ठूलो सास्कृतिक चाड म्हपूजा उपत्यकाको जन-भाषा तथा सस्कृतिमा भिजेका केही समाजले मात्र मनाउने चाडको रूपमा देखापर्नु स्वाभाविक छ।

म्हपूजाको दिनलाई नेवारेत्तर समाजले गोवर्धनपूजाको रूपमा मनाउँछन्। लक्ष्मीपूजाको क्रममा मनाउने यो सास्कृतिक पर्व हाम्रो पौराणिक कृष्णको जीवनीसग सम्बन्ध रहेको भएता पनि व्यापारिक दृष्टिकोणले पनि यसको उपयोगिता हाम्रो लागि विचारणीय रहेको छ। किनभने खनिज-धन, अन्न-धन आदि अनेक धनका स्रोतहरूमा प्राणी-धन पनि त्यत्तिकै विचारणीय छ। मानिसको वृत्ति तथा जीवनयापनको लागि प्राणीको जुन स्थान छ त्यो कुरा यहाँ उल्लेख गर्नु आवश्यक छैन। यस्तो स्थितिमा खेतीपाती, बन्द-व्यापार तथा परिवहन आदि अनेक काममा उपयोगी गाईजस्तो प्राणीलाई नै धनको प्रतीक लक्ष्मी मानेर पूजा गर्ने हाम्रो समाजमा गाईको वंशवृद्धि गर्ने कुरालाई सोचेर गोवर्धन-पूजा गर्नु पनि उपयुक्त नै देखिन्छ। यद्यपि पुराणकारले गोवर्धनलाई, घाँस-पातले भरिपूर्ण रहेको पहाडलाई, जुन गाईको पोषणका लागि नभई नहुने खाद्य रहेको छ, सकेत गरेको छ।

—oo—

# अलौकिक शेषशायी विष्णुको लौकिक स्वरूप

केही वर्षपहिलेसम्म बुढानीलकण्ठको नाउँले प्रसिद्ध भएको भव्य मूर्तिको विषयमा केही प्रामाणिक ऐतिहासिक कुराहरू जनसमक्ष आउन सकेका थिएनन्। यस मूर्तिको विषयमा चर्चा हुँदा द्वापरयुग र सत्ययुगको कुरा चल्दथ्यो। हाम्रा वंशावलीकारहरूले पनि यस मूर्तिको विषयमा यस्तै अनेक मनगढन्त कुराहरू लेखेर गएका छन्। यस्तो स्थितिमा यत्रो भव्य कलात्मक मूर्तिको विषयमा केही वास्तविक तथ्य कुरा जान्ने जिज्ञासा दर्शकहरूको हृदयमा उत्पन्न हुनु स्वाभाविक छ। यसै जिज्ञासाको फलस्वरूप यस मूर्तिको विषयमा ठीक ठीक ऐतिहासिक कुराहरू हालै प्रकाशित भए-का छन्। यसको विस्तृत व्याख्या 'पूर्णिमा' पत्रिकाको वर्ष एकको तेस्रो अंकमा भएको छ। यंगाल हिटीको विष्णुगुप्तको शिलालेख, बूढानील-कण्ठकै शिवदेव र अंशुवर्माको शिलालेख र गोपाल वंशावलीको आधारमा यो मूर्ति विष्णुगुप्तले स्थापना गरेको कुरा स्पष्ट हुन आउँछ। विष्णुगुप्तको समयदेखि मानिएको छ। यसबाट यो मूर्ति पनि त्यसै वेलामा स्थापना भएको हो भन्ने कुरामा शंका गर्ने ठाउँ छैन। पहिले पहिले यस स्थानलाई नरसिंह-स्थान भन्ने चलन थियो। लिच्छविकालमा यहाँ मानिसहरूको बसोबास थियो। त्यहाँका पञ्चहरूलाई सम्बोधन गरी स्थापना भएका लिच्छविकालिक शिलापत्रहरू अद्यापि त्यस भेकमा उपलब्ध छन्।

कार्तिक महीनामा नारायणको पूजा गर्ने प्रथा हाम्रो देशमा ज्यादै लोकप्रिय रहेको छ। काठमाडौंका वरिपरि यत्रतत्र अनेक नारायणका

मूर्तिहरू स्थापना भएका छन्। त्यसमध्ये चाँगुनारायण, इचंगुनारायण, विसंखुनारायण, शेषनारायण, र बूढानीलकण्ठको नारायण विशेष प्रख्यात् रहेका छन्। कार्तिकमा यी सबै नारायणका स्थानहरूमा मेला लाग्दछ। विशेष गरेर शुक्लपक्षको द्वादशीको दिनचाहिं बूढानीलकण्ठमा ठूलो मेला लाग्दछ। यद्यपि बूढानीलकण्ठ शब्दले पौराणिक रुद्रको याद आउनु स्वाभाविक छ। जसले कालकूट विष पान गरेका थिए। त्यही कालकूट नीलो विष घाँटीमा अड्केको हुनाले नै महादेवको नीलकण्ठ भन्ने नाउँ रहन गएको रोचक कथा हाम्रो हिमवत्खण्डमा उल्लेख भएको छ। तर नाउँ नीलकण्ठ रहे तापनि हाम्रो यहाँ शेषशायी विष्णुको रूप रहेको हुनाले कार्तिकमा यहाँ विशेष मेला लाग्नु स्वाभाविक छ। शंख-चक्र, गदा, पद्म जस्ता सारगर्भित वस्तुहरू हातमा लिएका शान्त मुद्राका विष्णु रूप एक जटिल अनेक शिरधारी सर्पको शरीरमा उत्तानो परी अनन्त आकाशमा गम्भीर दृष्टिले हेरिरहेको दृश्य यद्यपि धार्मिक जनताको हृदयमा जुनसुकै भावमा व्यक्त भएता पनि एक जिज्ञासु मानवको हृदयमा अवश्यमेव कुतूहल पैदा गरिदिने वस्तु बनेको छ। व्यवहारिक दृष्टिले यस शेषशायी विष्णुको मूर्तिमा उहिलेका दार्शनिकहरूले कुन लौकिक तत्त्वलाई अन्तर्भाव गर्न प्रयास गरेको छ भन्ने कुरा जान्न कुनै पनि जिज्ञासुको हृदय लालायित हुनु स्वाभाविक छ। किनभने विष्णुको मूर्ति उहिलेको परम्परामा यद्यपि एक विलक्षण तत्त्वमा निर्माण भएको छ तापनि यस मूर्तिको भावमा अवश्यमेव कुनै दार्शनिक विचार सन्निहित भएको कुरा स्पष्ट हुन आउँछ। यसै प्रसङ्गमा व्यावहारिक दृष्टिकोणले सोच्दा सर्वप्रथम ब्रह्माण्डको रचनाकार र अनन्त ब्रह्माण्डको रूप हाम्रो समक्ष आउँछ, अर्थात् ज्ञान गर्नुपर्ने कुराहरू

अनन्त छन्। एक नयाँ कुराको ज्ञानले सयौं नयाँ जान्नुपर्ने कुराहरू उपस्थित हुन्छन्। यस्तो स्थितिमा अनन्त ज्ञेय पदार्थको समक्ष जान्नुपर्दछ भन्ने कुराको सदा शेष नै रहन्छ अर्थात् बाँकी नै रहन्छ। झिलिमिली ताराहरूको रूपमा देखिने ब्रह्माण्ड यति विशाल तथा अथाह छ जसको गणना गर्ने काम मानव-मस्तिष्कले कल्पनासम्म पनि गर्न सक्दैन। यस्तो स्थितिमा अनन्त अर्थात् अन्त नभएको विराट् स्वरूपको ब्रह्माण्डको विषयमा दार्शनिकहरूले अनेक कुरा सोच्नु स्वाभाविक छ। अणु रूपको विशालता पनि त्यत्तिकै अनन्त र अथाह छ। आज हाम्रो समक्ष इन्द्रिय गोचर हुने जति वस्तुहरू छन् ती सब वस्तुहरूको अणु-रूप कस्तो हुन्छ भन्ने कुरा साक्षात्कार गर्ने क्षमता पनि मानव-मस्तिष्कमा छैन। यस्तो स्थितिमा अणु-रूपको र विशालरूपको अनन्त हाम्रो समक्ष अति जटिल रूपमा खट्किरहनु स्वाभाविक छ। वास्तवमा यही अनन्त विराट् रूपमा नै ब्रह्माण्डको रचना भएको छ। या ब्रह्माण्डको रचनाकार खुद नै अनन्त वस्तुको प्रतीकस्वरूप अद्भुत् भएको छ। यद्यपि यो कुरा बुझ्न कठिन छैन। हाम्रो चर्मचक्षुले पनि ब्रह्माण्डको अनन्त कुरालाई हेरिरहेकै छ। तर यसको स्वरूपचाहिं यस्तो छ भन्नु सरल छैन। तथापि यथा पिण्डे तथा ब्रह्माण्डेको परिभाषामा हुर्केका हाम्रा जन-समाजले त्यस अनन्त वस्तुको पनि स्वरूप जान्न चाहन्थे। शेष भन्ने कुरा के हो त्यसको आकार बनाउन चाहन्थे। वास्तवमा यसै जिज्ञासाको परिणामस्वरूप विराट् रूपको विष्णु र वामन रूपको विष्णुको मूर्ति बने शेषशायी विष्णुको दार्शनिक प्रतिभा कलाकारको आफ्नो खूबी देखाउने विषय बन्यो। अर्थात् विराट रूपमा स्थूलरूप अनन्तको र बामन रूपमा सूक्ष्मरूप अनन्तको साकार भएको महसूस गर्न थाले तथा अनन्त

रूपको ब्रह्माण्डको रचनाकार विभुरूपको विष्णु भएर पनि शेषमा नै विलीन भए। शेष अर्थात् जान्न बाँकी रहेको ब्रह्माण्डको विषय अति जटिल रहेको हुनाले हाम्रा उहिलेका दार्शनिकहरूले जटिलताको प्रतीकस्वरूप शेषलाई नागरूपमा कल्पना गरेर विष्णुको शय्या बनाउँदा जटिल रूपकै गुचमुच्चिएको शारीरिक विन्यास बनाएको छ। यो ज्यादै मार्मिक ढङ्गको कुरा छ। यदि यो कुरा सत्य नभए म सबभन्दा ठूलो छु भनी अहकारले मात्तिएको बलिको तेजोबध गर्न एक सानो पुड्को रूपको विष्णुको रूप सबभन्दा शक्तिशालीको रूपमा देखा पर्ने थिएन। म एक सानो क्षुद्र मानवले यत्रो लाखौं व्यक्ति एकत्रित भएको लडाईंमा विजय कसरी हासिल गर्न सकिएला भनी आत्मग्लानीले हतप्रभ भएको अर्जुनलाई विष्णुरूपमा नै कृष्णले आफ्नो विराट् विश्वरूप देखाएर एक व्यक्ति लाखौं टक्करमा शक्तिशाली हुने उत्साहको कुरा गरेको महर्षि व्यासले कल्पना गर्न सक्ने कुरा थिएन। यस्तै लय, प्रलय र सृष्टिका कुरा गर्ने हाम्रा पुराणकारहरूले अनन्त ब्रह्माण्डको रचनाको रूपमा प्रतीकस्वरूप व्यक्त भएको विष्णुलाई सहस्र शिर भएको शेषनागको जटिल नागको शय्या बनाएर आकाशतिर एक टक्कारले हेरिरहेको मुद्रामा साकार गरेर आफूलाई धन्य सम्झने थिएन। यो एक वास्तविक कुरा हो। शेषशायी विष्णुको रूप अवश्यमेव काल्पनिक ढङ्गको रूप हो। मूर्तिको बाहिरी आकारमा हामी कुनै लौकिक कुराको अस्तित्वलाई मान्न सक्दैनौं। तर मूर्तिको संयोजनमा जुन गम्भीर दार्शनिक कुराको आभास हुन्छ त्यो अवश्यमेव लौकिक ढङ्गको छ। अनन्त ब्रह्माण्डको रचनाकारलाई शेष शय्यामा सुताएर जुन भव्य मूर्तिको कल्पना गरेको छ त्यो अवश्यमेव सहानीय छ। यस कुरालाई कुनै पनि

यथार्थवादीहरूले इन्कार गर्न सक्दैन। यद्यपि धार्मिक जनताको विश्वास र सोच्ने प्रणालीलाई यस्तो वास्तविक कुराको रहस्योद्घाटनले पनि बदल्न गाह्रो छ। तर जहाँसम्म हाम्रो कार्तिक महीनामा बूढानीलकण्ठ नाउँको शेषशायी विष्णुको पूजा गर्ने सवाल छ, हामीले तटस्थ भएर यस प्रकार इतिहासलाई अगाडि राखेर मानवीय ढङ्गमा सोच्नु अत्यावश्यक छ। यसैमा बूढानीलकण्ठको दर्शन गर्नाले हुने पुण्य सार्थक रहन्छ। यसैबाट हाम्रा लिच्छवि राजा विष्णुगुप्तले आफ्नो नाउँ झैं सार्थक गर्ने ध्येयमा विशालताको प्रतीकस्वरूप विशालै आकारमा शेषशायी विष्णुको मूर्ति आफ्नो अधिराज्यमा बनाउन दिन, मूर्ति कुँद्नलायकको लगभग १५ हात लामो ५ हात चौड़ाई भएको विशाल ढुङ्गा तानेर ल्याएको खुशीयालीमा दक्षिण कालीग्रामका जनतालाई पदक ( कल्लीविशेष बाजू, र पाउजेबजस्ता केही राजकीय गहनाहरूलाई छोडेर अरू किसिमका गहनाहरू) लगाउन अनुमति दिएको उस वेलाको सामाजिक अवस्था हाम्रो समक्ष आउँछ। वास्तवमा विष्णुगुप्तले गहनाहरू लाउन दिने अनुमति दिएको उपरोक्त कुरा यङ्गालको शिलालेखमा स्पष्ट उल्लेख भएको छ। बडा बडा ठूला क्रेन तथा सयौं मन बोकेर लैजानसक्ने मोटरगाडीहरू ठूला ठूला सडकहरूमा गुडिरहेको कुरा हेरिरहेका हिजो आजका मौलिक जनताको लागि बूढानीलकण्ठको मूर्तिजत्रो ढुङ्गाहरू यताउती ओसार्ने कुरा त्यत्तिको आश्चर्य मान्ने कुरा छैन, तर राम्रो बाटोघाटो नै नभएको, जङ्गलै जङ्गलले ढाकिएको नदीनालाहरूले व्याप्त भएको काठमाडौ उपत्यकाको छेउछेउमा मात्र साना साना बस्ती र आबादी भएको उस वेलाको वातावरणमा यत्रो भीमकाय ढुङ्गा केवल जनबलले मात्र घिसारेर ल्याउने कुरा अवश्यमेव आश्चर्यको

कुरा छ । यस्तो अवस्थामा विष्णुगुप्तलाई खुशी लाग्नु स्वाभाविक छ । यस प्रकार बूढानीलकण्ठको दर्शन गर्ने एक वस्तुवादी दर्शकको समक्ष अनेक तथ्य कुराहरू आउँछन् । प्रकृतिले विकसित भएको मानवीय बुद्धि यदि हामीमा छ भने यस्ता कुराहरूको मनन गर्नु अत्यावश्यक छ ।

## किंवदन्ती

एक दिन स्वप्नमा धर्मागतदेवलाई आदिजलशयन नारायणले दर्शन दिएर भन्नुभयो—"हे राजन्, मेरो आदिमूर्ति शतरुद्र पर्वत पैन्हो गएको हुँदा ढुङ्गा माटोले पुरिएर रहेको छ । यसकारण माटो खनेर मेरो मूर्ति प्रकाशमा ल्याऊ र त्यसको नित्य पूजा गर्ने गर, यसबाट तिम्रो ठूलो यश-कीर्ति बढ्नेछ ।" धर्मागत राजाले पनि स्वप्नमा सुनेको यो दिव्य कुरा शिरोधार्य सम्झी साँच्चिनै निर्दिष्ट ठाउँमा खनेर हेर्दा जलशयन नारायणको, अर्थात् बूढानीलकण्ठको भव्यमूर्ति फेला पारे । यस खुशीमा राजाले ठूलो श्रद्धाले विधिपूर्वक पूजा गरी नारायणको नित्यार्चन गर्ने परम्परा चलाए ।

( भाषा वंशावलीबाट )

# शतबीजारोपण या बालाचतुर्दशी

जीव र ब्रह्मतत्त्वमा अभेद मान्ने अद्वैत सिद्धान्तको प्रतीकस्वरूप एक सिंग र तन्त्रशास्त्रको चारपाद, जस्तै—क्रियापाद, चर्यापाद, योगपाद र विद्यापादको प्रतीकस्वरूप चार खुट्टाको कल्पना गरी शिवरूपको मृगलाई साकार गरेको कुरा हाम्रो पुराणमा उल्लेख भएको छ। जुन शिवरूप मृगले काठमाडौं उपत्यकाको श्लेषमान्तक वनमा विचरण गरेका थिए। यो कुरा ज्यादै रोचक तथा विचारणीय छ।

हाम्रो देशमा अनेक धर्म देखिएका छन्। जस्तै–शैव, बौद्ध र वैष्णवधर्म आदि। खासगरेर काठमाडौं उपत्यकामा यी धर्महरूले आफ्नो-आफ्नो प्रभुत्व जमाएको कुराको प्राचीनतालाई साकार गर्ने प्रामाणिक तत्त्वहरूमा पशुपतिनाथको मन्दिर, स्वयंभूको मन्दिर चागुको मन्दिर विशेष उल्लेखनीय छन्। हाम्रो ऐतिहासिककालको शुरूदेखि नै उहिलेको जमानामा बौद्धहरू स्वयंभू आई आफ्नो धर्म प्रचार गर्दथे त वैष्णवहरू आफ्नो धर्म प्रचार गर्न चागुको डाँडामा पुग्दथे। यस्तो स्थितिमा शैवहरू पनि आफ्नो-आफ्नो धर्म प्रचार गर्न पशुपतिमा आई केन्द्रित हुनु स्वाभाविक छ। वास्तवमा उपरोक्त एकमात्र सिङ्ग भएको शिवरूपको मृगले श्लेषमान्तक वनमा अर्थात् पशुपतिनाथको वरिपरिको जङ्गलमा चक्कर काट्ने कुरा यसै तथ्यमा आधारित छ। अर्थात् अद्वैतवादी शैवमतका आचार्यहरूले कुनै बखत पशुपतिमा बसी आफ्नो धर्म प्रचार गरेका थिए। उहिलेको साहित्यिक परम्पराअनुसार यस प्रकार अद्वैतवादी शैवमत काठमाडौंमा

प्रवेश भएको कुरा जङ्गलै-जङ्गलले ढकमक्क ढाकिएको उहिलेको काठमाडौं उपत्यकालाई सुहाउने ढङ्गमा जङ्गलमा नै बस्ने एक हरिणको रूपमा साकार गर्नु साँचैनै रोचक ढङ्गको छ। वास्तवमा यिनै शिवरूपको मृगले विचरण गरेको ठाउँमा मार्गकृष्ण चतुर्दशीको दिन ब्रीही छर्ने अथवा हाम्रा अहिलेको प्रचलित सास्कृतिक परम्पराअनुसार शतबीज छर्ने मेलाको महात्म्य स्कन्दपुराणमा उल्लेख भएको छ। ब्रीही छर्ने महात्म्यको विषयमा खुद हरिणरूप शिवले नै ठूलो ठूलो पुण्य हुने कुरा उल्लेख गरेको कुरा हाम्रो पुराणहरूमा उद्धृत भएको हुनाले शतबीजारोपण परम्परा अद्वैतवादी शैवहरूले नै चलाएको भन्ने स्पष्ट हुन आउँछ। तर यो कुरा कुन समयको हो, ऐतिहासिक दृष्टिकोणले अध्ययन हुनसकेको छैन।

एक एक धानको गेडालाई एक एक सुनको रत्तीमा तुलना गरेको यो पर्वदिन लौकिक दृष्टिकोणले ज्यादै महत्त्वपूर्ण रहेको छ। त्यसमा पनि हरिणरूप शिवले मलाई खूब मनपरेको भनी आफूलाई आफ्नो रूप अनुसार शाकाहारी बनाएको कुराले शतबीजको परम्परा कुन ढङ्गको लौकिक विचारमा ढालिएको छ भन्ने कुरा स्पष्ट हुन आउँछ। अर्थात् हाम्रो उपत्यकामा बसोबास गर्ने आदिवासीहरूको कथा त ज्यादै पुरानो छ। तर यी आदिवासीहरूले दुई हजार पच्चिस सय वर्षरहिलेसम्म पनि आफ्नो जीविकालाई खेतीपातीमा भन्दा आखेटमा विशेष ध्यान दिएको कुरा हाम्रो वंशावलीहरूमा उल्लेख भएको लिच्छविकालमा मात्र बलभद्रको नाउँले खेतीपातीको प्रचार भएको कुराले प्रकारान्तरमा संकेत गर्दछ। यो कहाँसम्म सत्यको कुरा छ अध्ययनकै विषय छ। तर मृगरूप शिवको कथामा अन्तर्भाव भएको एक एक धानको गेडालाई एक एक

सुनको रत्तीमा तुलना गरेको शतबीज छर्ने कुराले चौपायाको वशवृद्धि गर्ने र खेतीपातोमा विशेष ध्यान दिने कुराको आभास हुने कुराचाहिं स्वाभाविक छ। चौपायाको वंश वृद्धि गर्ने र खेतीपातीको महत्त्व बढाउने कुरा यदि यस हाम्रो बालाचतुर्दशीको मेलामा अन्तर्भाव भएको हो भने यस कुराको श्रेय अद्वैतवादी शैवहरूले पाउने कुरा स्वतःसिद्ध छ।

माथि उल्लेख भएको पौराणिक कुराअनुसार शतबीज छर्ने मेला शैवहरूले चलाएको कुरामा संदेह छैन। तर हाम्रो यहाँ यस मेलामा सबै धर्मावलम्बीहरूले एक समान भावभक्तिले मनाउँछन्। खासगरेर शिवरात्रीमा दक्षिणी भेकका तराईवासीहरूले भाग लिए झैं मार्गकृष्ण चतुर्दशीको यस पर्वदिनमा उत्तरी भेकका टाढा टाढाका मगर, गुरुङ्ग, सेर्पा आदि वासिन्दाहरूले विशेष भाग लिन्छन्। यस प्रकार उपत्यका-बाहिरका नेपालीहरूले पनि भाग लिने हुनाले यस मेलाको महत्त्व बढ्नु स्वाभाविक छ। हाम्रा उत्तरी भेकका अधिकाश वासिन्दाहरू बौद्ध धर्मावलम्बी छन्। अतएव कैलाशपर्वतमा बसी रातभर महादीप बालेर शतबीज छर्ने मेलामा यिनोहरूले भाग लिएता पनि यिनीहरूको धार्मिक क्रियाकाण्ड भने मद्य मासलाई स्वीकार गर्ने बौद्ध धर्मकैअनुसार हुन्छ। यस मेलामा यो कुरा दर्शनीय हुन्छ। हुनत पशुपति खुद शिवकै रूप बनेता पनि उनको शक्तिरूपको गुह्येश्वरी बौद्धहरूले पनि आफ्नो देवताको शक्तिरूपमा स्वीकार गरिसकेको हुनाले गुह्येश्वरी तथा पशुपतिको क्षेत्रमा मनाइने मेलामा शैव तथा बौद्ध दुवै धर्मावलम्बीहरूले भाग लिनु कुनै अनौठो कुरा छैन। तर उत्तरी भेकका हाम्रा बुद्ध धर्मावलम्बीहरूले यसलाई रुचाउन सकेको कुराचाहिं विचारणीय नै छ।

हाम्रो परम्पराअनुसार यस मेलामा विशेष गरेर मृतक परिवारले भाग लिने कुरा अनिवार्य झै रहेको छ। मृगरूप शिवकै अशबाट उत्पन्न भएको हाम्रो गोकर्णेश्वरको मेलामा झैं यस बालाचतुर्दशीको मेलामा पनि मृतक-परिवारले भाग लिने कुरा एक विचारणीय विषय बनेको छ। किनभने आखिर कुन प्रेतात्माको शान्ति गर्ने विचार हाम्रा अद्वैतवादी शैव सम्प्रदायका धार्मिक क्रियाकाण्डमा जुट्न आएका छन् भन्ने कुरा मनमा खेल्नु स्वाभाविक छ। यद्यपि बालासुरको किंवदन्तीले हाम्रा मृतक परिवारलाई तान्ने जनधारणा पनि यहाँ हामीले भुल्न सक्दैनौं।

हाम्रो जनधारणाअनुसार बालासुरको बध गरेको किंवदन्तीको आधारमा नै मार्गकृष्ण चतुर्दशीको दिनलाई बालाचतुर्दशी भन्ने चलन भएको हो भन्ने कुरा देखिएको छ। तर बालासुर को हुन् यसको ऐतिहासिक कुरा हामीलाई थाहा नभए तापनि शतबीज छर्ने ठाउँ उहिलेको जमानामा बाराबु भनी प्रसिद्ध भएको हुनाले बाराबुको जङ्गलमा बसी उत्पात मचाइ-रहेको कुनै व्यक्तिको मार्ग कृष्ण चतुर्दशीको दिन बध गरेको कुरा अनुमान गर्न सकिन्छ। जसको यादमा यस दिनलाई बालाचतुर्दशी भनी नामकरण गरेको हुन सक्दछ। आजकाल बालाचतुर्दशी भनी मानिन्छ तापनि यसको ठीक उच्चारण वाराचतुर्दशी हुनुपर्दछ।

अर्को कुरा, शतबीज छर्ने दिन जुन सुन्दरिका कुण्डमा नुहाउने कुराको महात्म्य हिमवत् खण्डमा उल्लेख भएको छ त्यसको कारणले नै बाला-चतुर्दशी भन्ने नाउँ रहेको होकि भन्ने कुरा पनि देखिन आउँछ। किनभने बाला शब्दले सुन्दरीलाई नै बोध गर्दछ तथा श्लेषमान्तक वनको भ्रुवस्थली-निर रहेको सुन्दरिका कुण्डमा यो दिन नुहाउनाले साँच्चै नै सुन्दर बन्ने र

स्त्रीहरूले विशेष रुचाउने हुन्छ भन्ने कुरा उल्लेख गरेको छ। यस्तो स्थितिमा सुन्दरी रूपको बालादेखि सम्बन्ध रहेको यो मार्गकृष्ण चतुर्दशीको दिनलाई बालाचतुर्दशीकै रूपमा याद गर्नु कुनै अनौठो कुरो छैन। वास्तवमा हाम्रो यहाँ बालाचतुर्दशीको अघिल्लो रातमा कैलाश पर्वतको वरिपरि युवक तथा युवतीहरूको परस्परमा गीतको माध्यमद्वारा जुन प्रेम भावना आफ्ना दाजु-भाइ दिदी-बहिनी तथा नाता-कुटुम्बहरूका समक्ष स्पष्ट ढङ्गमा व्यक्त गर्ने सांस्कृतिक परम्परा रहेको छ त्यो यही सुन्दरिका कुण्डको महात्म्यले प्रोत्साहित भएको छ भन्नुमा कुनै अतिशयोक्तिको कुरा छैन। अन्यथा एकातिर मृतकपरिवारले भाग लिने मेला छ त अर्कोतिर यस प्रकार खुलेआम यौन-भावनामा आमोद प्रमोद गर्ने कुरा ईश्वरको समक्ष मान्य हुन सक्ने कुरा छैन। यस प्रकार शतबीजारोपण या बालाचतुर्दशीको पर्वदिनले हामीलाई व्यतीत हाम्रो समाजको केही ऐतिहासिक कुराको विषयमा संकेत गर्दछ।

## किंवदन्ती

परापूर्वकालमा बालानन्द नाम गरेका एक वैश्य थिए। उनी एक दिन श्मशानमा मुर्दा पोल्न गएका थिए। मुर्दा पोल्दापोल्दै केही खाने-कुरा खानुपर्ने प्रचलनअनुसार खाइरहँदा मुर्दाको गिदी फुटेर खाने-कुरामा पर्दा त्यही खान पुगेछन्। यसबाट बालानन्दको टाउको चाँदीको जस्तै सेतो टल्कने हुन थाल्यो। यसपछि उनले बलजफती श्मशानबाट मुर्दाहरू लगेर खान थाले र बालानन्द बालासुरको रूपमा परिणत हुन थाल्यो। यसबाट सारा जनता भयभीत भए। बालासुरलाई कसरी

मार्ने भनेर राजा प्रजा सबै मिलेर सोच्न थाले। यत्तिकैमा बालासुरका मित वृषसिंहलाई बोलाउन पठाई कुनै उपायले भए पनि बालासुरलाई मार्ने काम उनलाई सुम्पियो। वृषसिंहले के गरेर मार्ने भनेर किंकर्तव्यविमूढ-जस्तो भएर महादेवको ध्यान गर्न लाग्दा महादेवले उनलाई बालासुर मार्न सक्ने वरदान दिए। वरदान पाएपछि मासु चिउरा रक्सी आठजनालाई बोक्न लगाएर उनी आफ्नो मितकहाँ गए। बालासुरलाई देख्नेबित्तिकै नम्र भावले आफ्नो मित्रताको कुरा गरी आफूले ल्याएको कुरा खाउन थाले। खाँदाखाँदा रक्सीले लट्ठ भएपछि सबैजना मिलेर श्लेषमान्तक बनको एक इनारमा खसालेर मारिदिए। यो मारेको दिन मार्गकृष्ण चतुर्दशीको दिन परेको हुनाले यो दिन बालाचतुर्दशी भनी प्रख्यात् भएको हो।

( नेपाली ऐतिहासिक कथा संग्रहबाट )



# जाडो-मौसमको पथ-परेजमा

# माघेसंक्रान्तिको महत्त्व

मकरसंक्रान्ति या माघेसंक्रान्तिको चाड सूर्यको गति उत्तरायण हुने अवसरमा मनाइन्छ । अर्थात् माघ महीना जाडो मौसमको मध्य अवस्था रहेता पनि माघेसक्रान्तिदेखि जाडो कम हुँदै गई क्रमशः दिन लामो हुने हुनाले यस अवसरको महत्त्व रहन गएको हो । जस्तै, सूर्य दक्षिणायण हुने साउनसक्रान्तिको पनि हाम्रो यहाँ त्यस्तै महत्त्व छ । वास्तवमा उत्तरायण र दक्षिणायण हुने कुरा नैसर्गिक कुरा हुन् । यो त हरेक साल आफ्नो आफ्नो स्थितिमा भइरहन्छन्, तर यस अवसरलाई हामीले चाडको रूपमा किन महत्त्व दियौं । यो कुरा यहाँ विशेष विचारणीय छ ।

हाम्रो सास्कृतिक परम्परामा जति चाडपर्वहरू छन् ती सबै चाडपर्वहरू केवल मोजमजा र रमिताको भोजमा मात्र सीमित छैनन् । किन्तु हरेक चाडपर्वहरूमा आफ्नो आफ्नो ढङ्गका मौलिकता छन् । व्यवहारिक उपयोगिता छन् । यो कुरा सास्कृतिक चाडपर्वहरूको ऐतिहासिक विश्लेषणले स्पष्ट हुने कुरा छ । यस कारण माघेसक्रान्तिको हाम्रो रमाइलो चाडमा पनि यस्तै आफ्नै ढङ्गको मौलिकता छ । व्यवहारिक उपयोगिता छ । जहाँ-सम्म व्यवहारिक उपयोगिताको सवाल छ, यस पर्वलाई स्वास्थ्यको दृष्टिले मनाउने गठेमङ्गल, पिशाच चतुर्दशीजस्ता चाडहरूमा गणना गर्न

सकिन्छ। किनभने माघेसङ्क्रान्तिको उपयोगिता पनि स्वास्थ्यकै दृष्टिले अपनाउनुपर्ने आहार विहारका नियमहरूमा आधारित भएको छ।

ऋतु-ऋतुमा परिवर्तन हुने हावापानीको दृष्टिले हरेक मौसममा एकैनासको आहार विहार हितकर हुँदैन। समय-समयमा हुने हावापानीको परिवर्तनअनुसार आहार विहार पनि त्यस्तै ढङ्गको हुनु अत्यावश्यक छ। यही वस्तुस्थितिका आधारमा जाडो मौसममा कस्ता किसिमका आहार विहारहरू हुनुपर्दछ भन्ने कुरालाई लिएर हाम्रा आयुर्वेदीय ग्रन्थहरूमा धेरै आधारभूत तत्त्वहरूको खोजी भएका छन्। जस्तै, विशेष गरेर हेमन्त ऋतुमा र शिशिर ऋतुमा सबैको अग्नि प्रबल रहेको हुन्छ। अग्नि प्रबल रहेको वेला विशेष पौष्टिक तत्त्वहरू पेटभरी खानु अत्यावश्यक छ। जाडो मौसममा यस कारण पेटभरी खान सकेन भने वातिक विकारहरू उत्पन्न हुने कुरा हाम्रा आयुर्वेदाचार्यहरूले ज्यादै मार्मिक ढङ्गमा संकेत गरेका छन्। यही कुरा अर्को ढङ्गमा विचार गर्ने भए जाडो मौसममा नाडी-संस्थानलाई कमजोर गर्ने वायुकारक तत्त्वहरू हितकर हुँदैन। यस कारण दूध, घिउ, तेल, मासु, माछा, चाकू, सखर आदि स्नेहकारक र पौष्टिक पदार्थहरूको सेवन गर्नु, तेल मालिस गर्नु, टाउकोमा विशेष तेल मालिस गर्नु, हावा चल्ने ठण्डा ठाउँमा नबस्नु आदि आहार विहारका नियमहरू पालना गर्नु अत्यावश्यक छ। हेर्दा यी कुराहरू सामान्य ढङ्गका छन्। तर स्वास्थ्यको दृष्टिले जाडो मौसममा यस्ता किसिमका आहार विहारका कुरालाई लिएर माघेसंक्रान्तिको दिन हाम्रो समस्त चाडको रूपमा व्यक्त भएको छ। जस्तै, यो दिन घिउ, चाकु, तिलौरी, माछाजस्ता पदार्थहरू धनी गरीब सबैले विशेष श्रद्धा र आनन्दले खान्छन्। आमाको कोमल हातबाट टाउकोमा

तेल लाउन दिन बालबच्चाहरू लालायित हुन्छन्। तेल मालिस गर्ने व्यक्तिहरू अगाडि हाम्रा शहर-गाउँहरूमा देखिंदैछन्। हुनत घिउ, चाकु, तिलौरीजस्ता पदार्थहरू अरू-अरू वेलामा पनि खान सकिन्छ। तर माघे-संक्रान्तिको दिन त्यही घिउ, चाकु खाँदा जुन रमाइलो भावना हाम्रो मनमा उत्पन्न हुन्छ त्यस्तो भावना अरू बखतमा हुँदैन। यो हाम्रो सस्कृतिको गहीरो प्रभाव हो। सास्कृतिक तत्त्वबाट यस्तो विशिष्ट भावना उत्पन्न हुनसक्ने हुनाले नै हाम्रा उहिलेका विचारकहरूले स्वास्थ्यको लागि पालना गर्नुपर्ने नियमहरूलाई पनि सास्कृतिक चाडपर्वहरूको रूपमा मनाउन प्रेरणा दिएका छन्। यो कुरा ज्यादै मार्मिक ढङ्गको छ। तर आजकाल हामीले यस्ता मौलिक कुराहरू पनि भुल्न लागिसकेका छौं। अन्धविश्वासमा तरूल टोक्दछौं तर तरूल किन खान्छौ हामीलाई थाहा छैन।

माघेसंक्रान्तिलाई धार्मिक दृष्टिकोणले विचार गर्ने तत्व पनि यसै तथ्यमा आधारित छ। जस्तै, माघेसक्रान्तिको दिन तिलमाधवको उत्पत्ति भएको कुरा आउँछ। भक्तपुरको टौमडीस्थित तिलमाधवको मूर्तिमा यसै कुराको किंवदन्तीले स्थान पाएको छ। स्नेहको लागि तिलको विशेष स्थान रहेको कुरा सर्वविदित छ। माघेसंक्रान्तिको दिन यही कारण तिलको रोटी र लड्डु बनाई खाने प्रचलन हाम्रो देशमा रहेको छ।

एक दिन मकरसंक्रान्तिको अवसरमा टौमडी टोलमा बसी यस्तै तिलको व्यापार भइरहेका थियो। एकजना तिलको व्यापारीको तिल जति बेचे पनि नसकिने भई आश्चर्यले तिलको थुप्रोलाई पन्छाएर हेर्दा त्यसभित्र नारायणको मूर्ति भेटियो। यही नारायण तिलमाधवको

नाउँले पछि प्रसिद्ध हुन गएको कुरा हाम्रो किंवदन्तीमा सुनिन्छ। टौमडी स्थित तिलमाधवको मूर्ति ऐतिहासिक दृष्टिकोणले कहिले स्थापना भएको हो यो कुरा निश्चित रूपमा निर्णय गर्न सकिंदैन। तर त्यस नारायणको अगाडि रहेको लगभग आठ सय वर्ष पुरानो गरुडको स्तम्भले यो मूर्ति कतिको प्राचीन रहेको छ भन्ने कुरा प्रकारान्तरले ज्ञात हुन आउँछ। वास्तवमा जाडो मौसममा, विशेष गरेर वातिक विकारहरूबाट जोगिन स्नेहन गर्नु अत्यावश्यक भएको हुनाले धार्मिक दृष्टिले पनि यसलाई महत्त्व दिन मकरसक्रान्तिको दिन तिलमाधवको सृष्टि गर्ने कुरा अभीष्ट रहेको छ। अन्यथा तिलको नाउँले तिल खानु अभीष्ट रहेको मौसममा चतुर्भुज नारायणको उत्पत्ति भएको कुरा हाम्रा वशावलीहरूमा उल्लेख हुने थिएन। स्नेहनको महत्त्वको दृष्टिले माघेसक्रान्तिकै दिन तिलमाधवको शरीरमा घिउले लेपन गर्ने हाम्रो सास्कृतिक परम्परा पनि त्यत्तिकै विचारणीय छ। जुन अद्यापि चल्दै आएको छ। यद्यपि जाडो मौसममा स्नेहन गर्नुपर्ने कुरालाई लक्ष्य गरेर यो सास्कृतिक विधि चलेको हो भन्ने भावनालाई बिर्सेर आजभोलि सुत्केरी हुने भक्तपुरवासी नारीसमाजको मात्र ध्यान यसमा केन्द्रित हुन गएको छ। किनभने परम्पराअनुसार स्नेहन गर्ने विधि आजकाल केवल सुत्केरीको अवस्थामा मात्र सीमित छ। यस प्रकार हाम्रो आफ्नै ढङ्गको धर्म तथा संस्कृतिले जुन आफ्नै ढङ्गको मौलिकता र व्यावहारिक उपादेयतालाई एकात्मक भावनाले अंगालेको छ त्यो कुरा उपरोक्त माघेसक्रान्तिको रीति-स्थितिले स्पष्ट गरिरहेको छ। यस वस्तुस्थितिलाई हामीले इन्कार गर्न सक्दैनौं। किनभने उपरोक्त कुरा केवल तर्कमा मात्र आधारित छैन। एक

एक कुरा आयुर्वेद-शास्त्रमा उल्लेख भएको जाडो मौसममा विचार गर्नुपर्ने पथपरेजका तत्त्वहरूसँग प्रमाणिक ढङ्गले तुलना गर्न सकिन्छ। यस कारण माघेसङ्क्रान्तिलाई स्वास्थ्यको दृष्टिले मनाइने गठेमङ्गल, पिशाच चतुर्दशीजस्ता हाम्रा चाडबाडहरूको क्रममा राख्न सकिन्छ भन्ने मेरो विचार छ। किनभने हाम्रा चाडबाडहरूको लक्ष्य भिन्नाभिन्नै रहेको हुनाले तिनीहरूको वर्गीकरण हुनु आवश्यक देखिन्छ।

———

# सरस्वती र मञ्जुश्रीमा अभेद् सम्झने हाम्रो धारणा

वीणा पुस्तक हातमा लिएकी सरस्वती विद्याकी देवी मानिएको छ। यसकारण विद्याको क्षेत्रमा यिनको विशेष कदर हुनु स्वाभाविक छ। वसन्तको शुभारम्भ हुने श्रीपञ्चमीको दिन हाम्रो परम्पराअनुसार सरस्वतीको जन्मजयन्ती मनाउने चलन छ। यही हेतु यो दिन हाम्रो यहाँ जहाँकहीं सरस्वतीको मूर्ति भएको ठाउँमा- विद्याकी देवीको रूपमा ठूलो भक्ति भावनाले पूजा हुन्छ।

सरस्वती कुनै ऐतिहासिक व्यक्ति नभएको तथा विद्याको प्रतीक स्वरूपकी देवी रहेको हुनाले वैष्णवहरू यसलाई विष्णुको नजदीक राख्न चाहन्छन् त शैवहरू दुर्गा भवानीको अंशमा विलीन गर्न कोशिश गर्दछन्। हाम्रो देशमा देखिएका अधिकांश सरस्वतीका मूर्तिहरू गणेशको साथमा नै स्थापना भएका छन्। उमा-पुत्र गणेशका साथमा देखिएकी सरस्वती दुर्गांशमा विलीन हुने कुरा स्वतः सिद्ध छ। तान्त्रिकहरूले सर्वशक्तिमान तत्त्वको रूपमा स्त्रीरूप शक्तिको विशेष प्रचार गरेको कुरा हाम्रो समक्ष छ। यस्तो स्थितिमा स्त्रीरूप शक्तिको आराधना गर्ने तान्त्रिक ग्रन्थहरूमा विद्याको प्रतीक स्वरूपकी देवी पनि तान्त्रिक गतिविधिमा नै क्रियाशील हुनु स्वाभाविक छ।

तान्त्रिकहरूको भिन्नाभिन्नै आफ्नो-आफ्नो आध्यात्मिक क्षेत्र हुन्छ। त्यस क्षेत्रको मध्यभागमा आफ्नो अभीष्ट ईश्वर केन्द्रित भएर बसेको हुन्छ। त्यसका वरिपरि अनेक दार्शनिक तह हुन्छन्। जसमा आफ्नो-

आफ्नो धर्म तथा परिभाषाअनुसार अनेक क्षेत्रपालहरू स्थापना भएका हुन्छन्। त्यसमध्ये सबभन्दा अन्तिम बाहिरी तह श्मशानको हुन्छ। तान्त्रिकहरूको धारणाअनुसार जुनसुकै उनीहरूको क्षेत्र पनि श्मशानले बेरिएको हुन्छ। वास्तवमा मण्डलरूपका या यन्त्ररूपका पटचित्रहरू यसै कुरामा आधारित छन्। जब हाम्रो देशमा खास गरेर लिच्छविकालको अन्तपछि तान्त्रिकहरूले अजीब अजीब चमत्कार देखाउन थाले त्यस वेला तान्त्रिकहरूले आफ्नो आध्यात्मिक क्षेत्रलाई पनि भौतिक क्षेत्रमा विभाजित गरेको कुरा हाम्रो काठमाडौं उपत्यकाको वरिपरि देखिएका मण्डलरूपका देवी-देवताहरू र श्मशानको वातावरणले बताउँछ। जुन देवी देवताहरू र श्मशानस्थित पीठहरूमा तान्त्रिक ढङ्गले पूजा गर्ने परम्परा अद्यापि हाम्रो देशमा चलेकै छ।

वि० स०···तिर लेखिएको निश्वासतन्त्र हाम्रो वीर पुस्तकालयमा छ। यसमा जुन मुख्य आराध्य देवताको रूपमा शिव-पार्वतीको तान्त्रिक रूप कोरिएको छ त्यही रूपका शिव-पार्वतीका पाषाणमूर्तिहरू हाम्रा श्मशानमा देखिएका छन्। श्मशानमा देखिने यो पहिलो स्पष्ट मूर्ति हो। त्यसपछि तेह्रौं शताब्दीतिरको मूर्तिशैलीमा निर्माण भएका सरस्वतीका पाषाण-मूर्तिहरू हाम्रो उपत्यकाका श्मशान-स्थलहरूमा यत्रतत्र देखिएका छन्। यस्ता सरस्वतीका मूर्तिहरूको आसपास गणेशका मूर्तिहरू पनि साथसाथै देखिएका छन्। उहिलेका शैव तान्त्रिकहरूको गतिविधिलाई बुझ्न यो कुरा विचारणीय रहेको छ। वास्तवमा हाम्रो श्रीपञ्चमीको दिन यिनै तान्त्रिक सरस्वतीको पूजा हुन्छ। विद्याको प्रतीक स्वरूपकी देवी रहेको हुनाले यसमा धार्मिक भेदभाव हुँदैन।

सरस्वती अवश्यमेव विद्याकी देवी हो यसकारण तान्त्रिकहरूले आफ्नो कुनै पनि क्रियाकाण्डको आरम्भमा मङ्गल कामनाको लागि गणेशलाई सम्झँदा शुद्ध विद्या-बुद्धिको लागि सरस्वतीलाई पनि सम्झने गरेका छन्। यस्तो कुरा हाम्रा तान्त्रिक ग्रन्थहरूमा यत्रतत्र देखिएका छन्। तर यस्तो विद्याकी देवी सरस्वतीको मूर्ति श्मशानको वरिपरि स्थापना हुनुमा के रहस्य छ यो कुराचाहिं अलि विचारणीय रहेको छ। यस प्रसगमा श्मशानको सरस्वतीलाई बुझ्न त्रिरत्न सौन्दर्य गाथामा उल्लेख भएको सरस्वती विषयको कुरा यहाँ उल्लेख गर्नु आवश्यक छ। रणबहादुर शाहले आफ्नी प्यारी प्रियतमाको निधन हुने भयले बचाउका लागि अनेक कार्यहरू गर्न लगाएका थिए। त्यसमध्ये अपशगुनको रूपमा सम्झिएका हजारौ गृद्धहरूलाई पनि मार्न लगाएका थिए। ती मारिएका गृद्धहरू जाउलाखेलमा पोलेका थिए। पछि रणबहादुर शाहको प्रयास विफल भएपछि हजारौ गृद्धहरू पोलेको श्मशानतुल्य ठाउँमा भूतप्रेतको भय हुने कुरा हुँदा त्यस बेलाका तान्त्रिकहरूको रायबमोजिम श्मशानमा हुने भूतप्रेतको भय निवारण गर्न सरस्वतीको मूर्ति स्थापना गर्नुपर्दछ भन्ने निर्णय हुँदा रणबहादुर शाहले त्यसै गर्न लगाएको कुरा त्रिरत्नसौन्दर्य गाथामा उल्लेख भएको छ। यसबाट यो कुरा स्पष्ट हुन आउँछ कि उहिले हाम्रा तान्त्रिकहरूले विद्याकी देवी सरस्वतीको मूर्ति श्मशानमा स्थापना गर्दा भूतप्रेतको भय रहँदैन भन्ने कुरा सोचेका थिए। वास्तवमा श्रीपञ्चमीको दिन पूजा गर्ने हाम्रा श्मशानमा देखिने यावत् सरस्वतीका मूर्तिहरू यसै कुराको द्योतक बनेका छन्। यसमा शका छैन।

मानवमात्रको लागि मृत्यु अवश्यमेव भयावह तत्त्वको रूपमा देखा

परेको छ। यस्तो स्थितिमा सयौं हजारौं मृत व्यक्तिहरूको दाहसस्कार हुने श्मशानको वातावरण भयानक हुने कुरा स्वाभाविक छ। वास्तवमा यही भयको कारणले नै भूत प्रेतहरू खडा हुने कुरा कुनै अनौठो कुरा होइन। जसबाट साधारण जनता भयभीत हुन्छन्। यस्तो स्थितिमा जनताका मनोबल मजबूत गर्न उहिलेका तान्त्रिकहरूले श्मशानमा विद्याकी देवी खडा गरेको कुरा ज्यादै सारगर्भित देखिन्छ। किनभने विद्याबाटै ज्ञान हुन्छ। मृत्यु एक नैसर्गिक कुरा हो। यसबाट सदा भयभीत भइरहनु कुनै आवश्यक छैन भन्ने ज्ञान भएको खण्डमा श्मशानको वातावरण भयावह हुने या भयबाट उत्पन्न हुने भूत प्रेतजस्ता तत्त्वहरूबाट डराउनु-पर्ने कुनै कारण छैन। यसप्रकार श्रीपञ्चमीको दिन पूजा हुने सरस्वती हाम्रो संस्कृतिमा कसरी भिजेको छ भन्ने कुरा स्पष्ट हुन आउँछ। यो कुरा हामीले मनन गर्नु नितान्त आवश्यक छ।

अर्को कुरा, श्रीपञ्चमीको दिन खासगरेर उपत्यकाका अधिकाश जनता सरस्वतीको दर्शन गर्न स्वयंभूको सरस्वतीको स्थानमा पुग्दछन्। वास्तवमा श्रीपञ्चमीको दिन खासगरेर यहीं ठूलो मेला लाग्दछ तर आश्चर्यको कुरा छ, सरस्वती स्थान भनी प्रसिद्ध भएको देवस्थलमा कुनै सरस्वतीको मूर्ति देखिंदैन। एक मल्लकालिक चैत्य छ। त्यसको अगाडि एक पदचिह्न अंकित भएको शिला छ। भक्तहरूको श्रद्धामा यसै पदचिह्नमा सरस्वतीको आराधना हुन्छ। पूजा हुन्छ। तर जहाँसम्म ऐतिहासिक कुराको सवाल छ, यो स्थान स्वयभू पुराणजस्ता बौद्ध ग्रन्थहरूको आधारमा मञ्जुश्रीको स्थान रहेको छ जसले हाम्रो पौराणिक धारणाअनुसार काठमाडौं उपत्यका जलामय भएको बखत चोभार डाँडालाई काटेर उपत्यकाको

पानी बाहिर पठाइदिएका थिए। वैष्णवहरूले चोभारमा र शैवहरूले पशुपतिमा आफ्नो आफ्नो धर्म प्रचार गर्ने केन्द्र बनाएको कुरा सर्वविदित छ। यस्तो स्थितिमा आफ्नो धर्म प्रचार गर्न बौद्धहरू स्वयम्भूमा आई एकत्रित हुनु स्वाभाविक छ। यसकारण मञ्जुश्रीको पदानुसरण गर्ने तत्त्वमा कुनै बखत यस ठाउँमा मन्त्रवादी बौद्धले किल्ला जमाएको कुरा स्पष्ट छ। जसको फलस्वरूप उनकै स्मृतिमा पदचिह्न अंकित भएको छ। तर यो कुन समय घटेको घटना हो यसको ऐतिहासिक कुराहरू अध्ययन गर्न बाँकी नै छ। मञ्जुश्री आज हाम्रो समक्ष बोधिसत्वको रूपमा देखापरेको छ तापनि यिनी कुनै काल्पनिक व्यक्ति होइनन्। यिनको विषयमा धेरै ऐतिहासिक कुराहरू खोजी भइसकेका छन्। इतिहासकारहरूले यिनको समय विक्रम सम्वत्को शुरूशुरूको समय मानेका छन्। बौद्ध धर्ममा मन्त्रवादको जन्म दिने आचार्यहरूमा यिनको नाउँ सर्वप्रथम रहेको छ। धेरै विद्वानहरूको भनाइमा यिनले नै बौद्ध धर्मभित्र मन्त्रविद्याको आविष्कार गरेका थिए। मन्त्रसिद्धिका रहस्यात्मक कुराहरूले भरिपूर्ण भएको मञ्जुश्री मूल कल्प नामक यिनको ग्रन्थ बौद्ध-समाजमा विशेष मान्य रहेको छ। यिनी प्रकाण्ड विद्वान् भएको हुनाले बौद्ध समाजमा यिनी ज्ञानको प्रतीक विद्याकै देवताको रूपमा साकार भएका छन्। सरस्वतीले झैं यिनले पनि पुस्तक धारण गरेको मूर्ति देवतुल्य पूज्य रहेको छ। यस कारण ज्ञानका पिपासु जनताको हृदयमा एक ऐतिहासिक मञ्जुश्री खुद विद्याको प्रतीकस्वरूप कालान्तरमा सरस्वतीकै रूपमा व्यक्त हुनु स्वाभाविक छ। जसको फलस्वरूप मञ्जुश्रीको स्थान सरस्वतीको स्थानको रूपमा परिणत भएको छ। यही हेतु श्रीपञ्चमीको

दिन सरस्वती र मञ्जुश्रीको भेदै स्वीकार गर्न नचाहने हाम्रो देशमा धर्मावलम्बीहरू सरस्वतीको सम्भनामा मञ्जुश्रीको पाउ ढोक्दछन्। तर एक कुरा यहाँ विचारणीय छ कि शैवहरू श्रीपञ्चमीको दिनलाई सरस्वतीको जन्मजयन्तीको रूपमा मनाउँछन् त बौद्धहरू मञ्जुश्री चीनबाट फर्केको खुशियालीको रूपमा मनाउँदछन्। किंवदन्तीको रूपमा प्रचलित भएको यो मञ्जुश्रीको चीन यात्राको कुरा ज्यादै विचारणीय छ। किनभने चीनमा बौद्ध धर्मको प्रचार ज्यादै प्रभावशाली रहेको छ।

## पौराणिक कथा र किवदन्ती

एक दिन मन्जुश्री ज्योतिस्वरूप स्वयभूको दर्शनका लागि आकाशबाट विचरण गर्दै काठमाडौ उपत्यकाको गोपुच्छशिखरमा आइपुगिन्। काठमाडौं उपत्यका विशाल सरोवरको रूपमा जलामय थियो। चारैतिर पानीले भरिपूर्ण थियो। यो कुरा देखेर मञ्जुश्रीले मनमनै विचार गर्न थालिन्, यदि यो पानी बाहिर पठाउन सके यो ठाउँ ठूलो पुण्यस्थलको रूपमा आबाद हुन सक्दछ। यही कुरा सोचेर उपत्यकाको पानी बाहिर पठाउन आफ्नो चन्द्रहास खड्गले चोभार डाँडा काट्न थालिन् केही दिनपछि निकास खुल्यो, उपत्यकाको सबै पानी यही ठाउँबाट बाहिर निस्के। त्यसपछि काठमाडौ उपत्यका हराभरा हुन थाल्यो। यस प्रकार ज्योतिस्वरूप स्वयम्भूको उपत्यका भूमिलाई आबाद योग्य बनाई मञ्जुश्री चीनतिर फर्किन्।

[ स्वयंभू पुराणबाट ]

———

# श्री पशुपतिनाथको स्वरूप र शिवरात्री मेला

ब्राह्मण, क्षत्रिय, वैश्य, शुद्र आदि वर्ण व्यवस्था नभएको समाजलाई सामान्यतया म्लेच्छ भन्ने हाम्रो चलन छ। वास्तवमा यस्तै ढङ्गको समाजले बसोबास गरेको बखत काठमाडौ उपत्यकामा पशुपतिनाथको ज्योर्तिलिङ्गको ईश्वरको रूपमा स्थापना भएको कुरा हाम्रा पुराणहरूमा उल्लेख भएको छ। अर्थात् सर्वप्रथम पशुपतिनाथको ज्योतिर्लिङ्गको दर्शन गर्ने व्यक्ति म्लेच्छ थिए भन्ने कुरा पशुपतिनाथको महात्म्यमा स्पष्टतया उल्लेख भएको कुरा सर्वविदित छ। काठमाडौ उपत्यकामा वर्णव्यवस्थामा बाँधिएको मानवसमाज लिच्छविहरूको आगमनपछि निर्माण भएको कुरा स्पष्ट छ। लिच्छविहरू ब्रह्मा, विष्णु आदि वैदिक देवी देवताहरूको भक्त थिए। यिनीहरूको आगमनकाल दुई हजार वर्षभन्दा पुरानो छैन। त्यसभन्दा पहिले उपत्यकामा बसोबास गर्ने जातिहरूमा किरातीहरूको नाउँ विशेष उल्लेखनीय छ। आर्य जातिमा यिनीहरूको उसवेला गणना हुँदैनथ्यो। यद्यपि किराती र अरू आर्य जातिको मिश्रणले धेरै नयाँ जातिहरू उत्पन्न भइसकेको हुनाले आजकाल यस्तो कुराको कुनै महत्व छैन।

ब्रह्मा विष्णुको तमोमय अहंकारलाई हटाउन व्यक्त भएको भनी पुराणहरूमा उल्लेख भएको लिङ्गको वास्तविक स्परूप के हो, यो कुरा दुई चार पक्तिमा व्यक्त गर्न सकिँदैन। तथापि जहाँसम्म लिङ्ग-पूजाको सवाल

छ, लिङ्गरूपको मूर्तिलाई देवताको रूपमा कल्पना गर्ने परम्पराचाहिं ज्यादै पुरानो देखिन्छ। वेदमा पनि 'शिश्नदेवता' शब्द उल्लेख भएको कुरा वेदलाई अनुशीलन गर्नेहरूले ऋग्वेदको ७।२१।४ को ऋचा पढेर सुनाउँछन्। तर वैदिककालमा शिश्नदेवता कुन समाजको देवता हो, यसको मौलिक स्वरूप कस्तो हो, र शिश्नदेव हाम्रो लिङ्गरूपको शिवलाई नै व्यक्त गर्ने शब्द हो कि होइन भन्ने कुरा विचारणीय नै छ। किन्तु वैदिक-कालमा शिश्नदेवतालाई मान्नेलाई आर्यहरूले आफ्नो विपक्षी सम्झेको कुराचाहिं ठाउँ ठाउँमा देखिएको छ। यसै प्रसंगमा हाम्रो उहिलेको जमानामा देव-दैत्यहरूको बीचमा सघर्ष हुँदा आफ्नो आफ्नो विजयको लागि इन्द्रादि देवताहरू ब्रह्मा विष्णुको शरणमा पुग्ने तथा दैत्य-दानवहरू महादेवलाई खुशी पार्न उद्यत हुने कुरा ज्यादै आकर्षक रहेको छ। यसबाट महादेव साँच्चै नै आर्येतर पक्षपाती थिए भन्ने शंका उत्पन्न हुनु स्वाभाविक छ। यस प्रकार लिङ्गरूपको शिव हाम्रो समक्ष आउँछ। यद्यपि अहिले शिव, आर्य तथा अनार्य हामी सबैको लागि सर्वशक्तिमान् ईश्वर बनि-सकेका छन्। यसको महत्व अपरम्पार छ। शिवरात्रीको रूपमा यिनै शिवको पूजा हुन्छ, व्रत हुन्छ।

पुराणकारहरूले शिवलाई हिमालयको कैलाशमा बस्ने महादेवको रूपमा कल्पना गरेका छन्। यस कारण हिमालयको काखमा रहेको नेपाल-भूमिमा शिवको विशेष कदर हुनु स्वाभाविक छ। यसै कारण काठमाडौं उपत्यकाको पञ्चमुखी पशुपतिनाथ सारा शैव मतावलम्बीहरूको श्रद्धाको महान् पुण्यस्थल रहेको छ। शिव-तत्वहरूको खोजी गर्ने विद्वानहरू देश विदेशमा छरिए तापनि यिनीहरूको बसोबास गर्ने भूमि ज्यादै टाढा

रहेता पनि श्रद्धा र आस्थाको केन्द्र यसै मूर्तिमा रहेको छ। पशुपतिनाथको आदिमूर्ति कुन समयमा बनेको हो यो कुरा निर्णय गर्न ऐतिहासिक सामानहरूको खोजी गर्नु नै छ। तर उपलब्ध ऐतिहासिक सामानहरूको आधारमा विचार गर्दा लिच्छविराजाहरूले चागुको नारायण र स्वयभूको बुद्धलाई सम्मान गरे झैं पशुपतिनाथको भव्य मूर्तिको पनि मुक्त कण्ठले प्रशसा गरेका छन्। आफूलाई पशुपतिनाथको कृपापात्र बनाएका छन्। यसबाट आजभन्दा चौध पन्ध्र सय वर्षपहिले नै उपत्यकामा पशुपतिनाथको प्रभुत्व जमिसकेको कुरा स्पष्ट छ। तर यहाँ यो कुरा पनि विचारणीय छ कि वर्तमान पशुपतिनाथको मूर्तिचाहिं प्राचीन मूर्ति होइनन्। यो मूर्ति स्थितिमल्लको समयमा काठमाडौं उपत्यकाको महासामन्तले स्थापना गरेका थिए। प्राचीन मूर्ति समसुद्दीनको नेतृत्त्वमा भएको मुसलमानहरूको आक्रमणमा नष्ट भएको कुरा हाम्रा इतिहासकारहरूले सप्रमाण उल्लेख गरिसकेका छन्। प्राचीन पशुपतिनाथको मूर्ति कहाँ मिल्काइए ज्ञात भएको छैन।

प्राचीन समयमा पशुपतिनाथको दर्शन गर्न आउने देशका या विदेशका यात्रुहरूको लागि कुनै कडा नियन्त्रण थिएन। प्रजातन्त्र हुनु-भन्दा पहिलेसम्म राणा-शासनकालमा त्यस वेलाका शासकहरूले राजधानीको रूपमा रहेको काठमाडौं उपत्यकामा प्रवेश गर्न आफ्नै तराईका वासिन्दाहरूमाथि समेत कडा नियन्त्रण गरेका थिए। यस्तो स्थितिमा भारतवासी शैव-भक्तहरूको लागि पनि पशुपतिनाथको दर्शन दुर्लभ हुनु स्वाभाविक छ। केवल शिवरात्रीकै अवसरमा मात्र आठ दिनसम्म देश विदेश सबैका लागि पशुपतिनाथको दर्शन गर्न उपत्यकामा आउन दिने

अनुमति प्रदान गर्ने हुनाले त्यस वेला विशेष गरेर शिवभक्त हाम्रो तराई तथा भारतको कुनाकुनाबाट शिवरात्रीको मेला भर्न विशेष उत्साह तथा श्रद्धाले यहाँ आउँदथे। यस कारण शिवरात्रीको मेलामा विशेष ढङ्गको चहलपहल देखा पर्नु स्वाभाविक छ। तथा शिवरात्रीको व्रतलाई खूद शिवजीले नै सबभन्दा ठूलो पुण्यदायक व्रतको रूपमा पार्वतीलाई सम्झाएको कुरा हाम्रा पुराणहरूमा उल्लेख भएकोले यसमा शिवभक्त धर्मावलम्बीहरूले विशेष आस्था देखाउने कुरा पनि स्वतः सिद्ध छ। त्रिदल पत्रमा त्रिनेत्र शिवजीलाई सम्झेर त्रिदल बेलको पात यस मेलामा विशेष पुण्य दिने वस्तु बन्ने कुरा र शिकारको लागि बेलको रूखमा बसेको व्याधको कथा पनि त्यत्तिकै रोचक छ।

## पौराणिक कथा

एक दिन पार्वतीले शिवजीसंग शिवरात्रीको व्रतको विषयमा सोध्दा महादेवले यस व्रतको महात्म्यको कुरा सुनाएर भने—"हे पार्वती, यो व्रत-तुल्य ठूलो व्रत अरू कुनै छैन। जसले यो व्रत बस्दछ त्यो ठूलो दयावान् हुनेछ। जस्तै—एक दिन एउटा व्याधालाई ऋण लागेको हुनाले साहूको कैदमा थुनिनुपरेको थियो। तर साहूजीले केही शर्त राखरे छोडि-दिए। यस कारण आखेटको लागि उ जङ्गलतिर गयो। दिनभरि खोज्दा पनि शिकार भेटिएन। आखिर रात भएपछि जङ्गलैमा वास बस्नुपरेको हुनाले एउटा बेलको रूखमा चढेर रात बिताउन थाल्यो। सयोगवश त्यस बेलको रूखमुनि एक शिवलिङ्ग पनि स्थापना भएको रहेछ। व्याधाले बेलका पातहरू चुँडाल्दै खसालेका पातहरूले त्यो शिवलिङ्ग पुरिँदै थियो। यतिकैमा त्यहाँ मृगहरू देखा पर्न थाले। झट्पट

व्याधाले ती मृगहरूलाई मार्न आफ्नो धनुष उठाउन थाल्यो। यस्तो देखेर मृगहरूले भने—"हेर व्याध, आज हामीहरूलाई नमार। हामी कोही गर्भवती छौं त कोही रजस्वला भएकी छौ। यस्तो अवस्थामा हाम्रो जुन आकांक्षा हुन्छ त्यो शायद तिमीलाई थाहा हुँदैन। यदि हामीलाई मार्नु छ भने हामी आफ्नो आफ्नो आकांक्षा पूर्ण गरी यहीं उपस्थित हुनेछौ।" मृगहरूको यस्तो करुण शब्दले किन हो कुन्नि त्यस व्याधको मनमा पनि दयाको भाव उत्पन्न हुन थाल्यो र व्याधले ती मृगहरूलाई छोडिदिए। आखिर व्याधाजस्तो व्यक्तिको मनमा पनि यस्तो दयाको भाव कसरी उत्पन्न भयो भनी शिवजीले पार्वतीलाई सम्झाएर भने कि त्यो दिन महा-शिवरात्रीको दिन थियो। व्याधाले दिनभरि भोकै बसेर शिवलिङ्गमा बेलको पत्र चढाएको हुनाले नै उसको हृदय परिवर्तन भएको हो। यस कारण हे पार्वती, तिमीले बुझ्नु कि शिवरात्रीको व्रतको महिमा कत्रो रहेछ।

———

# होलीको अवसरमा सिंहसार्थवाहको सिन्दुरयात्रा

फाल्गुणमा हुने फागूलाई कोही वसन्तोत्सवको रूपमा मनाउँछन् त कोही प्रह्लादलाई काखमा लिई आगोमा हामफाल्ने होलिकाको कथामा आधारित भएको पौराणिक कुरालाई सम्झेर मनाउँछन्। कोही होलीमा प्रयोग हुने अपशब्द र त्यसमा विशेष गरेर रमाउने निम्न तहका व्यक्तिहरूको उत्साहलाई देखेर यसलाई शुद्रहरूको चाडको रूपमा रमाउँछन् त कोही कृष्णको लीलामा होलीको महत्व बढाउन चाहन्छन्। यस प्रकार अनेक विचारधारा र अनेक पौराणिक कुराहरूको प्रभावमा होलीको विविधरूप देखापरेको छ। तर जहाँसम्म वसन्त ऋतुमा मनाउने चाड तथा त्यस पर्वमा गाउने हाम्रा लोकगीतहरूको सवाल छ, फागूलाई वसन्तोत्सवकै रूपमा मनाउनु अधिक युक्तिसंगत देखिन्छ।

ऋतु-ऋतुको हावापानीले लता प्रतानादिदेखि लिएर प्राणीमात्रको जिन्दगीमा असर पार्ने कुरा स्वाभाविक छ। शीतऋतुको चीसो हावा र हिउँले सारा पातहरू झरी खंग्रङ्ग सुकेर विरूप भएका रूख बिरूवाहरूमा वसन्तको आगमनले नयाँ नयाँ कोपिलाहरू पल्हाएर रङ्ग विरङ्गी फूलहरू फुल्न थाल्दछन्। जाडोको कठोर प्राकृतिक यातनाले मूक रहेका चरा-चुरुङ्गीहरूमा पुरुष-तत्वले स्त्री-तत्वलाई आकर्षण गर्न प्रकृतिले नै विशेष सुन्दर हुने भाले चराहरू आफ्नो आफ्नो सुन्दरतालाई प्रदर्शन गरेर स्त्री-तत्वलाई आकर्षण गर्न अनेक मधुर आवाजले मस्त भई गाउन थाल्द-

छन्। यस प्रकार शीतऋतुले सकुचित भई निरुत्साह भएका मानव-देहमा पनि वसन्तको आगमनले नयाँ उत्साह, नयाँ उमङ्गको संचार हुन थाल्दछ। खास गरेर वसन्तको हावापानीले असर गर्दा मानवदेहभित्रका स्रोतहरूमा श्लैश्मिक श्राव बढ्ने हुन्छ। यस प्रकार शरीरभित्रको स्रोत-हरूमा श्लैश्मिक स्राव बढ्ने हुनाले नै यस वेला विशेष काम तृष्णा बढ्ने कुरा पनि स्वाभाविक छ। यस्तो स्थितिमा शरीरभित्रका स्रोतहरूमा बढेको श्लैश्मिक स्रावलाई बाहिर ल्याउनु आवश्यक रहेको हुनाले स्वास्थ्यको दृष्टिले यस वेला खेलकूदमा कुनै नकुनै किसिमको व्यायाम अत्यावश्यक मानिएको छ। जसको परिणामस्वरूप समयले दिएको नयाँ वातावरणमा होलीकै रूपमा व्यायामको दृष्टिले नाच्ने, गाउने, हाँस्ने, हँसाउने आदि अनेक आमोदप्रमोदको साथसाथ रूख बिरूवाहरूका नयाँ नयाँ पालुवा-हरूमा नयाँ नयाँ वासन्ती रङ्ग चढेझैं मावनजीवनमा पनि चढेको नयाँ रङ्गलाई स्पष्ट रूपमा प्रकट गर्न रङ्ग खेल्ने, अबीर छर्ने आदि अनेक होलीका सास्कृतिक तत्वहरू ज्यादै रोचक ढङ्गमा देखिएका छन्। हाम्रो देशमा होली अष्टमीको दिनदेखि पूर्णिमाको दिनसम्म मनाउने चलन छ। होलीको आरम्भ चीर ध्वजोत्थान गर्ने परम्पराबाट हुन्छ। कपडै-कपडाले सजाएको त्यो चीर-ध्वज होलीको अन्तिम दिन दाह गर्ने हाम्रो चलन छ। जसले प्रह्लादको पौराणिक कथालाई याद दिलाउँछ। यो एक होलीको सामान्य कुरा हो। तर होलीको अवसरमा हाम्रो यहाँ जुन 'चकँद्य'को नगर परिक्रमा गर्ने परम्परा छ त्यो ज्यादै विचारणीय छ।

चकँद्यको जात्रा ठवहिलको चक्रशील महाबिहारबाट शुरू हुन्छ। यसलाई चक्रमणशील देवताको रूपमा पूज्य मानेका छन्। मूर्तिकलाको

दृष्टिले यो मूर्ति त्यत्तिको प्राचीन ढङ्गको छैन। सम्यक् तथा पञ्चदानहरूमा प्रदर्शन हुने दीपंकरको अर्धमूर्ति झैं यो चकँद्यको मूर्ति पनि त्यही ढङ्गको छ। आकार प्रकार पनि प्रायः उस्तै किसिमको छ। तर यसको चेहरा रातो छ र हस्तमुद्रा अलि पृथक् ढङ्गको छ। वास्तवमा मल्लकालिक यस मूर्तिको चक्रशील महाबिहारको नाता र चक्रमणशील देवता भन्ने प्रचलन रहेको हुनाले नै चकँद्य भन्ने नामकरण रहेको हो। हाम्रो यहाँ यस चक्रमणशील देवताको जात्रा गर्ने परम्परामा किंवदन्तीअनुसार सिंहसार्थवाह ल्हासाबाट व्यापार गरी फर्केको अवसरमा नगरवासीहरूले सिन्दूरजात्रा गरेको भन्ने खास तात्पर्य अन्तर्भाव भएको छ। यसकारण यसको महत्त्व गुरुतर रहेको छ। तर यो कुन समयको कुरा हो, सिंहसार्थवाह भन्ने व्यक्ति को हुन्, चकँद्य र सिंहसार्थवाहको बीचमा के सम्बन्ध छ यस विषयमा ऐतिहासिक दृष्टिकोणले अन्वेषण गर्न बाँकी नै छ।

हाम्रो उहिलेको चलनअनुसार देश विदेशमा गएर एक देशबाट अर्को देशमा पण्य वस्तुहरूको आदान प्रदान गरी व्यापार गर्ने व्यापारी-हरूको नाइकेलाई 'सार्थवाह' भनिन्छ। सार्थवाह शब्द संस्कृत भाषाको शब्द हो। यस्तो स्थितिमा सिंह जोडिएको सार्थवाह शब्द कुनै खास व्यक्तिलाई बुझाउने शब्दजस्तो नदेखिएता पनि कुनै बखत उहिलेको जमानामा विदेशमा गई व्यापार गर्ने व्यापारीहरू हाम्रो देशमा थिए भन्ने कुराचाहिं यसबाट स्पष्ट हुन आउँछ। ल्हासासँग नेपालको व्यापार संबन्ध रहेको कुरा लिच्छविकालदेखि चलेको थियो भन्ने कुरा प्रमाणिक दृष्टिकोणले एकएक गरी सकेत गर्न नसकेता पनि किंवदन्तीको रूपमा अनेक ढङ्गमा चलेको कुरा सर्वविदित छ। मानदेवको समयमा नै, अर्थात्

लगभग पन्ध्र सय बर्षजति पहिले नै हाम्रो देशमा, खास गरेर काठमाडौं उपत्यकामा संगठित भएर देश-देशान्तरमा व्यापार गर्न जाने व्यापारीहरू बनिसकेका र ती व्यापारीहरूको नाइकेलाई सार्थवाह भन्ने प्रचलन भइसकेको कुरा हाम्रा लिच्छवीकालिक शिलापत्रहरूमा स्पष्टतया उल्लेख भएका छन् । यस्तो स्थितिमा ती सार्थवाहहरू व्यापारको लागि कहिले भारत तथा कहिले तिब्बत जान नसक्ने कुरा छैन । किनभने उहिलेको जमानामा हाम्रा देश-वासीहरूले निकट सम्पर्क राख्न सक्ने देशहरू यिनै हुन् ।

बाटोघाटो तथा सुरक्षाको नै कुनै राम्रो व्यवस्था नभएको उहिलेको जमानामा अनेक बहुमूल्य माल-सामानहरू लिएर देश विदेशमा गई व्यापार गर्ने कुरा सामान्य होइन । चोर, डाँका, बाटोघाटो, जीव-जन्तु आदिको अनेक भय हुनु स्वाभाविक छ । यस्तो स्थितिमा देश-विदेशमा गई व्यापार गरेर अनेक यातना सही फर्केर आउने व्यापारीहरूका तथा विशेष गरेर ती व्यापारी-हरूका नेताको ठूलो सम्मान र कदर हुनु स्वाभाविक छ । किनभने त्यस्ता व्यापारीहरू सामान्य किसिमका व्यक्ति हुँदैनथे । तिनीहरू विशेष लायक, उत्साही र शूरवीर हुन्थे र जुनसुकै आपत् विपत्मा पनि धैर्य लिएर त्यसको सामना गर्न सक्ने हुन्थे । वास्तवमा यही हेतु सिंहसार्थवाहको नाउँले हाम्रो यहाँ होलीको क्रममा पूर्णिमापछि प्रतिपदाको दिन ल्हासाबाट व्यापार गरी फर्केका व्यापारीहरूका नेताको सिन्दूर जात्रा गरी नगर-परिक्रमा गर्ने परम्परा बनाएको देखिन्छ । यद्यपि आज हाम्रो समक्ष सिंहसार्थवाहको नाउँमा कुनै व्यक्तिविशेषको जात्रा भएको देखिंदैन । यहाँ त हाम्रो धार्मिक भावनाअनुसार एक रातो मुखधारी बोधिसत्त्व रूपको देवताको मात्र जात्रा हुन्छ । जुन जात्रा

टबहिलबाट प्रारम्भ हुन्छ । यसबाट यो कुरा झल्कन्छ कि कुनै बखत यस ठाउँका व्यापारीहरू ल्हासा गई व्यापार गरेर फर्केका थिए । वास्तवमा समय पनि अनुकूलको छ । किनभने ल्हासा जान या आउन हिमालय पर्वतलाई नाघ्नुपर्ने हुनाले फाल्गुणदेखि वैशाखसम्मको समय जति अनुकूल छ त्यति अरू वेलाको समय अनुकूल छैन । यस कारण होलीको सांस्कृतिक चहल-पहलमा अबीर अक्षता छरेर सिंहसार्थवाहको सम्मान गर्ने कुरा अवश्यमेव उपरोक्त कुरालाई नै पुष्टि गर्ने ढङ्गको छ भन्नुमा कुनै अतिशयोक्ति हुनेछैन ।

हाम्रो देशमा अनेक चाडबाडहरू चलेका छन् । ती चाडबाडहरूमा कुनै मौलिक रूपका छन्, कुनै अनुकरण रूपका छन् । होली अवश्यमेव हाम्रो मौलिक चाड होइन, तथापि यसको उपयोगिता र मनोहारितालाई ध्यानमा राखेर नेपाली मात्रले होलीलाई रुचाएका छन् । साथै होलीलाई आफ्नो बनाउन जुन गुठी गहनाहरू होलीका अवसरमा जुटाएका छन् त्यसैमा चर्कच्चको जात्रा गरेर सिंहसार्थवाहको सिन्दूरयात्रा गर्ने हाम्रो मौलिक परम्परा ज्यादै रोचक ढङ्गका छन् । जसमा सारगर्भित सामाजिक इतिहासका कुराहरू छिपेका छन् । यसकारण होलीमा हामीले व्यायामको सांस्कृतिक रूप र सार्थवाहको महत्त्वलाई हृदयंगम गर्नु आवश्यक छ ।

## पौराणिक कथा

हिरण्यकश्यपु आफ्नो बल पुरुषार्थमा ज्यादै अभिमान गर्दथे । उनी जत्तिको बलवान यस दुनियाँमा अरू कोही छैन भन्ने उनी ठान्दथे । सारा देवताहरू यिनको उत्पातले भयभीत थिए । तर हिरण्यकश्यपु जतिसुकै

बलवान भएता पनि विष्णुलगायत ठूला-ठूला देवी-देवताहरूको निन्दा गर्ने कुरा उनका छोरा प्रह्लादलाई मन परेको थिएन । यस्तो स्थितिमा बाबु र छोराको बीचमा वैमनस्यता बढ्नु स्वाभाविक कुरा हो । एकदिन हिरण्य-कश्यपुले आफ्ना छोरालाई आगोमा फालिदिने कठोर यातनाको सजाय दिए । यस्तो भयानक कर्म हुन लागेको देखेर हिरण्यकश्यपुकी बहिनी होलिकाले प्रह्लादलाई बचाउन उनलाई आफ्नो काखमा राखेर आगोमा हाम्फालिन् । जसबाट प्रह्लादलाई आगोले छुन सकेन । यही हेतु त्यस दिनको यादस्वरूप होली चल्ने हुनाले होलीको महत्त्व ठूलो छ भनी नारदले युधिष्ठिरलाई सम्झाएको कुरा भविष्यत् पुराणमा उल्लेख भएको छ ।

## किंवदन्ती

एक दिन सिंहसार्थवाह व्यापार गर्न आफ्ना साथी-भाइहरूको साथ ल्हासा गए । नेपालबाट लगेका अनेक चीजबीजहरूको त्यहाँ राम्रो सौदा भयो । आशातीत धनदौलत पनि प्राप्त भयो । सिंहसार्थवाह चाँडै आफ्नो देश फर्कने तरखरमा थिए । तर ल्हासाका युवतीहरूको माया तथा छल-कपटमा आफ्ना अधिकांश साथीहरू फसेको हुनाले फर्कनै नसक्ने स्थितिमा उनी दिन पर दिन जर्कडिदै थिए । एक दिन उनी ज्यादै दिक्दार भई परमेश्वरसँग पुकार्न थाले—"हे प्रभु ! मलाई यस्तो शक्ति देउ जसबाट मैले मेरा साथीहरूलाई यहाँबाट सकुशल फर्काउन सकूँ ।" त्यही रातमा सिंहसार्थवाह सुतेको कोठामा बलिरहेको पानसको बत्तिमा करूणामय प्रत्यक्ष भएर उनलाई सम्झाएर भने—"हेर सिंहसार्थवाह , तिमी चिन्तित नहोऊ, तिमी अवश्यमेव सकुशल

साथीहरूसहित घर फर्कन सक्नेछौ। तर फर्कने वेला तिम्रा साथीहरूलाई सम्झाउनु कि यहाँका युवतीहरूले जुनसुकै माया ममता तथा स्नेहका कुराहरू गरेता पनि फर्केर नहेर्नु, फर्केर हेर्‍यो भने उनीहरूले अवश्यमेव मारेर खानेछ, किनभने यिनीहरू राक्षस स्वभावका छन्।" यति भनेर करूणामय विलीन हुनुभयो। अब सिंहसार्थवाहको घर फर्कने कुरामा उत्साह बढ्यो। साथीहरू सबैलाई कुरा सुनाइदिएर घर फर्कन लागे। साँच्चै बाटोमा त्यस्तै घटना भयो। फर्केर हेर्ने जतिलाई धमाधम समात्दै खतम गर्न लागे। आखिर सिंहसार्थवाह केही बचेका साथीहरूमात्र साथमा लिई आफ्नो देश काठमाडौं फर्के।

---

# स्वास्थ्यको दृष्टिमा पिशाच चतुर्दशी

उहिलेको विचारधाराअनुसार भूतपिशाचहरू कस्ता हुन्छन् यो कुरा दृष्टिगोचर हुने विषय होइनन्। तर यी तत्त्वहरू कहिलेकाहीं मानवसमाजको लागि स्वास्थ्यको दृष्टिले घातक सिद्ध भएका छन्। आयुर्वेदशास्त्रको परिभाषाअनुसार कतिपय यस्ता रोगहरू छन् जुन रोगहरू उत्पन्न हुनमा कुनै शारीरिक कारणहरू भने स्पष्ट रूपमा देखिने हुँदैनन् तर दैहिक कष्टहरू भने उत्पन्न हुन्छन्। यस्ता रोगहरू भूत-दोषजन्य रोगहरूमा गनिएका छन्। आयुर्वेदशास्त्रका आठ अङ्गहरूमा यस्ता रोगहरूको चिकित्सा गर्ने एक भिन्नै विभाग रहेको छ। यसलाई भूत-विद्या भनिन्छ। भूत-विद्याको प्रणालीअनुसार यस्ता रोगहरूको चिकित्सा-क्रम पनि भिन्नै किसिमको हुन्छ। जसमा मणिमन्त्रबलिहोमादिका विधिविधानहरू मुख्य रूपमा लाभदायक सम्झेका छन्। यस्तो स्थितिमा भूतपिशाचादिहरूको शान्तिस्वस्तिका लागि हाम्रा उहिलेका तान्त्रिकहरूले विशेष स्थान पाउने कुरा स्वाभाविक छ। किनभने तान्त्रिकहरूको साधनामा मन्त्र-पाठ, बलि-होमादिको अनिवार्यता एक महत्त्वपूर्ण विषय बनेको छ।

मल्लकालमा हाम्रो देशमा जुन ढङ्गले तान्त्रिकहरूको विशेष प्रभाव रहेको थियो त्यस कुराको याद दिलाउने अनेक तत्त्वहरू हाम्रो समक्ष छन्। ती तत्त्वहरूमा सास्कृतिक दृष्टिकोणले विचार गर्दा हाम्रा एक-एक चाडपर्वहरू विशेष घतलाग्दा छन्। चतुर्दशीको दिन भूतपिशाचहरूमा तिनीहरूको भाव

जागृत हुन्छन् भन्ने कुरा हाम्रो आयुर्वेद-शास्त्रमा स्पष्टरूपमा उल्लेख भएको छ । यसकारण यो दिन पिशाचादि भूतहरूको शान्तिका लागि खास ढङ्गको बलि दिने पूजा गर्ने कुरा भूत-विद्याको प्रकरणमा लेखिएको छ । यस विषयको अलिकति कुरा माथि घण्टाकर्णको प्रकरणमा पनि उल्लेख भइसकेको छ । यस्तो स्थितिमा आफ्नो आफ्नो पुरुषार्थ देखाउन कटिबद्ध रहेका हाम्रा तान्त्रिकहरूले यस दिनलाई विशेष आफ्नो अभीष्ट दिनको रूपमा महत्त्व दिनु स्वाभाविक छ । अर्थात् भूतादि-दोष शान्त गर्न मन्त्र-विद्या उपयोगी रहेको हुनाले मन्त्रविद्यामा आफूलाई विशेष निपुण ठान्ने हाम्रा उहिलेका तान्त्रिकहरूले चतुर्दशीकै दिन देखापर्ने भूतादि-दोष हटाउने कुरामा सक्रियता देखाउनु स्वभावैको कुरा छ । वास्तवमा तान्त्रिकहरूको जमघट रहेको हाम्रो समाजमा चाडको रूपमा देखापरेको पिशाच चतुर्दशीको महत्त्व यस्तै वस्तुस्थितिमा सन्निहित रहेको छ । यसबाट पिशाच चतुर्दशीको सास्कृतिक महत्त्व तान्त्रिक ढङ्गले स्वास्थ्यसम्बन्धी कुरामा आधारित छ भन्ने कुरा स्पष्ट हुन आउँछ । यही स्वास्थ्यविषयको भावनालाई अधिक व्यापक तथा प्रभावशाली बनाउन पिशाच चतुर्दशीको दिन एक यस्तो महत्त्वपूर्ण चाडको रूपमा परिणत गरिएको छ, जसको गरिमा कुनै बखत हाम्रो समाजमा ज्यादै गुरुतर थियो । यद्यपि यो चाड आजभोलि स्वास्थ्यको दृष्टिले मनाईदैन । जनताले यस चाड-भित्र लीन भएका मार्मिक तथा अत्यन्त उपयोगी लौकिक कुराहरूलाई बिर्सिसकेका छन्, केवल अलौकिक कुरामात्र स्मृतिको विषय बनेको छ ।

जहाँसम्म पिशाच चतुर्दशीको दिन मनाउने स्वास्थ्यविषयक तान्त्रिक साधनाको कुरा छ, हामीले फोहर ठाउँमा बस्ने महादेव तथा भद्रकालीहरूको पूजा गर्ने, जात्रा गर्ने हाम्रो परम्परालाई उपेक्षा गर्न सकिंदैन । किनभने पिशाच

चतुर्दशीको दिन यी देवदेवीहरूको पूजा गर्ने कुरा धार्मिक भावनामा आधारित भएता पनि यसको वास्तविक तात्पर्य स्वास्थ्यसम्बन्धी कुरामा नै सन्निहित भएको छ। जस्तै, चैत्र महीनादेखि क्रमशः गरम हुन थाल्दछ। गरम याममा विशेष गरेर हैजा, सन्निपात ज्वरजस्ता अनेक भयानक रोगव्याधिहरूको प्रकोप हुन्छन्, यी रोगहरू छुवाछुतबाट उत्पन्न हुने हुनाले स्वस्थ मानिसहरू पनि अकस्मात् यस्ता रोगहरूबाट पीड़ित हुन्छन्। रोगाणु-विज्ञानको विषयमा ज्ञान नभएको उहिलेको जमानामा यसरी अकस्मात् अज्ञात कारणहरूबाट रुग्ण भई मुनुमुनु मरेको देखेर उहिलेका जनताले भयभीत हुनु स्वाभाविक छ। वास्तवमा यही कारण भूत-शान्तिको प्रकरणमा चैत्र महीनाको चतुर्दशी विशेष महत्त्वपूर्ण रहेको छ। अर्थात् चैत्र महीनादेखि यसप्रकार अदृश्यरूपको कारणबाट पनि हित हुने अनेक रोगव्याधिहरूबाट बच्नका लागि हाम्रा उहिलेका जनता विशेष सचेत रहेको कुरा पिशाच चतुर्दशीको क्रियाकलापले बताउँछ। हैजा तथा सन्निपातजस्ता रोगहरू फैलिने कुराको स्पष्ट कारण यद्यपि उहिलेको जमानामा अज्ञात रहेता पनि यस्ता रोगहरू मुख्यतया फोहर ठाउँबाटै फैलिन्छ भन्ने कुरा हाम्रा पूर्वजहरूले नमानेको छैन। अशुचिबाट भूतादि-दोष उत्पन्न हुन्छ भन्ने कुरा उनीहरूले ठूलो महत्त्व दिएर ठाउँ ठाउँमा व्यक्त गरेका छन्। यस्तो स्थितिमा गरम यामको बखत हाम्रो घरको वरिपरि रहेका ढल तथा फोहर फाल्ने ठाउँको सुघर सफाइ राम्रो हुनुपर्दछ भन्ने कुरा सोच्नु ज्यादै युक्तिसगत देखिन्छ। यही सुघरसफाईको भावना साधारणसे साधारण जनतामा समेत बोधगम्य बनाउन उहिलेको परिस्थितिमा विशेष प्रभावशाली रहेको धर्मको व्यावहारिकतालाई अपनाएर फोहरहरू फाल्ने ठाउँमा तथा ढलहरूमा महादेवको प्रतीक स्वरूपको अव्यक्त मूर्ति स्थापना गरेर ईश्वर रहेको

ठाउँमा सुघर सफाइ गर्न बाध्य गराएको कुरा हाम्रा ढलहरूमा तथा फोहरहरू फाल्ने ठाउँमा देखापर्ने महादेवको अव्यक्त प्रतिमाले बताउँछ। वास्तवमा पिशाचचतुर्दशीको दिन हाम्रो यहाँ यिनै महादेवको सुघर सफाई गरेर पूजा हुन्छ। यस प्रकार पिशाच चतुर्दशीको दिन महादेवको पूजा गर्ने परम्परा पनि तान्त्रिकहरूकै देन बनेको छ। किनभने हाम्रा तान्त्रिक-ग्रन्थहरूमा पिशाच चतुर्दशीको दिन मृत्यु-भय तथा रोग-भयबाट बच्नका लागि मृत्युञ्जय देवताको पूजा गर्ने कुरा मुख्यरूपमा उल्लेख भएको छ। मृत्युञ्जय देवताको स्वरूप निर्माण गर्दा उहिलेका दार्शनिकहरूले षड्भुज महादेवको ध्यानलाई साकार गरेको छ। यो कुरा ज्यादै विचारणीय छ। यद्यपि यस्तो महत्त्वपूर्ण लौकिक कुरा पनि शनैश्चरको कुदृष्टि परेको किंवदन्तीमा विलीन भइसकेको छ या भस्मासुरको कथामा अन्तर्भाव भइसकेको छ।

हाम्रा तान्त्रिक-ग्रन्थहरूमा पिशाच चतुर्दशीको दिन पूजा गर्नुपर्ने उपरोक्त मृत्युञ्जयस्वरूपको महादेवको अतिरिक्त काली तथा कुमारीहरूको पूजा गर्ने कुरा पनि साथसाथै उल्लेख भएको छ। यस कारण हाम्रो यहाँ भद्रकालीहरूको पनि जात्रा गरी पूजा गर्ने सास्कृतिक परम्पराहरू देखिएको छ। स्वास्थ्यको दृष्टिले महत्त्वपूर्ण रहेको पिशाच चतुर्दशीको सांस्कृतिक पर्वमा यस प्रकार भद्रकालीको पूजा तथा जात्रा गर्ने धार्मिक तथा मनोरञ्जक तत्त्वहरू कसरी अन्तर्भाव भए भन्ने कुरा कुनै पनि जिज्ञासुका हृदयमा उत्पन्न हुन सक्दछ। तर यस प्रकारका जिज्ञासुहरूको जिज्ञासालाई पूर्ति गर्न सुन्दरानन्द कविको 'त्रिरत्न सौन्दर्य गाथा'मा उल्लेख भएको भद्रकालीको कुरा ज्यादै महत्त्वपूर्ण छ। अर्थात् भद्रकाली रहेको पीठलाई 'लज्जा' पनि भनिन्छ। यसको तात्पर्य हो भद्रकालीको वरिपरि दिसा पिशाब गरी फोहर गर्नु लज्जाको कुरा

हो । यसकारण जहाँ पायो त्यहाँ फोहर नगर्ने प्रेरणा दिन यो पीठ 'लज्जा पीठ'को नाउँले महत्त्वपूर्ण रहेको छ । काली यद्यपि शैव-शाक्तहरूको परम तत्त्वको रूपमा देखापरेको छ तापनि भद्रकालीलाई 'वैद्यराज्ञी'को संज्ञा दिइएको छ । अर्थात् हाम्रो टुँडीखेलको ईशानकोणमा रूखहरूको उम्रेको जुन भद्रकालीको थुम्को छ त्यो थुम्को अनेक जडीबूटीहरूले युक्त भएको हिमालयको स्मृतिमा सिद्धहरूले आफ्नो साधनाका लागि स्थापना गरेको स्थान हो । सुन्दरानन्दले यस ठाउँमा साधना गर्ने सिद्धहरूमा गुणपालको नाउँ उल्लेख गरेका छन् । वास्तवमा सिद्धहरूले आफ्नो-आफ्नो भैषज्य सिद्धि हासिल गरेको लज्जापीठजस्तो ठाउँमा रहेको हुनाले नै भद्रकालीलाई वैद्य-शास्त्रमा पारगत भएकी वैद्यराज्ञी भद्रकालीको स्वास्थ्यको दृष्टिले महत्त्वपूर्ण रहेको पिशाच चतुर्दशीको दिन जात्रा गर्नु तथा पूजा गर्नु कुनै अप्रासंगिक कुरा छैन । यस प्रकार चतुर्दशीको दिन हुने पैशाचिक भावको प्रतिरोध गर्ने प्रकरणमा हाम्रा तान्त्रिकहरूले देखाएको चमत्कारको फलस्वरूप ढलहरू तथा फोहरहरू फाल्ने ठाउँमा विशेष गरेर गरमीको याममा सुघर सफाइ गर्न धर्मको नाउँमा चलाएको सांस्कृतिक गतिविधिहरू ज्यादै महत्त्वपूर्ण र प्रभावोत्पादक रहेका छन् । जहाँसम्म सत्य लौकिक कुराको सवाल छ, हाम्रो पिशाच चतुर्दशीको दिन देखिने यस प्रकारका व्यावहारिक कुरालाई हामी बुझ्न सक्दैनौं । यद्यपि देवी-देवताको प्रीतिका लागि चढाइने जाँड-रक्सीको प्रसादले उन्मत्त भएका धार्मिक समाजले यस्तो लौकिक कुरामा ध्यान दिन चाहँदैनन् ।

## किंवदन्ती

एक दिन कान्तिपुर शहरदेखि पूर्वतिर खेतमा काम गरिरहेको एकजना

कृषकले अकस्मात् कसैले रोएको आवाज सुन्यो। यो आवाज कहाँबाट आएको हो भनी यताउति हेर्दा खेतको बीचमा एउटा बालिका रोइरहेको देख्यो। हत्पत दगुरेर त्यस बालिकालाई तिमी को हौ, किन रोएकी भनी सोध्न थाल्यो। बलिकाले केही पनि जवाफ दिइनन्। अनि आफ्नो खाजाका लागि ल्याएको एक रोटी त्यस बालिकालाई दियो। यो रोटी भूइँमै छोडेर ती बालिका उत्लैखेरि अदृश्य भइन्। कृषकले आश्चर्य मानेर त्यो रोटी टिप्न लाग्दा रोटी सुनको रोटीको रूपमा परिणत भएको पाइयो। यही कारण नेवारी भाषामा यस बालिकाको नाउँ 'लुँमडी' भन्ने रहन गयो। वास्तवमा यही 'लुँमडी' भद्रकालीको नाउँ आजकाल प्रसिद्ध छ।

---

# एक वैश्यको जीवनमा आधारित मातृतीर्थ-स्नानको महत्त्व

आमा-बाबुप्रति भक्ति-भावनाको श्रद्धा जगाउने पवित्र उद्देश्यमा चलेको हाम्रो आमाको मुख हेर्ने र बाबुको मुख हेर्ने दुवै मौलिक ढङ्गका राष्ट्रिय चाडहरू वैश्यको जीवनीमा आधारित छन्। तीर्थस्थलको दृष्टिले यी दुवै चाडहरू पैतामह-तीर्थ र मातृ-तीर्थसित सम्बन्धित छन्। तथा धार्मिक सम्प्रदायको दृष्टिले पैतामह-तीर्थको महात्म्यमा गोकर्णका शिवजीले स्थान पाएको छ त मातृ-तीर्थको महात्म्यमा मच्छे गाउँको मत्स्यनारायणले स्थान पाएको छ। यी कुराहरू विशेष चाखलाग्दा छन्। ऐतिहासिक दृष्टिले गहिरिएर अध्ययन गर्ने वेला यस्ता कुराहरू ज्यादै उपयोगी हुनेछन्। यहाँ जहाँसम्म आमाको मुख हेर्ने चाडको सवाल छ, एक वैश्यको जीवनीसित घनिष्ठ सम्बन्ध रहेको मातृ-तीर्थ-स्नानको कुरा विशेष विचारणीय छ।

काठमाडौं उपत्यकामा वर्ण व्यवस्थाको प्रचार भएको समय त्यत्तिको प्राचीन देखिंदैन। लिच्छवीकालमा नै वर्ण व्यवस्थाको मान्यताप्रति जनताको आस्था बढेको कुरा हाम्रो ऐतिहातिक प्रकरणमा घटेका घटनाक्रमले बताउँछ। ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र भन्ने जातभातको कुरा यही वर्ण-व्यवस्थाको देन हो। हाम्रो देशमा वैश्यहरूको वशपरम्पराको स्थिति पनि ज्यादै रोचक ढङ्गको छ। वर्ण-व्यवस्थानुसारको जातले वैश्य रहेता पनि काम भने राजकाज चलाउने ढङ्गको बनेको छ। वास्तवमा वैश्यहरूको मुख्य काम

बन्द-व्यापार चलाउनु हो । तथापि हाम्रो देशमा शासकको रूपमा वैश्य-हरूको वशपरम्परा रहेका छन् । जस्तै, रामवर्धन परिवारहरू अथवा स्थिति मल्लको समयमा कान्तिपुरको मुख्य शासकको रूपमा रहेको जयसिंहरामका वशपरम्पराहरू। यहाँ एक वैश्य शासक कसरी भए भन्ने कुरा विचारणीय छ । यस प्रकरणमा हामीले उहिलेको जमानाको काठमाडौंको भौगोलिक स्थिति-लाई अलिकति डुबेर सोच्नु आवश्यक छ ।

उहिलेको जमानामा काठमाडौं निवासी जनजीवनमा व्यापारको समस्या ज्यादै महत्त्वपूर्ण थियो । किनभने काठमाडौंको विस्तृत उर्वरा भूमिमा ठाउँ ठाउँका मानिसहरू आकृष्ट भएर बसोबास गर्न आएता पनि अन्नको अति-रिक्त मनुष्यको जीवनलाई चाहिने सबै कुराहरू यहाँ उपलब्ध थिएनन् । आफूलाई चाहिने लत्ता-कपडा, नून-मसलाजस्ता पदार्थहरूको निमित्त समय-समयमा कहिले उत्तर, कहिले दक्षिण भएर विदेश धाउनुपर्दथ्यो । उहिलेको जमानामा काठमाडौंबाट बाहिर जाने समस्या पनि सजिलो थिएन । भयानक वन-जङ्गल, नदी-नालाहरू दशौं बीसौं दिन पैदल हिंडेर पार गर्नु-पर्दथ्यो । यसकारण उहिलेको जमानामा व्यापार गर्न विदेश धाउन सक्ने वैश्यहरू सामान्य किसिमका थिएनन् भन्ने कुरा सजिलैसग अनुमान गर्न सकिन्छ । स्वभावतः यिनीहरू शूर-वीर र बहादुर हुन्थे । व्यापार गर्ने भएको हुनाले धनी हुने कुरा पनि स्वयंसिद्ध छ । यस्तो अवस्थामा जन-समाजमा यिनीहरू आफ्नो बहादुरी र धनदौलतको बलले विशिष्ट व्यक्तिको रूपमा देखापर्नु स्वाभाविक छ । वास्तवमा यही कारणले हाम्रो देशका वैश्य-कुलका व्यक्तिहरू पनि शक्तिशाली महान पात्रको रूपमा परिणत हुन गएको कुरा युक्तिसगत देखिन्छ । जयसिंहरामका वंशपरम्पराहरू वास्तवमा

यस्तै कारणहरूबाट शक्तिशाली शासकको रूपमा परिणत भएको हो वा होइन भन्ने विषयमा ठीक-ठीक निर्णय गर्न खोजी हुनु बाँकी नै छ। तथापि माथि उल्लेख भएका केही उहिलेको भौगोलिक स्थिति र परिस्थितिलाई लिएर विचार गर्दा वैश्यहरूको प्रतिष्ठा बढ्ने कुरामा धेरै युक्ति देखिन्छ। हाम्रो देशमा अनेक चाडबाडहरू देखिएका छन्। वास्तवमा चाडबाडहरू कस्ता-कस्ता दार्शनिक विचारधाराबाट प्रेरित भई आएका छन्, कुन-कुन चाडहरू कस-कसले चलाएका हुन् भन्ने कुराको पनि इतिहास छ। तर लामो समयसम्म अन्धकारमा डुबेका हामीहरूको दुर्भाग्यको कारण यस विषयको इतिहास पूर्णतया लोप नै भइसकेको छ। आमाको मुख हेर्ने चाड प्रत्येक वर्ष हामी पूर्ण भक्ति र श्रद्धाले मनाउँछौं। यो हाम्रो मौलिक चाड हो। यस्तो चाड अन्यत्र यस्तै स्थितिमा चलेको देखिंदैन। यो चाड सबै वर्गले मनाउँछन्। आमाप्रति भक्ति-भावनाले श्रद्धा जगाउने पवित्र उद्देश्य यसमा सन्निहित भएको हुनाले भेदभाव हुँदैन। कुनै पनि मानवको लागि यस चाडभित्र सन्निहित भएको मूलभूत उद्देश्य कतिको महत्त्वपूर्ण छ, यो कुरा यहाँ उल्लेख गर्नु आवश्यक छैन। तर खेदको कुरा छ, यो चाड कसले कुन बखत चलाएको हो—यसको ठीक-ठीक ऐतिहासिक कुरा पत्ता लाग्न सकेको छैन। अथवा यस्तो पत्ता लगाउने दिशामा कुनै पनि व्यक्तिले तल्लीन भई अध्ययन नै गर्न सकेको छैन वा अध्ययन गर्ने अवसर नै प्राप्त भएको छैन भन्ने पनि हुन्छ। तर जहाँसम्म यस चाडको प्रकरणमा लेखिएको हाम्रो हिमवत्खण्डजस्ता धार्मिक ग्रन्थहरूको कुरा छ, यो चाड वैष्णव धर्मावलम्बी वैश्यहरूले चलाएको कुरा स्पष्ट छ। यहाँ यो कुरा विचारणीय छ कि यस्तो लोकप्रिय तथा अर्थ

गूढ चाडको रूपमा मातृतीर्थ-स्नानको महिमालाई प्रख्यापन गर्न सक्ने वैश्य कुन तहको र कुन रूपको हुन सक्दछ, यो कुरा सजिलैसग अनुमान गर्न सकिन्छ। अवश्यमेव एक दुईजना सामान्य किसिमका व्यापारीहरूको प्रयास यत्तिको लोकप्रिय हुन सक्दैन। कुनै पनि कुरा परम्पराको रूपमा चलाउन शक्तिको पनि आवश्यकता हुन आउँछ। यस प्रकरणमा आफूलाई वैश्य भनी शासकको रूपमा देखापरेका शक्तिशाली व्यक्तिहरूको देन यस मातृतीर्थ-स्नानको महत्त्वमा अन्तर्भाव भएको छ कि भन्ने कुरातिर कुनै पनि जिज्ञासुको हृदय आकृष्ट हुनु स्वाभाविक छ। किनभने स्थिति मल्लको प्रभुत्व जम्नुभन्दा पहिले उपत्यकाको जन-जीवनमा यिनीहरूको व्यक्तित्व सामन्तकै रूपमा भए पनि ज्यादै प्रभावशाली थियो। यी कुराहरूमा ऐतिहासिक दृष्टिकोणले खोजी हुन बाँकी नै छ। आमाको मुख हेर्ने अवसरमा मेला लाग्ने मातृतीर्थको ऐतिहासिक महत्व अवश्यमेव स्थिति मल्लको समयभन्दा पुरानै देखिन्छ। तर यस तीर्थस्थलको आसपास कुनै प्राचीन ऐतिहासिक वस्तुहरू भने देखिएका छैनन्। मातृतीर्थको आसपासको स्थान अवश्यमेव लिच्छवीकालदेखि बसोबास भइसकेको स्थान हो। बलम्बुतिर अद्यापि लिच्छवीकालिक शिलापत्रहरू उपलब्ध हुँदै छन्। तर मातृतीर्थलाई ऐतिहासिक दृष्टिकोणले विचार गर्न सक्ने सामानहरू भने अद्यापि दृष्टिगोचर हुन सकेका छैनन्। खोजी गर्न सके यस विषयमा धेरै महत्वपूर्ण कुराहरू जन-समक्ष आउन नसक्ने कुरा छैन। यस प्रकार आमाको मुख हेर्ने चाड हाम्रो समक्ष आउँछ। यस चाडभित्र यद्यपि विष्णुको महत्व रहेको छ तापनि सामान्यतः चाड मनाउने तरिकामा कुनै धार्मिक बन्धन नभएको हुनाले यस

चाडका सारभूत उद्देश्यलाई अगाडि राखेर यसलाई अन्तरराष्ट्रिय जगतमा लोकप्रिय बनाउन सकिन्छ। जसबाट हाम्रो इज्जत बढ्ने कुरा स्पष्ट छ।

## पौराणिक कथा

एक दिन खेल्ने, खाने लाउने विषयमा मात्र लट्ठ भएको एक वैश्य-पुत्रकी आमा मरिन्। आमाको निधनमा उ ज्यादै दुखित भएर "हे विष्णु भगवान! मेरी आमालाई देखाउन तिमी नै समर्थ छौ, आमाबिना म एकक्षण पनि जीवित रहन सक्दिन" भनी बारम्बार विलाप गर्दै रून लाग्यो। वैश्य-पुत्रको त्यस्तो विलाप सुनेर भगवान् विष्णु एक ब्राह्मणको रूप धारण गरी त्यही आइपुग्नुभयो र त्यसलाई समातेर लगी चैत्र कृष्ण चतुर्दशीका दिन मातृतीर्थमा स्नान गर्न लगाए। स्नान गरिसकेपछि त्यही कुण्डमा उनका आमालाई पनि देखाइदिए। वैश्य-पुत्र आमाको सुन्दर हर्षोत्फुल्ल भएको चेहरालाई देखेर अत्यन्त खुशी भयो र विष्णुरूपी ब्राह्मणसग प्रार्थना गर्न लाग्यो—"प्रभु! हजूरको कृपाले आज मैले मरिसकेकी आमाको दर्शन पाएँ, अब यिनीलाई घर ल्याइदिनुहोस्।" वैश्य-पुत्रको यस्तो कुरा सुनेर ब्राह्मणले भने—"वैश्य-पुत्र! यो कुरा सम्भव छैन। तर जन्मान्तरमा यही तिम्री आमा हुनेछ। यसकारण अहिले अन्न, फल, जल दिएर यिनलाई तृप्त गर।" वैश्य-पुत्रले पनि तथास्तु भनी त्यस्तै गर्दा आमा अत्यन्त हर्षित भई छोरालाई चक्रवर्ती राजा होस् भनेर वरदान दिई विलीन भइन्। वैश्य-पुत्र आमाको वरदानले साँच्चै नै मुचुकुन्द नामले प्रसिद्ध भएको राजा भए।

( हिमवत्खण्डबाट )

———

# विक्रम संवत् र बिस्केट-जात्रा

उज्जैनको विक्रमादित्यसग हाम्रो के सम्बन्ध छ, यो कुरा खोजीकै विषय छ। तथापि हाम्रा वशावलीकारहरूले धर्मदेवपछि वीर विक्रमादित्यको अलौकिक रोचक कथाहरूलाई नेपालको इतिहासमा मिलाउन ठूलो प्रयास गरेका छन्। ऐतिहासिक दृष्टिकोणले विचार गर्दा हाम्रो देशमा विक्रमादित्यले राज्य गरेको कुराको कुनै प्रमाण देखिएको छैन। तर सास्कृतिक दृष्टिकोणले विचार गर्दा अनेक रोचक किवदन्तीमा आधारित साँखुको वज्रयोगिनीको मन्दिरमा रहेको ठाउँको कडाही आदिको साथसाथ विक्रम संवत् पनि चलेको देखिन्छ। विक्रम सवत् कहिलेदेखि हाम्रो देशमा चलनचल्तीमा आएको हो, यसको निर्णय भएको छैन। लिच्छवीकालमा देखिएका दुइवटा संवत्-हरूमा एउटाचाहिं विक्रम संवत् नै हो कि भन्ने मत पनि देखिएको छ। तर यस मतलाई निर्णय गर्ने ऐतिहासिक साधनहरू भने सन्तोषप्रद ढङ्गमा जुटाउन सकेको छैन। मल्लकालमाचाहिं स्पष्ट रूपमा नै विक्रम संवत् चलन-चल्तीमा आएको छ। 'पूर्णिमा' पत्रिकाको अङ्कमा उल्लेख भएअनुसार सर्व-प्रथम धर्म मल्लको समयमा विक्रम संवत्को प्रामाणिक प्रयोग भएको देखिएको छ। त्यसपछि जितामित्र आदि भक्तपुरका राजाहरूले विक्रम सवत्लाई विशेष ढङ्गले यत्रतत्र आफ्ना शिलापत्र, ताम्रपत्र आदि अभिलेखहरूमा प्रयोग गरेका छन्। काठमाडौ उपत्यकाका तीनै शहरका मल्ल राजाहरूमध्ये भक्त-पुरका मल्ल राजाहरूले नै विक्रम संवत्लाई विशेष रुचाएको देखिन्छ। मल्ल-

कालमा विशेष महत्वपूर्ण ढङ्गले चलेको नेवारी सम्वत्को नयाँ सम्वत्सर कार्तिक महीनादेखि चले झैं विक्रम सवत्को नयाँ सवत्सर वैशाख महीनादेखि शुरू हुन्छ। हाम्रो परम्पराअनुसार नयाँ सवत्सर शुरू हुने दिनलाई चाड-पर्वको रूपमा मनाउने चलन छ। जस्तै, नेवारी सवत् शुरू हुने दिनलाई हाम्रो यहाँ तिहारमा म्हपूजाको रूपमा भव्य ढङ्गले मनाइन्छ। त्यस्तै, वैशाख महीना-मा पनि अनेक सास्कृतिक पर्वहरू देखिएका छन्। विशेष गरेर भक्तपुरवासी-हरूले विक्रम सवत्लाई चलनचल्तीमा ल्याएको हुनाले त्यस इलाकामा नयाँ सवत्सरको खुशियालीमा अनेक देव-देवीहरूको जात्रा गरेर सुख-समृद्धिको कामना गर्नु स्वाभाविक देखिन्छ। यसै प्रकरणमा भक्तपुरमा विशेष आकर्षक बिस्केट-जात्रा पनि हुन्छ। यो जात्रा त्यत्तिको पुरानो देखिंदैन। गोपाल-वशावलीजस्ता प्राचीन वशावलीहरूमा यसको उल्लेख भएको छैन। तर अर्वाचीन वंशावलीहरूमा भने बिस्केटको उल्लेख गरिएको छ। वशावलीकार-हरूको भनाइमा यो जात्रा भक्तपुरका राजा जगज्ज्योतिर्मल्लले चलाएको देखिन्छ। भक्तपुरको इतिहासमा कान्तिपुर र पाटनको इतिहासमा झैं उप-त्यकाका यी तीन राज्यहरूको विभाजनपछि देखिएको सर्वतोमुखी अन्धकार जगज्ज्योतिर्मल्लको समयसम्म पनि रहेको छ। अर्थात् यिनको पालामा के के भए यी कुराहरू यथार्थरूपमा सबै ज्ञात गर्ने ऐतिहासिक सामानहरू उपलब्ध भएका छैनन्। यस्तो स्थितिमा बिस्केटको विषयमा यथार्थ कुराहरूको अध्ययन गर्न कठिन हुनु स्वाभाविक छ। सम्भवतः भक्तपुरको तलेजुजस्ता राजकीय ढुकुटीहरूमा यस विषयलाई स्पष्ट गर्ने ग्रन्थहरू या टिपोटहरू हुन सक्दछ।

बिस्केट-जात्रामा विशेष गरेर हाम्रो इन्द्र-जात्रामा झैं लामो लिङ्गो

ठड्याउने कार्यक्रम हुन्छ । यसमा दुइवटा पताकाहरू पनि फर्फराएका हुन्छन् । यी पताकाहरू असाधारण किसिमका लामा लामा हुन्छन् । जसमा अष्टमङ्गल-का कुराहरूदेखि लिएर सारा दिक्पाल, क्षेत्रपाल आदिका प्रतीकात्मक वस्तुहरू अङ्कित भएका हुन्छन् । यस प्रकार जहाँसम्म धार्मिक ध्वजाको सवाल छ, बिस्केटको ध्वजाको अवश्यमेव वैशाख १ गतेको दिन शान्ति-स्वस्ति तथा सुख-समृद्धिको कामनाले कुनै महत्त्वपूर्ण तान्त्रिक ढङ्गको पूजा गरेको हुनु-पर्दछ । जुन कुरा ध्वजावरोहण-परम्परामा अद्यापि चल्दै आएको छ । अर्थात् हाम्रो परम्परागत धार्मिक परिपाटीअनुसार कुनै देव-देवी तथा घट-मन्दिर आदिको प्रतिष्ठा गर्दाको समारोह धार्मिक ढङ्गमा मनाउँदा त्यस विधि-विधानलाई ध्वजावरोहण-विधानको रूपमा मनाउने चलन छ । जसमा घरमा तथा छानामा ध्वजाहरू फर्फराउने चलन रहेको छ । जस्तै, भक्तपुरका राजा जितामित्रले नरेश्वर, लक्ष्मी आदिको मूर्ति स्थापना गरेको र दरबार बनाएको अवसरमा कोट्याहुति यज्ञ गरेका थिए । त्यस विषयको एक विशेष तान्त्रिक ग्रन्थ नै निर्माण भएको छ, जुन ग्रन्थ वीर पुस्तकालयमा सुरक्षित छ । यस ग्रन्थलाई ध्वजावरोहण वर्षवर्धन-विधिको रूपमा दिइएको छ । यो कुरा विचारणीय छ ।

हाम्रो परम्परागत धारणाअनुसार 'वि०' को माने नेवारी भाषामा सर्प भन्ने रहेकोले तथा बिस्केटसम्बन्धी किंवदन्ती पनि सर्पकै कथामा आधारित भएकोले खोलाको छेउमा गाडिने बिस्केटको ध्वजावरोहणले नयाँ वर्षमा सुवृष्टिको कामनामा सम्पन्न भएको धार्मिक अनुष्ठानलाई सकेत गर्दछ कि भन्ने तर्क कुनै पनि जिज्ञासुको हृदयमा उत्पन्न हुनु पनि स्वाभाविक छ ।

यस प्रकरणमा टुँडीखेलको द्वयमाजुको पनि वैशाख १ गतेकै दिन जात्रा

हुने र ती देवीको अगाडि पनि लिङ्गो गाड्ने कुरा विशेष विचारणीय छ। 'द्वयमाजु' भन्ने शब्दको जहाँसम्म सम्बन्ध छ यी देवी तिर्हुतेहरूका देवीको रूपमा देखिएको छ। किनभने हाम्रा इतिहासकारहरूले तिर्हुतेहरूलाई हाम्रोयहाँ 'द्वय' भन्ने चलेको कुरा ऐतिहासिक प्रमाणद्वारा सिद्ध गरिसकेका छन्। उपत्यकामा तिर्हुतेहरूले आधिपत्य जमाउन धेरैपटक आक्रमण गरेको कुरा हाम्रो इतिहासमा उल्लेख भएको छ। तिर्हुतेहरूको यो आक्रमणकाल प्राचीन मल्ल-काल हो। स्थिति मल्लको समयसम्म पनि भक्तपुर दरबारमा नै द्वयहरूको ठूलो प्रभाव रहेको कुरा 'पूर्णिमा' पत्रिकाको सातौं अकमा राम्ररी उल्लेख भएको छ। यस्तो स्थितिमा त्यही दिन लिङ्गो गाडी पूजा गर्ने बिस्केट-जात्राको र द्वयमाजु-जात्राको सादृश्यले वैशाख १ गतेको महत्वमा केही नयाँ कुराको सकेत दिन्छ। यस प्रकार नयाँ वर्षको शुरूमा देखिने भद्रकाली आदिको जात्राको क्रममा बिस्केटको जात्रा पनि प्रतिसाल चल्दै आएको छ। तान्त्रिक विद्वान्हरूको विशेष केन्द्रस्थल रहेको भक्तपुरका अनेक सास्कृतिक देनहरूमा यो कुरा विचारणीय नै रहेको छ।

## किंवदन्ती

कुनै एक समय भक्तपुरका सारा प्रजाहरू आफ्ना रानीकहाँ पालो बस्नुपर्ने स्थितिले भयभीत थिए। किनभने पालो बस्नजाने व्यक्ति भोलिपल्ट बिहान मृतावस्थामा पडिरहेको हुन्थ्यो। तर राजाको आज्ञालाई कसैले इन्कार गर्न सकेको थिएन। मर्नै पर्ने भए पनि भक्तपुरवासीहरू क्रमैसग रानीकहाँ पालो बस्न जाने गर्दै थिए।

एक दिन पालो बस्ने दिन एक वृद्ध दम्पतिको घरमा आइपुग्यो। त्यस घरमा दुइजना बूढाबूढीबाहेक अरू कोही थिएन। पालो बस्न जाने

कुराले तिनीहरू ज्यादै दुखित थिए । वास्तवमा मर्नुपर्ने कुराले दुखित हुनु पनि स्वाभाविकै हो । यत्तिकैमा एक परदेशी त्यस घरमा बास बस्न आइपुग्यो । त्यस परदेशीले बूढाबूढीहरूको आपत-विपत्का सबै कुरा सुनेर आज पालो बस्ने काम म गर्दछु भनेर हातमा एक तलवार लिएर हिड्यो । रानीको महलमा पालो बस्ने व्यक्तिको मृत्यु कसरी हुन्छ भनेर उ ज्यादै सतर्क भएर रहन थाल्यो । केही क्षणपछि मध्यरातमा पलङ्गमा सुतिरहेकी रानीको नाकको दुवै प्वालबाट दुइवटा कालसर्पहरू भयानक रूप धारण गरी निस्कन लागेको उसले देख्यो र आफ्नो म्यानबाट तलवार झिकेर ती दुवै सर्पहरूलाई टुक्राटुक्रा गरी काटिदियो । भोलिपल्ट बिहान पहिले-पहिले झैं पालो बस्ने व्यक्ति मरेको हुनुपर्दछ भनी दाहक्रिया गर्न राजदरबारका मानिसहरू हेर्न जान्छन् त पालो बस्ने व्यक्ति मजासंग रानीको नगीच बसेर कुरा गर्न लागिरहेको देखेर आश्चर्यचकित भए । यो कुरा सुनेर राजा अत्यन्त हर्षित भएर परदेशीलाई ठूलो मान सम्मान गरी नगरमा ठूलो उत्सव मनाए । वास्तवमा यो दिन भद्रकालीको पूजा गर्ने वैशाख १ गतेको दिन थियो । पछि वि० अर्थात् सर्प मारिएको दिनको पर्व-दिन भएको हुनाले यो दिन 'वि०स्यात' भन्ने नाउँले प्रख्यात् भयो ।

———

# आर्यावलोकितेश्वर र मत्स्येन्द्रनाथ एकै व्यक्ति होइनन्

पाटनको रातो आर्यावलोकितेश्वरलाई र कान्तिपुरको सेतो आर्यावलो-कितेश्वरलाई पनि हाम्रोयहाँ मत्स्येन्द्रनाथ भन्ने लोकधारणा रहेको छ। वास्तवमा यो धारणा गलतजस्तो देखिन्छ। किनभने आर्यावलोकितेश्वर र मत्स्येन्द्रनाथ एकै व्यक्ति या ईश्वर होइनन्। यो कुरा विचारणीय छ।

आर्यावलोकितेश्वरका अनेक पर्यायवाची नामहरू छन्। जस्तै—करुणामय, लोकेश्वर आदि आदि। करुणामय बौद्ध-धर्मभित्र पूज्य देवताको रूपमा देखा परेता पनि बुद्धझैं यिनी ऐतिहासिक व्यक्ति होइनन्। जब अलौकिक बुद्धलाई परमात्माको रूपमा कल्पना गरेर बौद्ध-दार्शनिकहरूले पनि आफ्ना अनुयायीहरूलाई चित्त बुझाउन सुखावती भुवनको रूपमा भिन्नै स्वर्गको कल्पना गर्न थाले तब स्वर्गमा राज गर्ने अनेक देव-देवीहरूको क्रममा आर्यावलोकिते-श्वरको पनि सृष्टि भएको छ। कारण्ड व्यूहजस्ता ग्रन्थहरूमा लोकेश्वरको महिमा ज्यादै उत्कृष्ट ढङ्गले गाइएको छ।

हाम्रो देशमा लोकेश्वरको मूर्ति-पूजा गर्ने परम्परा प्राचीन लिच्छवीकालदेखि चलेको देखिन्छ जसको उदाहरणका लागि धरहरा, ढोकाबहाल आदि ठाउँमा रहेका लिच्छवीकालिक लोकेश्वरका मूर्तिहरू, तथा जयदेव आदिले लोकेश्वरको चर्चा गरेका शिलापत्रहरू विशेष दर्शनीय छन्। ललितपुरस्थित रातो मत्स्येन्द्र-नाथको नाउँले प्रसिद्ध भएको लोकेश्वर पनि लिच्छवीकालिक मूर्ति नै हुन्

भन्ने वंशावलीकारहरूको भनाइ छ । यो लिच्छवी राजा नरेन्द्र देवले स्थापना गरेका हुन् भन्ने किंवदन्ती छ । वास्तवमा नरेन्द्र देव साँचै बुद्धमार्गी थिए । यिनको समयमा नेपाल आएका प्रसिद्ध चिनिया यात्रीले नरेन्द्र देवको कमर-पेटीमा बुद्धको मूर्ति देखेको कुरा हाम्रो इतिहासका ग्रन्थहरूमा पनि उल्लेख भएको छ । यसबाट नरेन्द्र देव बौद्धधर्ममा झुकेका थिए भन्ने कुरामा शंका गर्ने ठाउँ छैन । यस्तो स्थितिमा एक बौद्धधर्ममा विश्वास गर्ने व्यक्तिले बुद्धधर्मका लोकप्रिय देवताको स्थापना गर्नु कुनै अनौठो कुरो र अयुक्तिसंगत कुरो थिएन ।

श्री ५ पृथ्वीनारायण शाहको समयका एक प्रसिद्ध कवि सुन्दरानन्दले पाटनस्थित लोकेश्वर को हुन्, कसका देवता हुन् भन्ने प्रकरणमा अनेक रोचक कुराहरू लेखेका छन्, जस्तै–"यस लोकेश्वरलाई कोही विष्णु भन्दछन् त कोही शिव भनी पूजा गर्दछन् । शाक्तहरूको दृष्टिमा यो कतै कालीको रूपमा देखा पर्दछ त कतै ताराको रूपमा व्यक्त हुन आउँछ । यस प्रकार कसैले यसलाई सूर्य भनी पूजा गर्दछन् त कसैले गोरखनाथका गुरू मत्स्येन्द्रनाथ भनी मान्दछन् ।" सुन्दरानन्दका यी वाक्य उनको काव्यमा उल्लेख भएको छ । वास्तवमा पाटनको रातो मत्स्येन्द्रनाथ सबै धर्मावलम्बीहरूका पूजाको पात्र हुनमा यही लोकधारणा रहस्यको कुरा बनेको छ । हाम्रा वंशावलीहरूमा लोकेश्वरलाई धर्मराजको नाउँमा स्थापना गर्ने कुरा पनि उल्लेख भएको छ । यस प्रकार लोकेश्वरको वास्तविक स्वरूप के हो भन्ने कुराको यथार्थतामा पुग्न यी सब कुराहरू ज्यादै महत्त्वपूर्ण रहेका छन् ।

कान्तिपुर केलटोलस्थित सेतो मत्स्येन्द्रनाथ भनी प्रसिद्ध रहेको लोकेश्वर कसले कुन वेला स्थापना गरेको हो, यो कुरा ऐतिहासिक दृष्टिले

निर्णय हुन सकेको छैन । किंवदन्तीअनुसार यो जमलको खेतमा पाइएको भन्ने ज्ञात भएको छ । यस लोकेश्वरको वार्षिक पूजा-क्रममा अद्यापि जमलको खेतमा काम गर्ने कृषकहरू हुनु अत्यावश्यक मानिएको छ । यस लोकेश्वरलाई स्त्री-पुरुषको एकात्मक भावमा आराधना गर्ने हाम्रो धार्मिक परिपाटी रहेको छ । यसकारण मूर्तिमाथि चित्रण विधान गर्नुपर्ने देवता भएका हुनाले हरेक साल महास्नान गरेर अर्थात् राम्ररी धोएर सफा गरी नयाँ नङ्गहरू लगाएर दशकर्म विधानहरू पुऱ्याएका हुन्छन् । यस्तो स्थितिमा लोकेश्वर भन्ने देवता कुन ढङ्गको अलौकिक तत्त्वमा रँगिएका छन् भन्ने कुरा यहाँ उल्लेख गर्नु आवश्यक छैन ।

आजसम्म उपलब्ध भएका ऐतिहासिक साधनहरूको आधारमा मत्स्येन्द्रनाथको जन्मस्थल कामरूप मानिएको छ । यिनी एक माझीको घरमा जन्मेका थिए । पछि सबै घरबार छोडी यिनी बौद्ध-दर्शनका प्रकाण्ड विद्वान् जालन्धरका शिष्य बने । कालान्तरमा माझी भएको हुनाले यिनी मत्स्येन्द्रनाथको नाउँले नै ठूला सिद्ध बने । यिनले लेखेका चारवटा पुस्तकहरू उपलब्ध भएका छन् । जस्तै—कौलज्ञान निर्णय, अकुलवीर तन्त्र, कुलानन्द, र ज्ञानकारिका । यी ग्रन्थहरू कलकत्ता सस्कृत सिरीजबाट प्रकाशित भएका छन् । ऐतिहासिक साधनहरूको अधारमा मत्स्येन्द्रको समय बाह्रौं शताब्दी मानिएको छ । यिनको समाधि भारतस्थित सतारा जिल्लामा रहेको छ भन्ने कुरा बौद्ध-ग्रन्थहरूमा उल्लेख भएको छ । त्यहाँ हरेक साल वैशाख कृष्ण पञ्चमीको दिन मत्स्येन्द्रनाथको जात्रा हुन्छ । यस प्रकार बाह्रौं शताब्दीको एक बज्रयानी सिद्ध मत्स्येन्द्रनाथको विषयमा खोजी भएको छ । यिनका बाबू मीननाथ हुन् । यिनी पनि छोरा झैं सिद्ध भएका छन् । यसप्रकार एकातिर अलौकिक

आर्यावलोकितेश्वरको महिमा रहेको छ त अर्कोतिर ऐतिहासिक व्यक्ति मत्स्येन्द्रनाथ हाम्रा समक्ष देखापरेका छन्। यस्तो स्थितिमा पाटनको रातो आर्यावलोकितेश्वरलाई मत्स्येन्द्रनाथ भनी अभेद सम्झनु कहाँसम्म उचित छ पाठकहरूले स्वयं विचार गरून्। जहाँसम्म सत्य कुराको सवाल छ आर्यावलोकितेश्वरलाई मत्स्येन्द्रनाथ भनी अभेद मान्नुमा मुख्य कारण मत्स्येन्द्रनाथको देन हाम्रो बौद्धसमाजमा विशेष रोचक हुनु हो। अन्यथा एक ऐतिहासिक व्यक्ति ईश्वरीय तत्त्वमा विलीन हुने कुरा थिएन। यो कुरा बुझ्नु अत्यावश्यक छ।

हाम्रो किंवदन्तीअनुसार नरेन्द्र देवले पाटनको रातो आर्यावलोकितेश्वरलाई कामरूपबाट मन्त्र साधना गरेर ल्याएका थिए भन्ने कुरा बुझिएको छ। वास्तवमा यो कुरा मत्स्येन्द्रनाथ कामरूपका भएको हुनाले उपरोक्त लोकेश्वरलाई मत्स्येन्द्रनाथ भन्ने हाम्रो धारणा रहेको हुनाले त्यस्तो किंवदन्ती बन्न गएको देखिन्छ। अन्यथा बाह्रौं शताब्दीको मत्स्येन्द्रनाथलाई सातौं शताब्दीका नरेन्द्र देवले कामरूपबाट ल्याएर स्थापना गर्ने कुरा युक्तिसंगत हुन आउँदैन।

हाम्रो देशमा पाटनको रातो लोकेश्वर र कान्तिपुरको सेतो लोकेश्वरको रथजात्रा परम्पराअनुसार अद्यापि चल्दै आएको छ। रथ पूर्णतया बौद्धदर्शनकै प्रतीकस्वरूप बनाइन्छ। पाटनमाचाहिं वैशाख शुक्ल प्रतिपदाको दिनदेखि अलि अलि गरेर तान्ने कार्यक्रम हुन्छ, तथा कान्तिपुरमाचाहिं चैत्र शुक्ल अष्टमीको दिनदेखि रथजात्राको प्रारम्भ हुन्छ। यी रथजात्रालाई हाम्रो उपत्यकामा ठूलो श्रद्धा तथा भक्तिले मनाइन्छ। पहिलो रथजात्राचाहिं माथि उल्लेख भएको सतारा जिल्लाको मत्स्येन्द्रनाथको समाधिस्थानको

रथजात्राकै महीनामा परेको छ, तथा अर्कोचाहिं रथजात्रा वि० स० को पाँचौ शताब्दीतिर भारत आएका कान्तियानले वर्णन गरेको पाटलीपुत्रको बुद्धको रथजात्राकै दिन परेको छ। यसबाट हाम्रो देशमा मत्स्येन्द्रनाथ भनी प्रख्यात भएका लोकेश्वरको रथजात्रा कुन वस्तुस्थितिमा आधारित भएको छ भन्ने कुरा स्पष्ट हुन आउँछ। पाटनमा मत्स्येन्द्रनाथको जात्राको क्रममा मीननाथको पनि रथजात्रा गर्ने परम्परा रहेको छ। बाबु-छोराको एकसाथ जात्राको क्रममा देखिनु ज्यादै युक्तिसगत र उपरोक्त मत्स्येन्द्रको इतिहासलाई औल्याउने विषय बनेको छ। यस प्रकार मत्स्येन्द्रनाथ रूपको लोकेश्वरको विषयमा केही ऐतिहासिक कुरा हाम्रा समक्ष आउँछन्।

## पौराणिक कथा

एक दिन एक ब्राह्मणीले बालक जन्माइन्। त्यो बालक खराब दिनमा जन्मेको हुनाले त्यसलाई समुद्रमा फ्याँकियो। त्यो बालक समुद्रमा फ्याँकिए तापनि मरेन। माछाको पेटभित्र बसेर त्यो बढ्दै गयो। एक दिन महादेवले यो कुरा थाहा पाएर त्यस बालकलाई बाहिर निकालिदिए। बालक अत्यन्त खुशी भयो। माछाको पेटबाट निस्केको हुनाले त्यस बालकको नाउँ मत्स्येन्द्र-नाथ भन्ने रह्यो।

( स्कन्दपुराणबाट )

———

# भोटो देखाउने जात्रा

रातो मत्स्येन्द्रनाथ हाम्रो सास्कृतिक परम्पराअनुसार केही दिन पाटनमा र केही दिन बुङ्गमतीमा राखिन्छ। रथजात्रा सकिएपछि चार दिनसम्म जाउलाखेलमा राखेर भोटो देखाउने विधि-विधानहरू सम्पन्न भएपछि लोकेश्वरलाई बुङ्गमतीमा ल्याइन्छ। बुङ्गमतीको अर्को नाउँ अमरावती हो। हाम्रो सस्कृत साहित्यमा अमरावती इन्द्रको पुरीको रूपमा देखिएको छ। यस्तो स्थितिमा सुखावती भुवनको रूपमा आफ्नो भित्रै स्वर्गको कल्पना गर्ने उहिलेका बौद्ध-दार्शनिकहरूले लोकेश्वरलाई स्वर्गको देवताको रूपमा आराधना गरेको हुनाले हाम्रा महालोकेश्वरको मुख्य वासस्थान बुङ्गमतीलाई अमरावतीकै रूपमा साकार गर्नु कुनै आश्चर्यको कुरा छैन।

लोकेश्वरलाई बुङ्गमती लैजाने अवसरमा कान्तिपुर, भक्तपुर तथा ललितपुरका सबै नरनारीले विदाईको अभिवादन गर्ने अवसरमा लोकेश्वरको भोटोको दर्शन गर्ने जुन परम्परा रहेको छ त्यो ज्यादै महत्त्वपूर्ण मानिन्छ। वास्तवमा रत्न जडेको भोटो कुन वेला कसले लोकेश्वरको प्रीतिका लागि चढाएको हो यो कुरा यथार्थरूपमा ऐतिहासिक दृष्टिकोणले ज्ञात भएको छैन। तथापि किंवदन्तीअनुसार यो बहुमूल्य भोटो एक चोरले चढाएको कुरा देखिन आउँछ। सम्भवतः चोरीको यो बहुमूल्य वस्तु कहीं बेच्न या किन्न कसैले साहस गर्न नसकेको हुनाले विक्षुब्ध हृदय भएको व्यक्तिले लोकेश्वरलाई विदाई गर्ने अवसरमा सबैलाई देखाएर अर्पण गरेको हुन सक्दछ। जसको परम्परा अद्यापि चल्दैछ।

# किंवदन्ती

एक दिन टौदहको नागराजा कर्कोटककी प्रियतमा आँखाको रोगले पीडित भएकी थिइन्। उनको पीडाले विक्षुब्ध हृदय भएका नागराजा आँखे वैद्यको खोजीमा निस्के। बाटोमा एक किसान आँखे वैद्यको रूपमा फेला पऱ्यो। निजलाई फकाई फुल्याई आफ्नो घर टौदहभित्र लगे। वैद्यराजले पनि आँखाको राम्रो परीक्षा गरी औषधि गरिदिए। केही दिनमा नै आँखाको रोग निको भयो। नागराजा अत्यन्त खुशी भएर निज वैद्यको मनसायअनुसार हीरा-मोती जडिएको एक भोटो उपहारस्वरूप वैद्यलाई प्रदान गरियो।

एक दिन त्यो किसान वैद्य त्यही बहुमूल्य भोटो लाएर खेत खन्दै थिए। काम गर्दागर्दै गरम भएको हुनाले त्यो भोटो फुकाएर त्यही एक ठाउँमा राखे। त्यो कुरा एक चोरले हेरिरहेको थियो। आखिर किसानको आँखा छलेर त्यसले चोरेर लग्यो।

लोकेश्वरको दक्षिणायन हुने दिन थियो। सारा व्यक्तिहरू जाउला-खेलमा भेला भएका थिए। त्यहाँ बदमाश चोरहरूले हुलदङ्गा गरेको हुनाले बदमाशहरूलाई पक्रेर एक ठाउँमा थुनिराखेको थियो। ती बदमाशहरूमध्ये बहुमूल्य भोटो चोर्ने चोर पनि थुनिएको थियो। अकस्मात् त्यस व्यक्तिमाथि लोकेश्वरको दर्शनका लागि आएका किसान वैद्यको आँखा पऱ्यो। उनले आफ्नो भोटो लाएको त्यस चोरलाई देख्ने-बित्तिकै पक्रन थाले र आफ्नो भोटो लिन कोशिश गर्न लागे। तर चोरले त्यो भोटो ज्यान गए पनि दिन स्वीकार गरेन। यत्तिकैमा मनुष्यरूपधारी कर्कोटक पनि त्यहाँ आइपुगे। उनले पनि त्यो भोटो आफैले किसान वैद्यलाई

दिएको हुनाले भोटो फिर्ता गर्न लगाउन बलको प्रयोग गर्न थाले, तर कुनै हालतमा पनि त्यस चोरले त्यो भोटो फिर्ता दिन मञ्जूर गरेन। किन्तु उसले त्यो भोटो परमेश्वर लोकेश्वरलाई नै चढाइदिने इच्छा गऱ्यो। चोरको यस इच्छालाई कसैले इन्कार गर्न सकेन। आखिर त्यहीं त्यो बहुमुल्य हीरा-मोती जडिएको भोटो सबैलाई देखाएर ईश्वरलाई अर्पण गरिदियो।

( करूणामय महात्म्यबाट )

------

# बुद्ध एक मानिस तथा देवताको रूपमा

उहिले हाम्रो तराईको प्राचीन नगर कपिलवस्तुमा शाक्यहरूको गणराज्य थियो। कपिलवस्तु बुटवलमा पर्दछ। यही गणराज्यमा बुद्धको जन्म भयो। यिनका पिताको नाउँ शुद्धोदन र माताको नाउँ महामाया थियो। बुद्धको जन्म ठीक विक्रम संवत्भन्दा ५०५ वर्षपहिले वैशाख पूर्णिमाको दिन लुम्बिनीमा भएको थियो। लुम्बिनीलाई उहिले रुक्मिन्देही भनिन्थ्यो, जुन बुटवल जिल्लामा नै पर्दछ। भगवान् बुद्धको जन्मस्थलको विषयमा हाम्रो कर्णाली प्रदेशका प्राचीन मल्लकालिक राजा रिपु मल्लको समयसम्मका जनताले थाहा पाएको कुरा 'पूर्णिमा' पत्रिकाको ६ अंकमा उल्लेख भएको' छ। तर पछि बुद्धको जन्मस्थल कहाँ पर्दछ भन्ने कुरा मानिसहरूले बिर्सन थाले। वि० स० १९५१ सम्म पनि यो कुरा अज्ञातै रह्यो। आखिर चिनिया यात्रीको वर्णनको आधारमा बुद्धको जन्मस्थल लुम्बिनीको यही ठाउँमा भएको हो भनी एक विदेशी फुरहर नामक व्यक्तिले उस वेलाको पाल्पाको शासक भई बसेका श्री खड्ग शमशेरको सहायताले पत्ता लगाए। बुद्ध जन्म भएको ठाउँमा अशोकले स्थापना गर्न लगाएको एक विशाल स्तम्भ पनि गडिएको छ। जुन स्थान अहिले राम्ररी जीर्णोद्धार गरी सुरक्षित बनाएको छ।

बुद्ध जन्मेको केही दिनपछि नै महामायाको स्वर्गवास भयो। यस्तो स्थितिमा बाल्यकालदेखि नै मातृवियोगले बुद्धको हृदय दुःखित हुनु स्वाभाविक छ। बुद्धको नाउँ सिद्धार्थ भन्ने रहेको छ। सिद्धार्थको विवाह यशोधरासग भयो। तिनीबाट एक बालक पनि जन्मे। यिनको नाउँ राहुल राखियो।

उन्नाइस वर्षको उमेरसम्म बुद्धले आफ्नो जीवन पूर्णतया गृहस्थीको रूपमा बिताए। त्यसपछि विरक्त भएर घर-बार, राज-पाट सब छोडेर यिनी ज्ञानको खोजीमा निस्के। अराल कलाम आदि त्यस वेलाका विद्वान्हरूकहाँ गएर बुद्धले अध्ययन गर्न थाले। त्यस्तो दार्शनिक अध्ययनबाट उनको चित्त शान्त भएन। उनले शरीर सुक्ने अनेक तपस्याहरू पनि गरे। त्यताबाट पनि उनको मन सतुष्ट भएन। आखिर बुद्धगयामा बसेर सोच्दासोच्दै ससारको केही वास्तविक कुरा उनको मनमा खेल्न थाल्यो। अनि सिद्धार्थको मनमा केही शान्ति हुन थाल्यो। वास्तवमा बुद्धगयामा बसेर केही सासारिक कुराको वस्तुस्थितिबाट परिचित हुन सकेकोले नै सिद्धार्थलाई यहीं बुद्धत्व प्राप्त भएको हो भन्ने जन-धारणा रहेको छ। यो दिन ४७१ वि० पू० को वैशाख पूर्णिमा-को दिन हो। यस वेला बुद्ध ३५ वर्पका भइसकेका थिए।

यसपछि बुद्धले आफ्नो ज्ञानको कुरा जनसमाजमा आएर व्यक्त गर्न थाले। विस्तार-विस्तार उनको विचार जनसमाजमा प्रचार हुँदै गयो। बुद्धको विचारलाई बहुसख्यक जनताले रुचाउन थाले। उनको पछिपछि लाग्ने अनेक शिष्यहरू बने। वैदिक कुराको अनेक अव्यावहारिक रितिस्थिति तथा आचार-विचारमा विश्वास नगर्ने प्राणीमात्रमा दयाको भावले हेर्ने, आदि कुरामा अत्यन्त विश्वास गर्न थाले। बुद्धले आत्माको विषयमा हुने शुष्क वादविवाद-लाई रुचाएनन्। म को हूँ, यस ब्रह्माण्डको रचना कसरी भएको छ, मृत्यु के हो, र मृत्युपछि के हुन्छ आदि दार्शनिक पक्षका तर्कवितर्कहरूमा पनि बुद्धले आफ्नै मत प्रतिपादन गरी परम्परागत धारणामा एक नयाँ क्रान्ति ल्याइ-दिए। मानवजीवन दुःखमय छ। यस दुःखबाट सदाको लागि मुक्त हुन पुनर्जन्म नै हुनु नपर्ने स्थितिमा जानु अत्यावश्यक छ भनी निर्वाण नै आफ्नो

अभीष्ट विषय बनाएको कुरा कसैले इन्कार गर्न सकेन। बुद्धले धर्मोपदेश दिन संस्कृत भाषालाईभन्दा पाली भाषालाई विशेष मन पराउँथे। पाली भाषा उस वेलाको जन-भाषा हो। यस प्रकार हरेक कुरामा आफ्नो मौलिकता देखाएर अत्यधिक लोकप्रिय भएर अस्सी वर्षको उमेरमा बुद्ध निर्वाण हुनुभयो। यो समय ४२६ वि० पू० को थियो। यो दिन पनि वैशाख पूर्णिमाकै दिन थियो। यस प्रकार जन्म, मरण तथा बुद्धत्व प्राप्त गरेको दिन सयोगवश वैशाख पूर्णिमाकै दिनमा परेको हुनाले बौद्ध-धर्मावलम्बीहरूको निमित्त यो दिन ज्यादै महत्त्वपूर्ण रहेको छ।

वास्तवमा बुद्ध स्वय मानिस भएको हुनाले उनको जीवनकालमा जति कुराहरू भए ती सब मानवीय ढङ्गमा नै उत्रेका छन्। बुद्धले कहिलेकाही आफ्नो कुरा साधारणसे साधारण जनताको हृदयमा पनि बोधगम्य बनाउने कुराको प्रसगमा कथाहरू भन्ने परिपाटी चलाएका थिए। जसबाट पछि बुद्धका विषयमा अलि भ्रम पर्न गएको देखिन्छ। तर जहाँसम्म मानवताको सवाल छ बुद्धको एक-एक मानवीय विचार उनको त्रिपिटकमा स्पष्ट झल्केको छ। यस कारण एक मानव, तर ठूला विद्वान् तथा दार्शनिक-को हैसियतले बुद्धलाई चिन्नुछ भने त्रिपिटकको अध्ययन गर्नु अत्यावश्यक छ। त्रिपिटकमा विनयपिटक, सुत्तपिटक, र अभिधर्मपिटकको नाउँ आउँछ। विनयपिटकमा आचारका कुराहरू परेका छन्। सुत्तपिटकमा बुद्धले सुनाएका कुराहरू धर्मोपदेशमा समावेश भएका छन्। तथा अभिधर्म पिटकमा सुत्तपिटककै कुरालाई विशेष व्याख्या गरेर निर्माणको विषयको कुरा लेखिएको छ।

बुद्ध निर्वाण भएको केही शताब्दीसम्म पनि उनको व्यक्तित्व एक

मानवकै रूपमा विकसित हुँदै गयो। तर पछि हुँदाहुँदा भावुक जनताले बुद्धको मानव-व्यक्तित्वलाई स्वीकार गर्न सकेन। उनी एक अलौकिक परमात्माको रूपमा व्यक्त हुन थाले। बुद्धलाई अलौकिक सम्झनेहरूले बुद्धको धर्मलाई अलौकिक ढङ्गमा स्वीकार गरेता पनि कठोर ब्रह्मचर्यको नियमलाई पालना गर्नुपर्ने आवश्यक ठानेनन्। यसबाट अधिक जनता यस नयाँ बुद्धधर्मको मार्गमा आकृष्ट हुन थाले। पछि यसैबाट महायान, वज्रयानको नाउँले अलौकिक बुद्ध तथा उनको भिन्नै आराधना गर्ने साधनहरू देखापर्न थाले। बुद्धको विषयमा देखिएको भिन्नाभिनै विचारधारालाई एक रूप दिई महायानको सज्ञा दिने व्यक्तिहरूमा प्रथम नागार्जुनको नाउँ विशेष विचारणीय रहेको छ। महायान शून्यवादमा आधारित भएको छ। शून्यता अभेद्य र अछेद्य रहेको हुनाले नै यसलाई वज्रसमान मानी वज्रयानको नाउँले पुकार्ने गरेको छ। वज्रयानभित्र मन्त्रवादलाई विशेष प्रभावशाली ढङ्गमा लोकप्रिय बनाउने श्रेय मन्जुश्रीलाई दिइएको छ। किनभने अलौकिक बुद्धको नाउँमा उनले सर्वप्रथम मन्त्रप्रधान मञ्जूश्री मूल कल्प नामक ग्रन्थको निर्माण गरेका थिए। यस प्रकार वज्रयानभित्र साधनाको विविध रूपलाई लिएर गुह्यसमाज नामक ग्रन्थको पनि निर्माण भयो। [यसपछि सिद्धहरूको युग आउँछ। जुन सिद्धहरूले हिमालयको टुप्पादेखि कन्याकुमारीतक तथा तिब्बत, चीन आदि अनेक पूर्वीय देशहरूमासमेत वज्रयानी सिद्धान्तमा अद्भुत भएका बौद्धधर्मलाई घुमीघुमी प्रचार गरेका थिए।

अलौकिक बौद्ध-धर्ममा आस्था राख्ने सिद्धहरूको संख्या धेरै छन्। त्यसमध्ये चौरासी सिद्धहरूको नाउँ विशेष उल्लेखनीय छ। बौद्ध-धर्मको साहित्यको भण्डारलाई भरिपूर्ण गर्नमा यी सिद्धहरूको देन विशेष महत्वपूर्ण

रहेका छन्। यिनीहरूले हजारौ मौलिक ग्रन्थहरूको निर्माण गरेका छन्। केवल सिद्ध नागार्जुनको मात्र अन्ठाउन्न संख्यासम्मका ग्रन्थहरूको रचना गरेको कुरा हाम्रो समक्ष छ। तर दुर्भाग्यवश मुसलमानी आक्रमण तथा वैदिकवादी कट्टर व्यक्तिहरूको वैमनस्यताको कारण कुनै समय धेरै बौद्ध-ग्रन्थहरू भारतबाट विलीन भएका थिए। यस्तो स्थितिमा बौद्ध-धर्मको महत्त्व क्रमशः क्षति हुनु स्वाभाविक छ। यदि बुद्धको जन्मस्थल नेपाल तथा बुद्धधर्म नै एकमात्र राजधर्म रहेको तिब्बतजस्ता देशहरूमा उपरोक्त सिद्धहरूका कृतिहरू तथा बुद्धधर्मका भित्रै अरू मौलिक ग्रन्थहरूको सग्रह नभएको भए आज बुद्धधर्मको महत्ताको विषयमा हाम्रो ज्ञान ज्यादै सीमित हुने थियो, यसमा शका छैन। हाल बुद्धधर्मसम्बन्धी जति ग्रन्थहरू प्रकाशित भएका छन् त्यसमध्ये अधिकांश ग्रन्थहरू तिब्बतको तन्जूर र कन्जूर सग्रह तथा हाम्रो वीर पुस्तकालय, राष्ट्रिय पुस्तकालयजस्ता संग्रहालयहरूबाट उपलब्ध भएका छन्। अद्यापि हाम्रा पुस्तकालयहरूमा अनगिन्ती यस्ता अप्रकाशित पुस्तकहरू छन् जुन पुस्तकहरू बुद्धको लौकिक तथा अलौकिक व्यक्तित्वबाट परिचित हुन ज्यादै महत्त्वपूर्ण रहेका छन्। यस प्रकार शून्यवादको साँचोमा ढालिएको बुद्धको अलौकिक रूप बुद्धको वास्तविक ऐतिहासिक व्यक्तित्वभन्दा अधिक प्रभावशाली भएको छ।

हाम्रो देशमा विशेष गरेर काठमाडौ उपत्यकामा बुद्धधर्मको प्रचार हुँदा बुद्धको अलौकिक रूप नै विशिष्ट रूमा लोकप्रिय रहेको थियो यसकारण हाम्रो लिच्छवीकालदेखि बुद्धधर्मको रूपमा जुन प्रतिमाहरू देखिएका छन् ती सबै अलौकिक बुद्धको अंशांशबाट उत्पन्न भएका छन्। मूर्तिपूजालाई मन नपराउने बुद्धको स्वयं मूर्ति नै यहाँ हाम्रो पूज्य रहेको छ। मद्य, मांस, मैथुन, आदिमा

घृणा गर्ने लौकिक बुद्धको विचारलाई, मद्य,मास, मैथुन आदिमा आस्था राख्ने अलौकिक बुद्धको सृष्टि गरेर जनधारणालाई भिन्नै दिशामा प्रवृत्त बनाइएको छ। साधनाको लागि विभिन्न बौद्ध विद्वानहरूले सृष्टि गरेका लगभग साढे तीनसयजति अलौकिक बौद्धधर्मभित्रका देव-देवीहरूका मूर्ति-चित्रहरू हाम्रो विशेष ढङ्गले घर-घरमा पूज्य बनेका छन्। शैवहरूलेसमेत् बुद्धको व्यक्तित्व-लाई आफ्नो धर्ममा विलीन गर्ने विष्णुका दश अवतारहरूमध्ये एक अवतारको रूपमा अन्तर्भाव गरेका छन्। वास्तवमा हाम्रो देशमा बुद्ध धर्मको जुन विविधता देखिएको छ त्यस्तो विविधता शायद अन्यत्र दुर्लभ होला। आज एकातिर पुरातत्त्व विभागबाट बुद्धको ठीक-ठीक ऐतिहासिक वस्तुहरूको अन्वेषणको लागि लुम्बिनी, कपिलवस्तु, आदि स्थानहरूको उत्खनन गरी अध्ययन गर्दैछ त अर्कोतिर प्रज्ञोपायको शून्यतामा विचरण गरी निर्माणको दावी गर्ने बौद्धहरू आफ्नो आफ्नो कृयाकाण्डहरूमा दिनरात तल्लीन भएको पनि हामी देख्दछौं। यो एक विचित्र कुरा छ। यस प्रकार वैशाख पूर्णिमाको दिन हाम्रो समक्ष बुद्धको मानवीय व्यक्तित्व र दैवीय व्यक्तित्वको सगम भएको स्थितिमा व्यक्त हुन आउँछ। यो कुरा हामी नेपालीमात्रले आफ्नै देशको एक सुपुत्रको विषयमा सोच्दा सदा तटस्थ भएर विचार गर्नु आवश्यक छ। अस्तु।

---

# सिठीको महत्त्व

सिठी एक वर्षा ऋतुको शुभारम्भमा मनाउने चाड हो। यसकारण वर्षा-ऋतुमा हुने सबै गतिविधिलाई ध्यानमा राखेर यो चाड मनाइन्छ। इनार, कुवाँ, पोखरी, आदि निश्चल स्थानको पानी पिउनुपर्नेहरूले हाम्रो सांस्कृतिक परम्पराअनुसार सिठीको दिन यी स्थानहरूको सफाइ गर्दछन्। पानीबिना आफू जीवित रहन नसक्ने हुनाले पानीको प्रतीक स्वरूपको मूर्ति नागराजाको पूजा गर्दछन्। उनलाई मन पर्ने वस्तु भनी पारो आदि द्रव्य पानीमा खसालि-दिन्छन् र सफाइको लागि चून हलदिन्छन्। वास्तवमा वर्षाऋतुको अन-वरत वर्षाले इनार, कुवाँ, पोखरी आदि स्थानमा पानी बढेर फोहर हुने हुनाले वर्षाऋतुको आरम्भमा नै यस्ता स्थानहरूको स्वास्थ्यको दृष्टिले सफाइ गर्ने सामूहिक प्रयास घरघरमा धारा जडान गर्ने अहिलेको जमानामा महत्त्वहीनजस्तो देखिए तापनि उहिलेको जमानामा अवश्यमेव ठूलो महत्त्वको कुरा थियो।

पानी पर्न थालेपछि घर-मन्दिरहरूको मरमत गर्ने कुरा पनि सम्भव हुँदैन। तथा वर्षाऋतुको शुरूमा नै घर-मन्दिरहरूको मरमत सम्भव हुन सकेन भने पानी चुहिएर भत्कने, मक्किने आदि हुने कुरा स्वाभाविक छ। यस्तो स्थितिमा समयमा नै घर-मन्दिरहरूको मरमत गर्नु-पर्ने कुरा स्वयंसिद्ध छ। यही हेतु हाम्रो सांस्कृतिक परम्पराअनुसार सिठी-सम्ममा आफ्ना आफ्ना घर-मन्दिरहरूको मरमत गर्ने कुरा अनिवार्य झैं रहेको छ। सार्वजनिक पौवापाटी र घर-मन्दिरहरूको मरमत गर्ने कामचाहि सबै मिलेर गर्ने हुनाले यस्तो कुरा सिठीमा चलाउनुपर्ने गुठीहरूको रूपमा

देखिएका छन्। यस प्रकरणमा वि० सं० १५१० को यक्ष मल्लको समयको शिलापत्रमा उल्लेख भएको सिठीसम्बन्धी कुरा यहाँ विशेष उल्लेखनीय छ। जस्तै, उहिलेको जमानामा भक्तपुर शहर एक किल्लाको रूपमा निर्माण भएको थियो। शहरको वरिपरि सबभन्दा बाहिरी घेरामा खाडल खनिएको थियो। त्यसभित्र अग्ला अग्ला परखालले घेरिएको थियो। अनि परखालभित्र ठाउँठाउँमा चौकीहरू बस्दथे। यी किल्ला-रूपको परखाल र पानी भरिएको खाडलको बीच बीचमा मरमत गर्ने काम ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र आदि सबै वर्गका जातिले मिलेर आफ्नो आफ्नो इलाका हेरी काम गर्नुपर्दथ्यो। यदि देशरक्षाको दृष्टिले निर्माण भएका यस्ता ठाउँहरूको मरमत गर्ने काममा कसैले उपेक्षा गर्‍यो भने ती व्यक्तिहरू दण्डका भागी हुन्थे। यी सब कुराहरू उपरोक्त यक्ष मल्लको शिलापत्रमा उल्लेख भएका छन्। जुन कुराको चर्चाक्रममा खाडलहरूको, परखालहरूको मरमत गर्ने काम हाम्रो सिठी-चाडसम्ममा सम्पन्न गर्नुपर्ने कुरा स्पष्टसग उल्लेख भएको छ। यसबाट हाम्रो वर्षाको शुभारम्भमा मनाइने चाड सिठीको महत्त्व कस्तो रहेछ भन्ने कुरा स्पष्ट हुन आउँछ। वास्तवमा सिठीसम्बन्धी लौकिक कुराहरू हिजो आजका जनताले बिर्सिसकेका छन्। तथापि देशरक्षा, स्वास्थ्य-रक्षा, र आत्म-रक्षा आदि अनेक महत्त्वपूर्ण कुराहरूले सारगर्भित भएको सिठीको हाम्रो सांस्कृतिक परम्परालाई कदापि हामी बिर्सन सक्दैनौं।